# भानुभक्त-स्मारक ग्रन्थ




सम्पादकगण—

पूर्वार्ध—

श्री सूर्य विक्रम ज्ञवाली

उत्तरार्ध—

श्री तुलसी बहादुर छेत्री

श्री जगत छेत्री

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# भानुभक्त-स्मारक ग्रन्थ

(मृत्यु भएको १०० वर्ष पुगेको उपलक्ष्यमा प्रकाशित)

[संशोधित र परिवर्धित संस्करण]

सम्पादक—

पूर्वार्ध : श्री सूर्य विक्रम ज्ञवाली, बी०ए०, बी०टी

उत्तरार्ध : श्री तुलसी बहादुर छेत्री, एम०ए०, साहित्य विशारद

र

श्री जगत छेत्री, बी०ए०, बी०टी०




प्रकाशक—

**नेपाली साहित्य सम्मेलन,**

दार्जीलिङ।

२६ आषाढ़, २०२६

Vedic Archives Digital Preservation Foundation, Chandigarh

प्रकाशक—

मंत्री,

नेपाली साहित्य सम्मेलन,

दार्जीलिङ।

प्रथम संस्करण : १९९७—१००० प्रति

द्वितीय संस्करण : २०२६—२००० प्रति

मोल चार रुपियाँ

मुद्रक—

श्री नगेन्द्र मणि प्रधान,

मणि प्रिण्टिङ हाउस,

दार्जीलिङ।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# विषय-सूची

[ पूर्वार्ध ]



Vedic Archives Digital Preservation Foundation, Chandigarh

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# विषय-सूची

[ उत्तरार्ध ]



Vedic Archives Digital Preservation Foundation, Chandigarh

# भूमिका

## [ पूर्वार्ध ]

हाम्रा जातीय कवि भानुभक्तको स्वर्गवास भएको सत्तरी वर्ष पुगेका उपलक्ष्यमा दार्जीलिङ्को नेपाली साहित्य सम्मेलनले प्रकाश गरेको यो स्मारक-ग्रन्थ उनको महान् गौरव सुहाउँदो नभए तापनि यो उनका स्मृतिमा हामीले चढ़ाएको भक्तिको फूल हो, श्रद्धाको जल हो तथा कृतज्ञताको अर्घ्य हो। हामीसँग त्यस्ता महात्मालाई चढ़ाउने योग्य अरू कुरा के छ र? हामी गरीब औ शक्तिहीन छौं। स्वयं भानुभक्तले लाएको साहित्य-तरुको बिउ भर्खर टुसाउन लागिरहेछ। यस्ता अवस्थामा भानु-भक्तका संझनामा हाम्रा माया र श्रद्धाको आँसु, मुटुको गाँठो र ढुकढुक तथा भक्तिको नमस्कार मात्र अर्पण गर्न सक्छौं।

कवि, आशा छ, तिमी यसमा सन्तोष गरौला। नीचातिनीच ठानिएकी भिल्लिनी शवरीको जुठो बैरमा प्रसन्न हुने भगवान् रामचन्द्रका तिमी भक्त थियौ। उस्तै सानो माझीका विशुद्ध प्रेमले रिझी उसलाई पाउ धुन दिई चरणामृत खान दिने भक्तवत्सल भगवान्को गाथा तिमीले लेखेका छौ। तिमीलाई चढ़ाएको यो हाम्रो दरिद्रताको उपहार, अज्ञानको भेटी तथा निर्वलताको परिणाम कसो स्वीकार नहोला?

कवि, यसलाई स्वीकार गरी हामीलाई धन्य गराऊ। समय आउँदैछ, छिटै आउँदैछ, जब हामी तिमीलाई सुहाउने औ तिम्रो गौरवको अनुकूल उपहार चढ़ाउन सक्नेछौं। अहिलेलाई हाम्रा भक्तिको पत्रं पुष्पं-मा नै सन्तोष गर।

आज हाम्रा हर्षको सीमा छैन। आज हाम्रा मनमा आनन्दका लहरी उर्लंदैछन्। आज हाम्रा आँखाबाट हर्षका आँसु बगिरहेछन्। किन? आज हामीले हाम्रा जातिका एक जना महान् लोकोपकारक महात्माको यशगान गर्न पाएका छौं, आज हामी हाम्रा जातिका एक जना महावीरका जीवन कथा स्मरण गर्न लागेका छौं तथा आज हामी हाम्रा जातिका एक जना ठूला कर्मवीरको दर्शन गर्न लागेका छौं। ती महात्माका चरित्रबाट हामीले जीवन, शक्ति तथा तेज ग्रहण गर्नुपर्छ। त्यो हामीले गर्न सक्यौं भने मात्र भानुभक्तको साँचोको स्मारक हामी बनाउन सक्नेछौं। त्यो स्मारकका तुलनामा भौतिक पदार्थहरुद्वारा बनाइएका

Vedic Archives Digital Preservation Foundation, Chandigarh

स्मारकको के मूल्य? हामीले बल गर्नुपर्‍यो त्यही स्मारक बनाउन। मातृ-भाषाका सेवाले, ज्ञानका प्रचारले अनि चरित्रका विकाशले। त्यो स्मारक हामी बनाउन सक्छौं। नेपालीहरू हो, आओ, थालौं, त्यो बलियो स्मारक बनाउन। थालौं, मातृभाषालाई सर्वाङ्ग सुन्दर तुल्याउने प्रयत्न गर्न। थालौं, मातृभाषाद्वारा भानुभक्त झैं सर्वसाधारणमा ज्ञान प्रचार गर्न। ज्ञान नै शक्ति हो, बल हो, अन्धकार नाश गर्ने ज्योति हो।

भानुभक्तले बजाएको मातृभाषाका सेवाको दुन्दुभि के अझ तिमीले सुनेका छैनौ? सुनेका भए किन चुपलागी बसेका? उठ, थाल, केही गरिहाल। मातृभाषाका सेवाको सङ्कल्प गर औ काम गर्न लागिहाल।

भानुभक्तरूपी जाज्वल्यमान् सूर्यका प्रकाशमा पनि तिमीले कर्तव्य-पथ पहिल्याउन सकेनौ भने कहिले सकौला? भानुभक्तका पदचिह्न समयका बालुवामा हेर्दै सोही बाटो हिंड्न सकेनौ भने तिमीबाट के होला? भानु-भक्तको अर्ती रूपी अमृत पान गरेर पनि तिमी बीर हुन सकेनौ, मातृभाषाका सेवक हुन सकेनौ औ अमर हुन सकेनौ भने तिमीलाई जगत्‌ले के भन्ला?

भानुभक्त नेपाली जातिका एक जना बीर पुरुष थिए भन्ने कुरा ता उनका ग्रन्थका प्रचार र लोकप्रियताद्वारा पूर्णतया प्रमाणित भै सकेको छ। उनको यो महत्ता हामी देख्न र बुझ्न सक्तैनौं भने दोष हाम्रो छ किनभने वादलले एक ठाउँ ढाक्तैमा सूर्यको प्रकाश छैन भन्न हुँदैन औ भ्रम र अज्ञानले नराम्रो देखाए भन्दैमा भानुभक्त नराम्रा थिए भनी कसरी भन्नू? भानुभक्त राम्रा थिए, ठूला थिए, तेजस्वी थिए र तिनै कारणले ती सबै गुणमा बाउन्ने जस्ता हामीहरूले भानुभक्तको गौरव अझ बुझ्न सकेका छैनौं। तर समयले हामीलाई आँखा दिनेछ, जाँच्ने शक्ति दिनेछ औ बुझ्ने बुद्धि पनि दिनेछ। उहांपछि भानुभक्तको अदार हामी गर्नेछौं औ उनको महत्व बुझ्नेछौं।

नेपाली भाषा प्रकाशिनी समितिको आफ्नो व्याकरण-नियम निर्धारित छ। अरू व्याकरणलाई समितिले आपत्ति गर्दछ। नेपाली साहित्य सम्मेलनले व्याकरण विषयको लेखनप्रणालीमा आफ्नो कुनै मत निर्धारित गरेको छैन। यस कारणले व्याकरणका विषयमा विद्वान् लेखक-हरूलाई पूर्ण स्वतन्त्रता दिने सम्मेलनको नीति छ तापनि यो स्मारक ग्रन्थ एकै व्याकरण अनुसार तथा आफ्नो (समितिको) व्याकरणबमोजिम

Vedic Archives Digital Preservation Foundation, Chandigarh

छाप्नू भन्ने नेपाली भाषा प्रकाशिनी समितिको आशय बमोजिम धेरै कुराको विचार गरी सम्मेलनले सो आशयलाई स्वीकार गरेको छ।

विद्वान् लेखकहरूलाई व्याकरणका विषयमा स्वतन्त्रता दिने सम्मेलनको नीति हुँदा नेपाल र नेपाल बाहिरका अनेक बिद्वान् लेखकहरूले आफ्ना आफ्ना व्याकरण अनुसार यो स्मारक ग्रन्थका निमित्त लेखहरू लेखिपठाउनु भएको थियो। ती लेखहरूको व्याकरणमा किञ्चित् परिवर्तन नगरी तिनलाई छाप्न पाएको भए नेपाली साहित्य सम्मेलनलाई बड़ो सन्तोष हुने थियो। तर सो कुरा केवल यो ग्रन्थमा हुन नसकेको हुँदा सम्मेलन उहाँहरूसँग क्षमा प्रार्थना गर्दछ औ आशा गर्छ, भानुभक्तका निमित्त सो त्याग विद्वान् लेखकहरूलाई स्वीकृत होला।

भानुभक्तका विषयमा हामी नेपालीहरूमा चर्चा अभावले गर्दा अझ धेरै अज्ञान छ। यो भानुभक्त-स्मारक ग्रन्थले हाम्रा जातीय कविका विषयको त्यो अज्ञान अलिकता भए पनि निवारण गर्‍यो वा उनका जीवनीको अध्ययन गर्न हामीलाई उत्साहित गर्‍यो भनेदेखि यसलाई प्रकाश गर्न गरेको प्रयत्न सफल हुने थियो।

—सम्पादक।

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# भूमिका

## [ उत्तरार्ध ]

हाम्रा जातीय कवि भानुभक्तको स्वर्गवास भएको एक सय वर्ष पूर्ण भएको यो वर्ष हो। नेपाली जगत्मा भानुभक्तको जन्म जयन्ती बड़ो धूमधामले मनाई नेपाली भाषा र साहित्यलाई भानुभक्तले दिएको अनुपम उपहारको श्रद्धा र भक्तिले संझना गरिँदैछ। यो हाम्रो परम कर्तव्य हो भन्ने कुरा केवल विद्वानहरूले मात्र होइन तर नेपाली जनसाधारणले पनि बुझिदिएकोमा हामीलाई सन्तोष छ। मृत्यु शत-वार्षिकीको उपलक्ष्यमा दार्जीलिङको नेपाली साहित्य सम्मेलनले भानुभक्त-स्मारक ग्रन्थको संशोधित र सम्बर्धित संस्करण मात्र होइन, तर उत्तरार्ध पनि थपी भानुभक्तलाई यो पुष्पार्घ चढ़ाउन पाउँदा आफैंलाई धन्य ठानिरहेछ। जुन पवित्र उद्देश्य-ले प्रेरित भएर वि० सं० १९९७ तदनुसार सन् १९४० मा भानुभक्तको मृत्यु भएको ७० वर्ष पुगेको उपलक्ष्यमा नेपाली साहित्य सम्मेलनले भानुभक्त-स्मारक ग्रन्थ प्रकाश गरी नेपाली जनसाधारणमा भानुको प्रचार गरेथ्यो त्यो आज सफल भएको बुझिन्छ। आज भानुभक्त सारा नेपाली जनता-मा मात्र होइनन् तर विश्वका अन्य भाषा-भाषीमा पनि प्रख्यात हुनगएका छन् औ सबैमा भानुभक्तलाई राम्ररी चिन्ने इच्छा र अभिलाषा जागि-सकेको छ। यो भानुभक्तमा रहेको महान् गुणको आकर्षण हो। भानुलाई हामीले महान् पारेको होइनौं, न त वीर-पूजा गर्न पाएनौं भनेर तिनको थपना नै गरिएको हो। भानु त आफ्नै प्रकाशले पूजनीय र श्रद्धाका पात्र हुन गएका छन्।

पहिले त नेपाली साहित्य सम्मेलनले यो भानुभक्त-स्मारक ग्रन्थ दुइ भागमा प्रकाशित गर्ने विचार गरेको थियो, तर पुनर्विचार र धेरै शुभ चिन्तकहरूको सल्लाहले यस ग्रन्थलाई पूर्वार्ध र उत्तरार्ध गरी एउटै पुस्तकको रूपमा प्रकाशित गर्ने कार्य गरियो। सम्मेलनले 'दियालो' पत्रिका-मा भानु सम्बन्धी लेख पठाउन भनी दिएको सूचनाअनुसार नेपाल र नेपालबाहिरबाट निकै लेखहरू जम्मा भए—यद्यपि नेपालबाट हामीले आशा गरेअनुसार लेखहरू पाएनौं। कार्यालयमा आएका जम्मै लेख-हरूमा छानिएका कति उपयुक्त लेखहरूलाई पनि स्थानाभावले यस ग्रन्थमा समावेश गर्न नसकेकोमा सम्मेलन दुःख प्रकट गर्दछ।

उत्तरार्धमा पर्नगएका रचनाहरूले भानुभक्तका कृतिहरूमाथि विशेष रूपले प्रकाश पार्नसकून् भन्ने दृष्टिकोणले प्रेरित भएर नै सम्पादन कार्य गरिएको छ। उत्तरार्धको सम्पादन कार्यको भार 'दियालो' सम्पादक मण्डलीको निम्ति हामी दुइ जनाले ग्रहण गरेका छौं। सम्पादन कार्यमा

Vedic Archives Digital Preservation Foundation, Chandigarh

संलग्न रहँदा हाम्रो मनमा विशेष रूपले दुइ चार कुराहरू आउनगए—ती हुन्

(१) भानुभक्तको जीवनमाथि आजसम्म हुनुपर्ने जति खोज भएको छैन।

(२) भानुभक्तको कृतिमाथि पनि उचित समालोचनाको अभाव नै रहेको छ।

(३) आदिकविको पक्ष र विपक्षमा पनि सन्तोषजनक तर्कको आजसम्म अभाव नै रहेको छ।

यी अभावहरू सधैंभरि रहनेछैनन र एक दिन भानुभक्त र उनका कृतिहरू विषय विज्ञ र आलोचनात्मक रचनाहरू हाम्रो सामू देखा पर्नेछन् भन्ने हाम्रो दृढ़ विश्वास छ। सरकारी स्तरमा औ भाषा र साहित्यका संस्थाहरूले यी कार्यहरू इमान्दारीपूर्वक आफ्नो हातमा लिई नेपालभित्र औ बाहिरका विद्वानहरूलाई छात्रवृत्ति वा अरू सुविधा दिई आह्वान गरे यी अभावहरू चाँड़ै पूर्ण हुने थिए। अचेल नेपाली भाषा र साहित्यका र उत्साही अन्वेषकहरूको खाँचो छैन। उनीहरूले उचित मौका र उत्साह पाए निःसन्देह नेपाली भाषा र साहित्यको प्रगतिले तीव्र गति लिने थियो। यस कार्यकोनिम्ति हामी नेपाल र भारत सरकारको ध्यान आकर्षित गर्न चाहन्छौं।

पश्चिम बंगाल सरकारले नेपाली भाषालाई सरकारी भाषाको रूपमा मान्यता दिई आफ्नो कर्तव्य पुरा गरे झैं यहाँका विश्वविद्यालय —विशेष गरी, कलकत्ता र उत्तर बंगाल विश्वविद्यालयले पनि नेपाली साहित्यको सम्मानार्थ नेपालीमा एम० ए० औ क्रमशः भानु-पीठ (Bhanu-Chair) लाई राखी शीघ्रातिशीघ्र मान्यता दिइयोस् भन्ने हाम्रो निवेदन छ।

श्री सूर्य विक्रम ज्ञवालीले खोजी गर्नुभएको भानुभक्तीय रामायण-को बालकाण्डको नवीन पाठले भानुभक्तीय रामायणको शुद्ध रूप निकाल्नमा निश्चय पनि ठूलो सहायता गर्नेछ। ज्ञवालीज्यूले यसतर्फ गर्नुभएको काम प्रसंशनीय छ। बालकाण्डको नवीन पाठमा उहाँले खोजी गरी भेट्नुभएको दुइ चार शब्दको उल्लेख यहाँ नगरी रहन सकिँदैन।

श्लोक २ मा 'कली बखतमा' को सट्टा नवीन पाठको 'उस बखत्' धेरै युक्तिसंगत देखिन्छ। श्लोक १५ को 'लिन्या' भन्दा 'दिन्या' अधिक उपयुक्त देखिन्छ। कारण प्रथम पुरुषमा 'हरि लिन्या' उपयुक्त भए झैं अन्य पुरुषमा 'हरि दिन्या' नै उपयुक्त हुँदछ। नवीन पाठको श्लोक २५ मा 'हेलैले तरि पार जान्छ दुनियाँ खोलसैसरीको गनी' पुरानो पाठभन्दा सहज, सरल र पहाड़ी जीवनको अनुकूल भएको छ। श्लोक ३८ को 'आत्मानात्म परात्म भेद् बुझिलिन्या गर्नू सदा काम् पनी।', श्लोक १३३ को 'उही म लिउँला', श्लोक १३४ को 'तत्व पनी सबै' औ श्लोक १३५ को 'गरी तहाँ' युक्तिसंगत र सुगम भएको छ। यस्तो खोजपूर्ण

Vedic Archives Digital Preservation Foundation, Chandigarh

लेखले भानुभक्तका रचनाको भानुभक्तीय रूप हाम्रो अघि ल्याउन धेरै सहायता गर्नेछ।

यसरी नै श्री बालकृष्ण समको 'भानुभक्तको शैली'-मा भानुभक्तीय नेपाली-प्रयोग देखाई, भानुभक्तलाई अर्कै दृष्टिकोणले हेर्ने काम गरिएको छ। फेरि डा० कमला सांकृत्यायनको 'कवि भानुभक्तको रामायणमा अद्वैतवाद'-ले भानुभक्तले पाएका परम्परागत धार्मिक विचारमाथि राम्रो आलोक-पात गर्नसकेको छ। त्यसबाहेक अरू लेखकहरूमा पनि नवीन दृष्टिकोणले कविजीलाई हेर्ने प्रयास भएको छ।

सम्मेलनको यस प्रकाशनले भानुभक्तको चर्चालाई अझ बढ़ाई उनको जीवन र रचनामाथि उचित अध्ययन र अन्वेषण-कार्य गर्नमा नेपाली भाषा र साहित्य-प्रेमीलाई किञ्चित् पनि उत्साहित पारे हाम्रो प्रयत्न सफल भएको ठान्नेछौं।

'विन्ती एक म गर्दछू सुन प्रिये! प्रीती निरन्तर् रहोस्
ताहाँको मन पीञ्जरा म मुनियाँ यै चाल् सदा काल् रहोस्।'

२९ आषाढ़, २०२६ ---सम्पादक।
दार्जीलिङ।

---

# धन्यवाद ज्ञापन

हाम्रा जातीय कवि भानुभक्त आचार्यको मृत्यु शत-वार्षिकीको उपलक्ष्यमा नेपाली साहित्य सम्मेंलनद्वारा प्रकाशित भानु-स्मारक ग्रन्थको उत्तरार्धमा लेख वा कविता प्रदान गरी सम्मेलनले उठाएको यस ऐतिहासिक कार्यमा सहयोग दिने विद्वान्हरूलाई म नेपाली साहित्य सम्मेंलनको तर्फबाट हार्दिक धन्यवाद निवेदन गर्दछु।

यस बाहेक भानुभक्त र मोतीरामका विभिन्न ब्लकहरू निःशुल्क दिई औ प्रुफ संशोधन गर्ने जटिल भार आफूले जिम्मा लिई यो स्मारक ग्रन्थ निर्धारित समयमा प्रकाशमा ल्याउन पूर्ण सहयोग दिनुभएकोमा श्री नगेन्द्र मणि प्रधान, मणि प्रिण्टिङ हाउस, दार्जीलिङलाई पनि धन्यवाद ज्ञापन गर्छु।

अमृता छेत्री,
उप-सभानेत्री,
नेपाली साहित्य सम्मेलन,
दार्जीलिङ।

२९ आषाढ़, २०२६
दार्जीलिङ।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

भानुभक्तको हस्ताक्षर

जगन्मात्रे नमोनमः॥ १८॥ अतीव देवदेवेशि
कृपया परया सदा॥ अभीष्ट फल सिद्ध्यर्थं कु
रुष्व माधवप्रिये॥ ॥इति तुलसी पूजा समाप्ता॥
शुभं भूयाल्लेखक पाठकयोः श्रीभानुभक्तत्रा
मैराणा पठितेन सम्वत्॥ १९१४ आश्विन
पौर्णमास्याम्॥ राधा दामोदरः प्रीयताम्॥ ६॥



आदिकवि भानुभक्त आचार्य

'भारती'-को सौजन्यले प्राप्त ब्लक ]

Vedic Archives Digital Preservation Foundation, Chandigarh



दार्जीलिङको चौरस्ता-स्थित
आदिकवि भानुभक्त आचार्यको सालिग

'भारती'-को सौजन्यले प्राप्त ब्लक ]

Vedic Archives Digital Preservation Foundation, Chandigarh

१

# भानुभक्त-स्मारक ग्रन्थ

## ( पूर्वार्ध )

### श्रद्धाञ्जलि

[ कवि लेखनाथ पौड्याल, नेपाल । ]

भाषाको दिव्य शैलीमय दृढ़ जगमा रामको सच्चरित्र
पक्की गारो बनाई उपर गजुरमा भक्ति राखी पवित्र ॥
हाम्रो साहित्यको यो महलकन खड़ा गर्नमा अग्रगण्य
उत्साही भानुभक्त प्रिय कविवर हुन् लोकसम्पूज्य धन्य ॥

---

### सन्देश

सगुण स्वरूप भगवान् श्री रामचन्द्रको पवित्र चरित्र व्याख्यान भएको अध्यात्म रामायणलाई सरल नेपाली भाषामा श्लोकबद्ध गरी उतारी रामरस फैलाउने कवि भानुभक्ताचार्य नेपाली भाषाका आदिकवि हुन् भने पनि हुन्छ, त्यस्ता चिरस्मरणीय व्यक्तिको स्मारक ग्रन्थ नेपाली साहित्य सम्मेलनले प्रकाश गर्न लागेको बहुतै बढ़िया हो।

श्री३ जुद्ध शम्शेर।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# सहानुभूति

यद्यदाचरति श्रेष्ठस्तत्तदेवेतरो जनः ।
स यत्प्रमाणं कुरुते लोकस्तदनुवर्तते ।।

कुनै महापुरुषको प्रशंसा र उपासना व्यक्तिगत सेवा होइन, जातीय तथा राष्ट्रीय सेवा हो। तसर्थ अहिले साहित्य सम्मेलनले कवि भानुभक्ताचार्यको स्मारक चिह्न खड़ा गर्न खोज्नु, निज कविको व्यक्तिगत सेवा ठहराउन्न, सारा नेपालीको गौरव बढ़ाइएको भन्ने ठान्दछु। एक तनहुँको ब्राह्मण, एक ज्ञानवृद्ध, छन्दमग्न कविको कदर होइन नेपाली जाति मात्रको, नेपाली राष्ट्र मात्रको आदर गरिएको संझन्छु।

जुन व्यक्तिले हाम्रो भाषालाई अस्तित्व दियो, जुन पण्डितले हाम्रो ग्रन्थलाई प्रकाश दियो, जुन लेखकले हाम्रो पहाड़ी बोलीलाई स्पष्टता र सरलता दियो त्यो मृत महापुरुषको आत्माले आज के देखिरहेछ? उसका हजारन उपासक र भक्तहरूले एक स्वरमा, एक शैलीमा, एक भावमा आफूलाई श्रद्धाञ्जलि चढ़ाइरहेछन्, भक्तिमाला पहिराइरहेछन्, प्रेमोपहार वर्षाइरहेछन्। यो सुयोग्य कुरालाई मेरो अनुमति या सहानुभूति दिन्छु भन्नु मेरो धृष्टता होओइन ?

श्रीमृगेन्द्र शम्शेर
डाइरेक्टर जेनरल आफ् पब्लिक इन्स्ट्रक्शन,
नेपाल ।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# श्रद्धाञ्जलि

भारतीभवन,
ढोका टोल, नेपाल।
१९९५ कार्तिक २४

प्रिय !

कवि भानुभक्तको सम्बन्धमा एउटा लेख दिने बारेमा लेखेको १७-९-३८ को पत्र पाएँथें। तर भूकम्पपीड़ितोद्धारक संस्थाको विशेष काममा लागेकोले पत्रोत्तर दिन केही विलम्ब हुन गयो।

नेपाली साहित्य संस्थाहरूबाट आफ्ना यशस्वी कविको कदर प्रकट गर्ने प्रयत्न हुनु असल हो। श्लोकमय नेपाली सरल भाषाद्वारा नेपालीहरूका घरघरमा पवित्र धार्मिक रामचरित्रको सन्देश पुराई नेपाली आदिकविकै समान सम्मान पाएका भानुभक्त कविको प्रकाश प्रायः सबै नेपालीका हृदयमा परिरहेकै हुनाले उनका विषयमा फेरि त्यसभन्दा बढ़ी प्रकाश मबाट कति पुग्न सक्ने होला र? त्यसैले जातीय कवि भानुभक्तलाई मेरा तर्फको केवल श्रद्धाञ्जलि छ।

मातृभाषाभक्त—
**हेमराज शर्मा**
डाइरेक्टर आफ् पब्लिक इन्स्ट्रक्शन,
( संस्कृत विभाग )

---

# भानु !

[ श्री वालकृष्ण शम्शेर जङ्ग वहादुर राणा, नेपाल। ]

सानैमा भानु, मेरो सरल हृदयको भावको सिन्धुलाई
निद्रामा घच्घचाई हदतक यसको माथि सोसी उड़ाई
रुन्चे वर्षा सिकायौ शुभ हरिपदको जो त्यसैले विशेष
मेरो यो अश्रुविन्दुप्रति टलवल भैं नाच्छ तिम्रो प्रकाश !

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# महात्मा भानुभक्त

## मीर सुब्बा राममणि आचार्य दीक्षितको पत्र

श्रीमान् मंत्रीजी,

नेपाली साहित्य सम्मेलन, दार्जीलिङ।

महाशय,

तपाईंको १७-८-३८ को पत्र पाएँ, समाचार बुझें। मेरा निमित्त यो तपाईंहरूको कृपा हो, यस कृपाका निमित्त अनेक साधुवाद।

तपाईंहरूको उपक्रम—श्रीमान् आचार्य भानुभक्तजीका जीवनीसँग सम्बन्ध राख्ने यथोपलब्ध विषयबाट एउटा विशेषांक सम्मेलनपत्रिकाको निकाल्ने कुरा बहुत राम्रो कुरा हो। यसको स्वागत सबैले हृदयैदेखि गर्नुपर्दछ, गर्ने पनि छन्। हामी नेपाली समाज मात्र उक्त महानुभावका प्रति पूर्णतया ऋणी छौं, किनभने जसका कृपाबाट श्रीरामनामको महिमा, सुमधुर वाक्‌विन्यासले र थरी थरीका भावसन्निवेश गरी आफ्नी मातृ-भाषामा गान गर्न पाइने सुअवसर पाउन सकेका छौं, अथवा उहाँबाट सुमधुर शब्दमा रामायणको गान गरिदिनुहुँदा उहाँका साथ साथै पूर्व मेची पश्चिम महाकालीतकका पठित अपठित, सज्जन मूर्ख, स्त्री बालक वृद्ध-हरूसमेतले समकालमा हर्षातिरेकका साथ रामनाम गानको ठूलो सौभाग्य लुटिरहेका छन, लूट्न पाएका छन्, त्यसले गर्दा कविवरजीबाट पठित अपठित सबैमा मातृभाषाप्रेम पनि बढ़ाइदिनुहुँदा मातृभाषाका प्रचारमा पनि एउटा साह्रै ठूलो सहायता थपिदिनुभयो। मातृभाषाका उपरमा यो साह्रै ठूलो लाभ छ। तसर्थ यस्ता प्रातःस्मरणीय पवित्रकीर्ति भएका महान् विभूति कविवरको यथोपलब्ध पवित्र चरित्रचित्रणले मातृभाषा-कलेवरको श्रीवृद्धि गर्ने तरफको विचार साह्रै नै स्तुत्य हो। हालमा तपाईंहरूबाट सोही कुराको उठान भै आउँदा त्यस्तो सुन्दर र उपयोगी उपक्रम अनुमोदन गर्ने सौभाग्य पाउनु पनि आफूलाई धन्यतामानो संम्झनुपर्दछ। यस्तो शुभानुष्ठानको विचार पनि विना प्राक्तनीय पुण्यशेषले आउन सक्ने होइन। अतएव तपाईंहरू पुण्यात्मा हुनुहुँदो रहेछ। अस्तु

आचार्यकुलशिरोमणि श्रीमान् भानुभक्त एक साधु र महान् व्यक्ति विशेष हुन्। उनी आफ्नै प्रकाशले आफै झलमल्ल प्रकाशित छन् तापनि

Vedic Archives Digital Preservation Foundation, Chandigarh

जसका कृपाबाट नेपालीय समाजले मातृभाषा प्रचारका साथ साथै आफ्नो हृदयान्तर्वर्ती अन्धकारलाई हटाई त्यस ठाउँमा भावुक भव्य विचारधाराको ओत प्रवाहित गर्न पाउने साधन उपलब्ध गर्न सकेको छ। त्यस्ता स्वनामधन्य स्वतः प्रकाशमान् भगवान् श्रीसूर्यनारायण सरीका प्रतापी हाम्रा ऋषिवरको बखान कसका निमित्त कल्याणकारी र सन्मार्गदर्शक हुन सक्नेछैन। यही उच्च उद्देश्यलाई लिई त्यस्ता पवित्रतम पूज्यपाद व्यक्तिको यथोपलब्ध गाथा संग्रह गरी सर्वसाधारणको पहुँचको नजीक पुर्‍याइदिनु पनि आफ्ना उपरमा रहेको ऋणको बोझा हलका गराउनु हो भन्ने संझी यो उठान उठाउने त्यस सम्मेलनका अधिकारीवर्ग पनि उत्तिकै धन्यवादार्ह छन्।

मेरा बारेमा—त्यहाँहरूबाट यो पनि मातृभाषाभक्त एउटा तुच्छ सेवक हो भन्ने नाताले जो संझिन गएँ, त्यस्तो उपयुक्त पात्र आफू हुन सकेको छैन भन्ने संकोचका साथ तपाईंहरूको आभारी छु। मेरो उपरमा यो ठूलो अनुग्रह हो। तर ज्ञान, साधन, लेखनशक्तिमा आफ्नो पहुँच पुग्न नसकेको र त्यस तरफ आफ्नो परिमितताको साक्षात् इयत्ता देख्ने मैले त्यति ठूलो जातीय गर्वको ज्वलन्त शुभ्र-विशुद्ध-तेजोविशिष्ट प्रभाले शिर खड़ा गरी स्थिर समान भावले आफ्नो प्रकाशबाट संसारैलाई चकाचौंध पार्ने अभिराम महिमाशाली हिमालय समानका 'रामायणगायक महर्षि'-को गाथा जुटाउने प्रयासमा अघि सर्नु साह्रै गहारो कुरो हो। बाउन्नेले आकाशगामी अन्तःसार परिपूर्ण नरिवलको फल टिप्न खोज्नु जस्तै उपहासास्पदमा पुग्नुपर्ला कि भन्ने डर छ। तसर्थ सम्मेलनबाट भएको कृपापूर्ण आदेश यथावत् परिपालन गर्न नसकेकोमा करबद्ध क्षमा प्रार्थना गर्नु सिवाय अरू केही वक्तव्यांश मसँग छैन। अतएव यसमा सज्जनवृन्दहरूबाट उपेक्षा भावले सम्मानित हुने आशा राखेको छु।

किं बहुना

घटस्थापना
१९९५
नेपाल

भवदीय,
राममणि आ० दी०

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# भानुभक्त श्रद्धाञ्जलि

[ पण्डित धरणीधर शर्मा कोइराला, बी० ए०, बी० टी०, दार्जीलिङ । ]

नेपाल कोकिल, कलाविद, रामभक्त,
आबाल वृद्ध वनिता कवितानुरक्त,
पारेर देशकन वाग्विभवादि दान,
गर्दै महापुरुष, प्राण दियौ महान ॥ १ ॥

तिम्रा उदारमनमा कविता उदायो,
नेपालको हृदय फर्फरि फर्फरायो,
अज्ञान वैरि सबका घटको डरायो,
दन्केर ज्ञान शुचि बेसरि भर्भरायो ॥ २ ॥

नेपालपाल र प्रजा सब एकनास,
आनन्दपूर्वक पढ़ी तव वाग्विलास,
पाखण्ड खण्डन गरी मन पारि दङ्ग,
भर्छन् सदा हृदयमा रसिला उमङ्ग ॥ ३ ॥

भाषा प्रचार गरि देश विषे फिंजाई,
निःस्वार्थ रामप्रति भक्ति दिई जगाई,
नाना विभक्त जन जो अविभक्त पारी,
सेवा गर्‍यौ अटल यो गनिनेछ भारी ॥ ४ ॥

हे भानुभक्त, अनुरक्त छ जाति सारा,
तिम्रा सुधा सरि मिठा पढ़ि वाक्य धारा,
तिम्रा मिठा मधुर काव्यकला निमित्त,
आजन्म देश रहनेछ कृतार्थचित्त ॥ ५ ॥

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# श्रद्धाञ्जलि

[ श्री गुरु प्रसाद मैनाली, वीरगंज। ]

उन्नाइसौं शताब्दीका आरम्भमा नेपालका तनहूँ जिल्लाको रमघा गाउँमा पवित्र ब्राह्मणकुलमा एउटा पुण्यवान् बालकको जन्म भयो। यिनै बालक भानुभक्तले पछि आफ्नो युवा कालमा नेपाली भाषामा सात काण्ड रामायण रचना गरेर नेपाली समाजको ठूलो कल्याण गरे। त्यस वेला-सम्म नेपाल देशमा पवित्र रामकथा यसरी फैलिएको थिएन। कोही संस्कृत पढ़ेका विद्वान्हरू मात्र रामकथा जान्दथे। कविवर भानुभक्तले भाषा रामायण रचना गरेपछि हिन्दूधर्मको यो पुण्य गाथा नेपाल राज्यमा घर घर फैलियो। यो पुण्यात्मा कविका कृपाले आज नेपाल देशका पूर्वदेखि पश्चिमसम्मका आवाल वृद्ध वनिता सबै जना रामकथा जान्दछन्। ब्राह्मण, क्षत्रिय, वैश्य, शूद्र सबैका घर घरमा रामचर्चा सुनिन्छ। पहाड़ी प्रान्तका साउँ अक्षर-सम्म चलेका अर्धशिक्षित ग्रामीणहरूले पनि राती आटमा दीयो राखेर कनी कुथीकन लेग्रो पसारेर रामायण पढ़ेको देख्ता हृदय गद्गद् हुन्छ।

कविवर भानुभक्त नेपाली भाषाका आदिकवि हुन्। नेपाली भाषाका पद्य साहित्यको निर्माण यिनैबाट भएको देखिन्छ। भानुभक्तीय रामायण लेखिनुभन्दा पहिले नेपाली भाषामा कुनै प्रख्यात ग्रन्थ रचना भएको देखिँदैन। सोह्रौं शताब्दीमा उत्तर भारतमा रामचरितमानसको रचना गरेर कविकुलशशि तुलसीदासजीले जुन पुण्यको प्रचार गरे सो पुण्य कवि-वर भानुभक्तले पनि गरे। भानुभक्त नेपालका तुलसीदास हुन्। काव्यका दृष्टिले रामचरितमानस एउटा देदीप्यमान ग्रन्थ मानिएको छ। भानुभक्तीय रामायण मानस झैं ललित तथा आलङ्कारिक छैन तापनि संस्कृतका क्लिष्ट शब्दहरू नराखी सीधा साधा ग्रामीण भाषामा लेखिएको हुनाले साह्रै सरल र सुबोध छ। रामचरितमानस झैं आधीभन्दा बढ़ी कठोर संस्कृत शब्दहरू राखेर रचना गरेको भए भानुभक्तीय रामायणको यत्रो अन्धाधुन्द प्रचार हुन्थ्यो हुँदैनथ्यो शंका छ।

यस्तै पुण्यात्माका कृपाले नै हिन्दूधर्म आजसम्म जीवित छ। यस्ता पुण्यवान् पुरुषको जति स्तुति गरे पनि थोरै हुन्छ। धन्य हो त्यो कुल जसमा पवित्र पुरुषले जन्म लिन्छन्।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

उनका रचनामा सात काण्ड रामायण र प्रश्नोत्तरमणिमाला पाइन्छ। बालककालमा मेरी पूज्या पितामही हामी केटाकेटीहरूलाई वरिपरि राखेर प्रश्नोत्तरका पदहरू सुनाउनुहुन्थ्यो। उहाँले सुनाउनुभएको एक पद मलाई अहिलेसम्म पनि संझना छ। "कुन् हो धनी सब् नरले कहेको, संतोषले जो छ सुखी रहेको।"

कविका जीवनकालमा घरनजीकै तामाकोटको गिरिधारी भाटसँग धेरै मुद्दा मामिला परेछ "स्वामित् यो गिरिधारिले अति पिस्यो" भन्ने कविले एउटा पद्य पनि रचना गरेको देखिन्छ।

कविका वंशमा छोराको नाउँ रमानाथ रहेछ। रमानाथका चार छोरा भएछन्। वेदभक्त, देवीभक्त, दुर्गाभक्त र शिवभक्त। वेदभक्त अघि नै परलोक भएछन्। दुर्गाभक्त परलोक भएको तीन चार वर्ष भएछ। देवीभक्त र शिवभक्त जीवितै छन् अरे। वेदभक्त र दुर्गाभक्तका छोरा छैनन्। देवीभक्तका चार छोरा र शिवभक्तका दुइ छोरा छन भन्ने सुनिन्छ। कविका वंशजमा कोही प्रसिद्ध भएनन्। नाती दुर्गाभक्त एकजना सिंहदरबार घरकाज जाँचमा डिठ्ठा सम्म भएका थिए।

कविको कुनै प्रामाणिक जीवनी पाइँदैन। हुन पनि उस कालमा जीवनी लेख्ने उस्तो चलन पो कहाँ थियो र पाइयोस्। नेपाली साहित्यमा कविको एउटा प्रामाणिक संक्षिप्त जीवनी अवश्य लेखिनुपर्ने हो। दुइ चार जना साहित्यप्रेमी युवकहरूले केही दिन कविको जन्मभूमि तनहूँ र उनका जीवनसँग सम्बन्ध राख्ने ठाउँहरुमा घुमेर संग्रह गरे जीवनी लेख्नालाई सामग्रीहरू सहजैसँग जम्मा हुन सक्तो हो कि भने जस्तो लाग्छ। तर यस काममा साहस र उत्कट साहित्यप्रेमको जरूरत छ। समय आएपछि त्यो पनि होला।

अस्तु, नेपाली भाषामा पहिले पहिले धार्मिक साहित्य निर्माण गरेर लाखौं नेपाली जनतामा श्रीरामायणका पवित्र कथाको प्रचार गर्ने यी पुण्यात्मा पुरुषका स्मृतिमा मेरो श्रद्धाञ्जलि अर्पित छ।

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# कवि भानुभक्त

[ श्री ब्रह्म शम्शेर जङ्ग बहादुर राणा, बी०ए०, नेपाल। ]

[ श्री ब्रह्म शम्शेर जङ्ग बहादुर राणाले कवि भानुभक्त नामक एउटा सानो पुस्तिका भानुभक्तको मृत्यु भएको ७० वर्ष पुगेका उपलक्ष्यमा लेखिबक्सेको छ। सो सचित्र पुस्तिकामा जेनरल साहेबले भानुभक्तलाई अनेक दृष्टिबाट विचार गरिबक्सेको छ। सो पुस्तिकाको एक अंश तल उधृत गरिन्छ। सं० ]

"एक् दिन् नारद सत्य लोक् पुगि गया लोक्को गरूँ हित् भनी" भन्ने श्लोक कुन नेपालीको कानमा नपरेको होला। यही श्लोकले श्री गणेशायनमः गरेको कवि भानुभक्तले हाम्रा भाषामा उलथा गरेका सात काण्डको रामायण नेपालको हरएकका घर झुपड़ीमा एक फेरा न एक फेरा पसेको होला। यो कम शिक्षित देशमा यस्तो ठाउँ पाउनु सानो कुरा होइन। त्यसैले नै त्यसको गुण स्वयं बक्तछ।

त्यसभन्दाअघि पनि नेपाली साहित्य हाम्रो समाजमा केही न केही अंशमा थियो (जुन कुरा तल केही खुलासा बयान गरिएको छ) तापनि जन साधारणमा साहित्य भन्ने कुराको केही थाहा नै थिएन भने पनि हुन्छ। तर यो सरल रामायणले नपाली साहित्य भण्डारलाई धनी मात्र पारेन कि घर घरमा घुसन गई सबैको दिलमा श्लोक र कवितातर्फ रुचि गराई नेपाली भाषाको पूरा प्रचार गरायो। कति अशिक्षितलाई त्यसले गर्दा शिक्षित हुन अभिलाषा गरायो हो र अशिक्षा हटाउन कमती सहायता दियो हो। हाम्रो यो स्वतंत्र राज्यका र बाहिर प्रान्तमा रहेका सबै नेपालीलाई भाषाद्वारा पनि एकत्त्व पार्न यसबाट जति मद्दत भयो हो त्यसको सौभाग्यको भागी उनी आदिकवि नै हुन्। उनीको मृत्यु भएको यो बर्षले ७० वर्ष भएछ तर उनी मरे पनि उनको काम अमर भैरहेको छ र अमर पनि रहिरहने छ। झन् समयको प्रभाव र सभ्यताद्वारा सत्‌गुणको कदर गर्ने मानिसहरूको वृद्धिबाट उनको काम झन् झन् चमकिलो भई जाने सम्भव छ। हामी सबै ठूलादेखि सानोसम्म मर्दछौं, अवतार लिएका राम कृष्णहरू पनि मरे, तर हाम्रो विचार र कर्म कैल्हे पनि मर्दैन र त्यो विचार विचार हो जुन परोपकारी निःस्वार्थी छ र जुन कर्मको स्वरूप लिएको छ। कुनै सुकर्म गर्दा पनि दुःख र संकष्ट भोग्नुपर्दछ,

Vedic Archives Digital Preservation Foundation, Chandigarh

तत्र सुकर्मको महत्त्व नै कम हुन्छ। दुःख संकष्टबाट नडराई आफ्नो कर्तव्य नै पालन गर्न सक्नु सबै मानिसको लागि सुहाउने कुरा हो। सुकर्ममा बिरोधी निस्कनु प्रकृतिको नियमै जस्तो भएकोले कवि भानुभक्त पनि यस नियमबाट वञ्चित भएनन्। उनलाई कविता गर्ने पैला झलक आउँदा उनले प्रथम रचेका दुइ श्लोक "खाँदा, पिउँदा, उठ् बस् गर्दा बराबर भनि-रहँदा कसैले सिह्रो भने, कसैले के भयो भनी सोधपुछ गरे, तर भानुभक्तले क्यै पनि जवाफ दिएनन् आफ्नै मनका तरङ्गमा दङ्ग थिए।" अर्काको दिल मार्ने हेंला ठट्ठाले आफूलाई दबाउन दिएनन्। बेलायतका एक प्रसिद्ध कवि कीट्सको आहारिसे र व्यभिचारी निन्दाकारीहरूको बचन भोग्नु परी क्षय रोगसमेत लागी कचा उमेरमै जीवन बितेथ्यो, तर उनको मृत्युपछि उनको बिचार र लयाकतले यस्तो कदर पायो कि ती सब दुष्ट निन्दाकारीहरूले सूर्यको तेजमा चमेरो झैं कुना कुनामा शरमले लुक्न जानुपरेथ्यो। तसर्थ यस्तो हेंला र ठट्टाको पात्र सबै ठूला मानिसहरूले एक बखत न एक बखत बन्नुपरेको देखिन्छ र सो हुनु नै कोही मानिसको लयाकत र गुण जनाउने कुरा रहेछ भन्ने देखिन्छ। तसर्थ कसैले खालि रिसले आफूलाई ठट्टा गर्‍यो भन्दैमा आफ्नो कर्तव्यको बाटोबाट फरक हुनु उचित होइन।

---

कुन् हो सदा बन्धनमा पर्‍याको ?
जस्ले त यो मन् सुखमा धर्‍याको।

× × ×

कुन् हो सहज् मोक्ष गराइ दीन्या ?
ज्ञान् हो अरूको किन नाम लीन्या !

× × ×

जागा कउन् हो कसरी उ जान्या ?
जो सत् असत्‌को छ विवेक गर्न्या।

—भानुभक्त।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# भानुभक्तप्रति

[ श्री सिद्धिचरण, नेपाल। ]

कुन मंत्र गरी, कुन जादु छरी, कविजी, तिमीले जनतामा,
नव जीवनको स्रोत सरलता बहाई दियौ कवितामा !
नहिँडेको जन निर्जन बाटो कविजी, तिमिले पहिल्यायौ।
नेपालीको स्वर्ण दिवस त्यो नजिक पुगेको देखायौ।
डाँड़ा-काँड़ा गोचरमा जब गुंज्यो तिम्रो रामायण,
राम र सीता सबको हुन गै, पाए कतिले, कति लछमन !
सुप्त थिए सब, तर तिमि जागी जाग्रत क्षणको पाठ दियौ;
टाढ़ा देख्ने प्यारा कविजी, नेपालीमा राम दियौ।
नव जागृतिको रूप चढ़ेको नेपाली यी फूल नयाँ,
जोश र साहस लहलह नाच्ने नेपाल छ एक बँगैचा।
माली तिमि झैं आई, आई, गर्छन् त यहाँ रखवारी,
जगको स्वर्गिक देशहरूमा किन नगनिनु यो चाहीं !
परवत चिर्दै, झर झर झर्दै, खोलाले भावुक छाल,
छर्किरहे झैं तिम्रो कविता नेपालीमा आह्वान।

[ १ ]

हिम मारुतको निनिनानीले विलसित, पुलकित नेपाली।
छन् कति राम्रा, सरल उज्याला ! मुखमा अलि अलि मृदु लाली।
सुरभि सरलता उठ्छ पराग नेपालीको जीवनमा;
सुन्दरताको खानी प्रेम नेपालीको मन मनमा।
कविताको रस छर्क न छर्क, सुक्न नदेऊ यी फूल,
जग आँगनको अनुपम शोभा हो यिनिहरुकै अनुकूल।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

रसमय जीवन नेपालीको हेरी सबले रस पाऊन् ।
दुखमय, कस्तै खोक्रो जीवन भल भल रसले छलकाऊन् ।
कविताको रस, कविताको रस, नेपालीको जीवनमा ।
दाह कुनै पनि दन्कने नहोस् नेपाली यी सुसुमनमा ।
नजली जगमा कसले देख्यो शान्ति परीको घरबार ?
चाहिन्छ मिठो जलन त यस्तो नेपाली यी सुकुमार ।
ए नेपाली दाजु र भाई, आमा, बहिनी आज जलौं ।
"कविजी हाम्रो, हामी कविको" यही गीतले व्योम भरौं ।

---

कस्लाइ हो शत्रु भनेर जान्नू ?
आफ्ना दशै इन्द्रिय शत्रु मान्नू ।
कस्लाइ खूब् मित्र भनेर मान्नू ?
जीत्या तिनै इन्द्रिय मित्र जान्नू ॥

× × ×

दरिद्र नाऊँ नरमा छ कस्को ?
विशाल तृष्णा घरमा छ जस्को ।
कुन् हो धनी सब् नरले कह्याको ?
सन्तोषले जो छ सुखी रह्याको ॥

—भानुभक्त ।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# हाम्रा भानुभक्त

[ श्री अर्जुन शम्शेर जङ्ग बहादुर राणा, नेपाल । ]

"..................संसार भरमा सर्वश्रेष्ठ जो,
जो छन् जो जो गए ती ती सबका ज्ञानसागर
उर्लन्छ पुस्तकै भित्र लिपिको लहरा बनी ।"

बालकृष्ण शम्शेर ।

कवि भानुभक्त मुक्त भएको पनि आज सत्तरी वर्ष भईसकेछ, तर उनको सम्झना सबैका दिलमा हरियै नै छ। हरेक घर झुपड़ीबाट

"एक् दिन् नारद सत्य लोक् पुगि गया लोकको गरूँ हित् भनी
ब्रह्मा ताहिं थिया पस्या चरणमा खूसी गराया पनी ॥"

वा

"एकान्त स्थलमा सितापति थिया सीता हजुर्मा रही
हातमा चामर ली प्रभूकन तहाँ हाँक्थिन् समिपूमा गई ॥"

भन्ने ताना सुन्दा अझ पनि उनी जीवितै छन् कि भने जस्तो भान पर्दछ, इनको देहले यस संसारलाई छोड़े तापनि उनको कविताले उनलाई सदा अमर तुल्यायो। उनको देह मर्‍यो तर नाम मरेन। "चलाचलमिदं सर्वं कीर्तिर्यस्य स जीवति" भनेको साँचि नै रहेछ। आज भानुभक्तलाई सम्झँदा हाम्रो दिलमा हर्ष औ गौरव उम्लन्छ। नेपाली 'भाषा' हो भन्ने नाम निशानै थिएन भनिदिए पनि हुने वेलामा सुमधुर 'भाका' भएका श्लोकहरू बनाई भाषातर्फ सर्वसाधारणको समेत दृष्टि खिच्ने पहिला उनै हुन्। कुन कृतघ्न नेपाली होला जो उनले भाषालाई गरेको सेवा बिर्सन सक्ला !

एक दिन घाँसीसितको बहसमा जुन अर्ति सिके, त्यसको पनि भानुभक्तले श्लोक बनाए। हर बखत त्यही कण्ठ गरी यसै गर्छु भनी दिललाई दृढ़ पारी भाका हाली आफ्नै भाखामा रामायण लेख्ने तर्जुमा गरी जुन रामायण लेखे त्यसले गर्दा उनलाई साँचि नै अमर तुल्यायो। दृढ़निश्चयी भई असल कामतर्फ लागे हरएक मानिसले आफ्नो नाम अमर तुल्याउन सक्छ भन्ने पनि स्पष्ट देखाए।

नेपाली साहित्यक्षेत्रमा कविवर भानुभक्तलाई हामी सबैले प्रेम र आदरको स्थान दिएका छौं। आज उही महापुरुषको कीर्ति गाउँदा हाम्रो दिल प्रफुल्लित हुन्छ, उनको नाम सम्झँदा हाम्रो अङ्ग रोमाञ्चित हुन्छ। साँचि नै भानुभक्त एउटा महापुरुष नै थिए। उनका कामहरूले

Vedic Archives Digital Preservation Foundation, Chandigarh

आज उनको नामलाई सम्झाउँदै छन्। उनले 'वधूशिक्षा', 'प्रश्नोत्तरी', 'भक्तमाला' भन्ने अरु कविता र नेपालको वर्णन गरी मनोहर कविताहरू रचे, तर उनका यी सबै कामहरूमध्ये सबभन्दा ठूलो काम—नेपाली भाषामा रामायण लेख्नु नै हो। 'रामायण' र 'महाभारत' हिन्दू धर्मका स्तम्भ हुन्। हिन्दुत्वको अध्ययन गर्नाको निम्ति 'रामायण' अथवा 'महाभारत'-को अध्ययन गरे पनि पुग्छ, सो जानी उनले रामायण लेखी समाजको पनि ठूलो सेवा गरे।

अहिलेभन्दा १०० वर्षअगिको हाम्रो अबोध समाजमा हिन्दू संस्कृतिको स्मृतिलाई जाग्रत गराई 'नेपाली' पनि भाषा हो भन्ने कहलाउनाको निम्ति उनले रामायण लेखे। कस्तो? हाम्रो त्यस वेलाको समाजलाई ठिक्क सुहाउने, आइमाई केटाकेटी साराले बुझ्ने, निरक्षरहरूले पनि कण्ठ गर्न सजिलो। आजकाल पनि साउँ अक्षर चिन्नासाथ भाका भन्न सिक्ने, खास गरेर रामायण भन्न शुरू गर्ने नेपालीहरूको संख्या कम छैन। उनको रामायणको सरलता, कविताको माधुर्य, पदविन्यास, वर्णनशैली, आदि कैयौं गुणहरूलाई "मैं हुँ" भन्ने विद्वान्ले पनि प्रशंसा गर्न लाचार हुनैपर्दछ। "अर्थको चमत्कार र शब्दको अलंकार पनि कवि भानुभक्तको अपार छ।" यस्तो उपयोगी मात्रै होइन परमोपयोगी रामायण उनले किन लेखे त? यस विषयमा उनको भनाइ छः—

"सिताराम् भज्न्या छू भनिकन प्रतिज्ञा अघि गरी,
गयाको होस् आइस् कति दिन भजिस् भन् अघि सरी।
यसो भन्नन् स्वामित् मकन यमका दूतहरुले,
कसो भन्नू मैले भुलिकन रह्यौं यस्तरहले॥"

साँच्चि नै भानुभक्तको रामायणको हरएक पदबाट भक्तिरस तपतप गरी चुहुन्छु। उनले जो रामायण लेखे त्यो सिर्फ ईश्वरभजन गर्न र सहस्रौं मुखबाट भजन गराउनाका निम्ति लेखे। औ नेपाल राष्ट्र र हाम्रो मातृभाषाको भविष्यलाई विचार गरेर लेखे। उनले आफ्नो रामायण लेख्ने वेलामा सायद् के विचार गरेका थिए होलान् भने—मैले लेखेको रामायणलाई कुनै प्रेमीले परिश्रमपूर्वक सार्ला, त्यसपछि अर्को प्रेमीले त्यस्तै परिश्रम गर्ला, अनि त्यसपछि अर्कोले पनि सुन्ला वा सार्ला, बिस्तार बिस्तार मेरो रामायणलाई गाई भैंसी चराउन गएका गोठालाहरूले पनि स्याँलमा बसेका वेला उपरखुट्टी लाएर गाउलान्, इत्यादि। उनको त्यस-वेलाको सपना अहिले बिपना भएको देखिंदैछ।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

भारतवर्षमा प्रचलित पचासौं रामायणहरूमध्ये तीनोटा रामायण मुख्य छन्—संस्कृतमा (१) वाल्मीकि रामायण, (२) अध्यात्म रामायण र भाषामा (३) तुलसीकृत रामायण। वाल्मीकिजीले रामायणका पात्रहरूको चरित्र-चित्रणमा बढ़ता ध्यान दिएका छन्। व्यासजीको अध्यात्म रामायण आध्यात्मिक ज्ञानको भरमार छ। तुलसीदासजीको रामायणमा चाहिं विशेष गरेर भक्तिरसकै प्रधानता छ। हाम्रा भानुभक्तजीको रामायणमा यी तीनै विशेषता पाइन्छन्।

हुन त भानुभक्तजीको रामायण अध्यात्म रामायणको अनुवाद हो। तर मलाई त हूबहू अनुवाद जस्तो लागेन, किनभने अध्यात्म रामायणका स्तुतिहरूमा समेत आध्यात्मिकताको भरमार छ। तर भानुभक्तीय रामायणमा स्तुतिहरू लगायत अध्यात्म रामायणका धेरै श्लोकहरूको गन्धै छैन। मतलब के हो भने उनले आफ्नो रामायणलाई अर्कै रसमा ढाले, सामग्री त्यहीं-बाट लिए पनि आफ्नो मधुर शैलीमा ढालेकोले नै बढ़ता लोकप्रिय भयो। तारीफ लेखकको शैलीमा छ, ढलाइमा छ। त्यसो त जुनसुकै रामायणमा पनि दशरथका छोरा राम, रामसीता बनवास गएको, रामले रावणलाई मारेको, इत्यादि मोटा मोटी कथा जस्ताको तस्तै रूपमा देखिन्छन्। तर जसरी अरु रामायणलाई हामी वाल्मीकि रामायणको अनुवाद ठहराउँदैनौं, त्यस्तै भानुभक्तीय रामायणले पनि केवल अनुवाद हो भन्ने दोष मात्र किन पाउनु? पूरापूरी अनुवादै हो भन्ने मानेका खण्डमा पनि उनको अनुवादको शैलीलाई हाम्रा लेखकहरूले निकै दिनसम्म अनुकरण गर्न सिक्नु बेस हो।

आजकाल शिक्षाको प्रभावले गर्दा आफ्नो भाषाको महत्व बुझ्न सक्नेहरू धेरै देखिदैछन् तापनि आफ्नो भाषामा लेख्न लाज मान्नेहरूको संख्या पनि कम छैन। पण्डितसमाजले समेत भाषालाई 'भाखा' भन्दै अति हेला गर्दै, भाषामा भाव प्रकट गर्न बेइज्जती सम्झिएको बेलामा पनि भानुभक्तले भाषाको महत्व बुझी सुललित पद्यमा, कवित्व रसले परिपूर्ण भएको रामायण लेखी हाम्रो मातृभाषालाई सिंगारे भने अझ पनि "अंग्रेजी अथवा संस्कृतमा भाव प्रकट गर्न सजिलो हुन्छ, 'मातृभाषामा क्या लिखना है' शब्दै पाइन्न" भन्नेहरूलाई देख्ता हामीले शर्माउनु बढ़ता होओइन। यिनी-हरूले नसम्झे पनि भानुभक्तले त बुझेका रहेछन् कि--

"भाषा हो सभ्यता हाम्रो, सारा उदय उन्नति
जीत वैभव भाषामै बाँचतछन् पछिसम्म यी,
भाषा हो जीवनी हाम्रो।............................"

—बालकृष्ण सम।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# आशा

[ पण्डित धरणीधर शर्मा कोइराला, बी० ए०, बी० टी०, दार्जीलिङ । ]

भानुभक्त कवि हुन् जसलाई ।
वालवृद्धवनिता ति रमाई ॥
पढ्दछन् सतत स्वाद लिएर ।
खान पान पकवान भुलेर ॥ १ ॥

शब्द अर्थ तिनका कति मीठा ।
बुझ्न कष्ट नपरीकन ठीटा ॥
औधि स्वादसित राग मिलाई ।
गाउँछन् चरित राम रमाई ॥ २ ॥

सुन्दछन् अपढ जो ति पनी ता ।
भानुभक्त कविता अति मीठा ॥
स्वाद मानि मन निर्मल पारी ।
चित्त शान्त गरि भक्ति उमारी ॥ ३ ॥

शुद्ध शान्त अतिदान्तमनाको ।
स्वर्गवास कविको हुन गाको ॥
वर्ष सत्तरि पुग्यो र मजाको ।
भक्ति गर्छु निजका प्रतिभाको ॥ ४ ॥

उम्लँदो छ मनमा अब आशा ।
रामचन्द्र चरितामृत खासा ॥
संझि संझि झन दाजु र भाई ।
भानुभक्त पढनन् मनलाई ॥ ५ ॥

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# रामायण माहात्म्य

[ साहित्याचार्य पण्डित कुलचन्द्र गौतम, साहित्यमणि, विद्यारत्न, नेपाल। ]

अनन्तकोटि ब्रह्माण्डनायक परमेश्वरलाई कोटि कोटि धन्यवाद छ जसका संकल्पले—अज्ञानको साम्राज्य चल्न गई मुलुकलाई अन्धकारले ढाक्न लागेका समयमा एउटा पर्वत प्रदेश (तनहूँ)-बाट भानुभक्त नामक उज्ज्वल तारा उदाएर देश अलिकति उज्यालो हुन गयो।

यिनको उदयकाल विक्रम संवत् १८६६ र अस्तकाल १९२५ संवत् थियो। यथासमय यथासम्भव विद्या हासील गरेपछि यिनले—"अचिन्त्य-शक्ति-परमेश्वरबाट यस्ता यस्ता अनेक कोटि ब्रह्माण्डको रचना गरेर जीव-हरूलाई भोग र अपवर्ग (भुक्ति-मुक्ति) दिने वेद-शास्त्रको रचना भएको हो, जीवले गर्नुपर्ने पुरुषार्थ यत्ति हो, अपवर्गमा बाधा नपर्ने गरी भोग (भुक्ति)-को अनुभव गर्दै मुक्ति हासील गर्ने हुन गयो भने जीवको जन्म सफल छ, भोगैमा लम्पट हुन गएर मुक्ति हासील गर्न सकेन भने जीवको जन्म निष्फल छ, अर्थात् ऐहलौकिक सुख र पारलौकिक सुख दुवै पाउने बन्दोबस्त मिलाउन सक्यो भने प्राणीको प्राणलाभ सच्चा प्राणलाभ ठहरिन्छ; त्यस्ता प्राणीको चातुर्य (बठ्याइँ) नै सच्चा चातुर्य[1] कहिन्छ, विषयरसमा मोहित भएर विषयको आर्जन-उपार्जन गर्ने बठ्याइँपट्टि मात्रै लाग्यो भने लाखौं साम्राज्यसुखभन्दा पनि अति ठूलो मुक्तिसुख नपाउने हुन गएको हुनाले त्यो प्राणी दैववञ्चित (हतभाग्य) कहलाउँछ, भोग र अपवर्ग (भुक्ति र मुक्ति)-को सिद्धि (प्राप्ति) जताबाट हुन्छ त्यसैलाई धर्म[2] भन्द-छन्; त्यो धर्म सुरक्षित भयो भने प्राणी सुरक्षित रहन्छ; त्यो नष्ट भयो भने प्राणी नष्ट हुन्छ[3]। त्यस्तो त्यो धर्मको सिद्धि (प्राप्ति)-का निमित्त

---

[1] या लोकद्वयसाधनी तनुभृतां सा चातुरी चातुरी। [ नीति० ]

[2] यतोऽभ्युदयनिःश्रेयससिद्धिः स धर्मः। [ कणाद ]

[3] "धर्म नष्ट गराइयो भने धर्मले नष्ट गराउँछ, धर्मको रक्षा गरियो भने धर्मले रक्षा गर्दछ" यस्तो आशय भएको—

धर्म एव हतो हन्ति धर्मो रक्षति रक्षितः।
तस्माद्धर्मो न हन्तव्यो मा नो धर्मो हतोऽवधीत्॥

यो उपदेश मनुले गरेको छ।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

दयासागर ईश्वरले र ईश्वरका अंशबाट पैदा भएका मुनीश्वरहरूले वेद र शास्त्रको आविष्कार गरेका हुन्। त्यो धर्म यथोक्त पालना होउन्ज्याल (सनातन धर्मको आभ्यान्तर प्रचार छउन्ज्याल) तद्धर्मावलम्बी सकल समाज यो लोकमा सर्वोपरि[1] रहेर आखिरमा मुक्तिपदारूढ (मुक्त) हुन्थे। कालक्रमले वेद-शास्त्रका साथै साथ धर्मको ह्रास हुन जाँदा सनातनधर्मावलम्बी सच्चा आर्यका सन्तान आज नाम मात्रले सनातन-धर्मावलम्बी (वास्तवमा इतो भ्रष्टस्ततो भ्रष्टः) भएर अवनतिका गहीरा खाल्डातर्फ अग्रसर हुन लागे। थोर बहुत बाँकी रहेको संस्कृत विद्या पनि नबुझिने हुन जाँदा हाम्रा देशका बान्धव (दाज्यूभाइहरू) ऐहलौकिक-पारलौकिक कल्याणको बाटो फेला पार्न नसकेर—जन्मान्तर नमान्ने, ऐहिक सुखभोगलाई नै परम पुरुषार्थ संझने विधर्मीहरूले स्वार्थसिद्धिका निमित्त बताएका बाटामा लागेर भ्रष्ट हुन लागे। यस्ता यी अशिक्षित देशबान्धवहरूको येन केन प्रकारेण अपेक्षित (उचित) उपकार गर्नु मेरो कर्त्तव्य हो, आफूले हासील गरेका विद्याबाट लोकोपकार भएन भने त्यो विद्यालाभ वृथा छ" यस्तो विचार मनमा लिएर अध्यात्म रामायणको पद्यानुवाद (७ काण्ड रामायण) प्रश्नोत्तरपञ्चाशिका प्रभृति ग्रन्थको रचना गरे।

रचना गरिएका पूर्वोक्त ग्रन्थको प्रचारद्वारा धार्मिक ग्रन्थको ज्ञान बिलकुल नभएका देशबान्धवहरूलाई, रामायणमा वर्णन गरिएका प्रत्येक पात्रका आचारमा दृष्टि दिलाएर, ती पात्रका आचार अनुसारको परिणाम बुझाईकन, हित आचारको स्वीकार र अहित आचारको बहिष्कार गराएर—(अर्थात्[2]—"धर्म नछाड़ीकन सन्मार्गमा लागिरहेको

---

[1] शक्राविसत्यमखिलप्रकृतिप्रियत्वमव्याहता गतिरतिप्रबलः प्रतापः।
अद्याऽपि हन्त ! बत ! नः सुकृतात् सुधीभिर्लब्धं फलं श्रवणयोर्युगलं पुनीते॥
[ सूक्तिसंग्रह ]

[2] वाल्मीकि-व्यास-अगस्ति अग्निवेश प्रभृति मुनीश्वरहरूले रचना गरिएका अनेकानेक रामायणमा सबैले एकमत भएर "धर्ममार्गमा लाग्नेलाई पशुपक्षी प्रभृतिले सहायता दिन्छन् (र त्यसको जय हुन्छ) अधर्म मार्गमा लाग्नेलाई सहोदर भाइले पनि छाड़िदिन्छन् (र त्यसको सर्वसंहार हुन्छ)" यही कुरा व्यञ्जनावृत्तिले (ध्वनिका तरीकाले) सबै संसारलाई उपदेश गरेका छन्। रामायणबाट लिनुपर्ने उपदेशको सारांश यत्तिकै हो।

यान्ति न्यायप्रवृत्तस्य तिर्यञ्चोऽपि सहायताम्।
अपन्थानं तु गच्छन्तं सोदरोऽपि विमुञ्चति॥ [ महाकवि जयदेव ]

Vedic Archives Digital Preservation Foundation, Chandigarh

रहेछ भने पशु-पक्षी प्रभृति सबै प्राणी सहायक हुन जाँदा रहेछन्; धर्मको स्वीकार गरेर (पिताको आज्ञालाई शिरोपर गरेर) जङ्गल गएका असहाय रामजीलाई बानर-भालू-गिद्धहरूले समेत सहायता दिएर युद्ध-विजयी गराएका रहेछन्; धर्म छाड़ेर कुमार्गमा लागीकन परधनको र परस्त्रीको अपहरण गर्दै आफ्नो वैषयिक दुर्वासनाको कब्जामा परेर दुनियाँलाई पिर्न लागेको रहेछ भने त्यसलाई आपत्ति अवश्यमेव पर्दोरहेछ; आपत्तिका समयमा कतैबाट सहायता पाउन ता परै रहोस्; त्यसका खास सहोदर दाज्यूभाइहरूले त्यसलाई छाड्दा रहेछन् र त्यसैको संहारमा तत्पर हुँदा रहेछन्, कुमार्गगामी रावणलाई खास उसका सहोदर भाइ विभीषणले[1] छाड़िदिएर त्यसको संहार पनि गराएछन्" इत्यादि बुझाएर

---

रामायणको निर्माण गर्ने सबै कवीश्वरहरूले दुनियाँको पूर्ण कल्याणका निमित्त प्रयत्न गरेका हुन् केवल अद्भुत अद्भुत घटना लेखेर समाजको मनोरञ्जन मात्र गर्नाका निमित्त हातीमताई—सहस्ररजनीचरित्र प्रभृतिका लेखक जस्ता भएर आफ्ना बुद्धिको दुरुपयोग गरेका होइनन्। अध्यात्म रामायणको भाषामा पद्यानुवाद गर्ने भानुभक्ताचार्यजीले पनि पूर्वोक्त सर्वरामायणसंमत उपदेश दुनियाँलाई दिएका हुन्। यो उपदेश हितार्थी सबैको ग्राह्य छ।

[1] आधुनिक शिक्षितम्मन्य भएको कोही समाज, शुद्ध आचरणमा रहने विभीषणमा "घरका भेदिया" भन्ने दाग लगाउँछन्, "कुनै आत्मीयले घोर अत्याचार गर्न लागेमा संझाउँदा बुझाउँदा संझेन बुझेन भने त्यसको त्याग मात्र होइन कि त्यसले गर्न थालेका अधर्मको दमनसमेत गरेर प्रत्येक प्राणीले लोककल्याणको सम्प्रदायमा चल्नु धर्म हो; लहै लहैमा लागेर लोकविध्वंसको उपेक्षा गर्नु हुँदैन। अतएव रामचन्द्रजीका पुर्खा महाराजा इक्ष्वाकुले अल्पापराधी छोरा विकुक्षि नामक राजकुमारलाई देशैबाट निकालिदिए, महाराजा सगरले पनि आफ्ना असमञ्जसलाई अपराधअनुसारको दण्ड दिएर धर्मलाई सुरक्षित गरे। धेरै टाढ़ाका दृष्टान्त खोज्न पछि किन लागौं? यही रामायणका उत्तम पात्र धार्मिक धुरन्धर महाराजा दशरथले 'रामलाई वनतर्फ धपाएँ भने म बाँच्तिनँ' भनी जान्दा जान्दै प्राणभन्दा प्यारा रामजीलाई वनवास दिए र तुरुन्तै प्राण-परित्याग गरीकन आफ्नो सत्यप्रतिज्ञता (वचनको सच्चाइ) रूपी धर्मलाई कायम राखे'। यस्ता प्रकारको विचार गर्ने धर्मप्राण सच्चा आर्यहरू विभीषणका आचरणमा दोष देख्तैनन् र त्यताबाट 'कुनै आत्मीय व्यक्ति दुष्ट हुन गयो भने त्यसदेखि छुट्टिएर ईश्वरको शरण परीकन यथाशक्ति अधर्मको दमन गर्नु परम कर्तव्य हो' यस्तो उपदेश लिन्छन्।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

सदाचारमा प्रवृत्ति र दुराचारबाट निवृत्ति गराईकन ) ऐहिक सुख र पारलौकिक सुखको मूल कारण भएका धर्मको मर्म बुझाउने; यस्तो मर्म बुझ्न नसक्ने स्थूल बुद्धिहरूलाई पनि केवल कीर्तन मात्रले कल्याणदायक भएका रामचरित्रको र अरू अरू उपदेशप्रधान ग्रन्थको राष्ट्रव्यापी प्रचार गराउने यी कविवर भानुभक्ताचार्यजीलाई अनुगृहीत भएका नेपालदेशीय सज्जन समाजले शतशः धन्यवाद दिनुपर्दछ।

नेपालीय भाषाका रचनाको प्रचारै नभएका समयमा यस्ता यस्ता उत्तम ग्रन्थको रचना गर्ने भानुभक्ताचार्यजीलाई यो भाषाका आदिकवि मानेर आधुनिक कविवर्गले मान्य-पूज्य संझनुपर्दछ।

आजकालको जस्तो किताब लेखी छपाई पैसा कमाउने चलन हाम्रा देशमा पूर्णतया नचलेका समयमा केवल लोकोपकारलाई नै मुख्य उद्देश्य राखेर निःस्वार्थ देशसेवा गरे बापत यिनको महापुरुषहरूमा गणना उचित हुनेछ।

यिनको रचनाप्रणाली अत्यन्त सरल र आकर्षक छ, काव्यमा (कवितामा) रहनुपर्ने प्रसाद, अर्थव्यक्ति, ओज, कान्ति, समाधि प्रभृति गुण र रसाभिव्यक्तिसमेत यिनका काव्यमा यत्रतत्र व्याप्त छन्। यसै कारणले यिनका कविता आबाल वृद्ध सबैलाई रुचिकर हुन गएका हुन्, अतएव साहित्यका दृष्टिले समालोचना गरेका पक्षमा पनि यी महाशय उच्च श्रेणीका कवि ठहरिनेछन्।

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# भानुभक्तप्रति

[ पण्डित चक्रपाणि शर्मा चलिसे, नेपाल । ]

सिद्धहस्त र प्रसिद्ध पुराना, ख्यातनाम कविजीहरु नाना ।
जो थिए अघि यहाँ उनमाथि, आजको दिन छ यो अति जाती ॥

( १ )

देशका रसिकवृन्द मिलेर, गान गर्न उनको यश धेर ।
भै रहेछ धुमधाम तयारी, छन् नवीन कवि उत्सुक भारी ॥

( २ )

मार्ग साफ छ खुला निज भाव--व्यक्त गर्न नलिईकन गाभ ।
लेख्तछन् सुकविता शुभ लेख, राखि चित्तबिच उन्नत टेक ॥

( ३ )

पाउँछन् कदर मान इनाम, चल्छ खूब तिनको यश नाम ।
चुक्न औसर दिने कुन होला, हो यही सरस सुन्दर मेला ॥

( ४ )

छन् कति प्रकृतिका प्रिय भक्त, कोहि छन् विषयदेखि विरक्त ।
तुन्दछन् कति पुरातन कन्था, नाप्छ कोहि प्रिय नाटकपन्था ॥

( ५ )

ताकिँदो छ कतिबाट समाज, सज्छ कोहि निज धार्मिक साज ।
ऐतिहासिक महाकवि बन्न, कोहि गर्दछ उमेद अनन्य ॥

( ६ )

पक्रि नैतिक मनोहर भाव, कोहि पार्छ जनमाथि प्रभाव ।
आंग्ल शैलितिर कोहि छ रद्द, कोहि हिन्दितिर मस्त छ हद्द ॥

( ७ )

Vedic Archives Digital Preservation Foundation, Chandigarh

खास शुद्ध नयपालि बनेर, गूढ़ भाव गहिरयाउँ भनेर।
कोहि भावुक महाकविरत्न, ख्याउँछन् कलमलाइ सयत्न॥
(८)
छैन शैलि सबको कहिं एक, भिन्न भिन्न छ विचार विवेक।
भिन्न भिन्न सुनिँदो छ अलाप, लक्ष्यमा न त छ ऐकिक भाव॥
(९)
किन्तु त्यो सरसता सबलाई, भन्न बुझ्न सजिलो हुनलाई।
व्यक्त भाव मृदु मञ्जुल साज, सज्नु हो कठिन दुष्कर काज॥
(१०)
त्यो समस्त गुणको अवभास, भानुभक्ति कवितै बिच खास।
देखिइन्छ सबतर्फ विचारी, हेरदा हुँदि दुरुस्त तयारी॥
(११)
यै निमित्त उनका सब हामी, छौं कृतज्ञ र ऋणी अनुगामी।
भक्ति गर्नु उनको भरिशक्य, मुख्य काम अहिले छ अवश्य॥
(१२)
भै तसर्थ खुशिले सब मेला, भानुभक्त कविको यस बेला।
गाउनाकन यहाँ यशगान, छौं तयार सुरिलो झिकि तान॥
(१३)
यो पवित्र शुभ औसरलाई, मित्रदेखि दिइ खूब बधाई।
नव्य पद्यकुसुमाञ्जलि साथ, मित्रवर्गसित जोर्दछु हात॥
(१४)

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# भानुभक्ताचार्य

[ श्री बालकृष्ण शम्शेर जङ्ग बहादुर राणा, नेपाल । ]

'एक दिन् नारद सत्य लोक् पुगिगया.........'

पत्रमा नरही केवल मुखमा श्रुतिरूप भइरहेको अवस्थाको भाषामा झन् कति चाँड़ो परिवर्तन भइरहँदो होला, पत्रमा परिणत भइसक्ता पनि त कालले अनुवर्तित पार्दो रहेछ; 'गया, भन्या, थिया, गऱ्या, हुन्या' यस्ता आकारान्त शब्द पच्चीस-तीस वर्षमै एकारान्त—'गए, भने, थिए, गरे, हुने' भइसके।

'प्राकृत बोल्ने भाषा हो—पुस्तकरूपमा रहने योग्यता संस्कृतलाई मात्र छ' भन्ने सम्झेर ती नेपाली विद्वान्हरूले (यो विचारका अझ बाँकी छन्) घेरैसम्म संस्कृतमै लेखिरहे, उही प्राकृतको अझ विकृत नेपाली भाषा लेख्नपट्टि ध्यान दिएनन्। संस्कृतउपरको श्रद्धा स्वधर्मको निम्ति थियो, तर नेपालीउपरको श्रद्धा स्वदेशको निम्ति थियो तापनि उनीहरूले यस कुराको परवाह राखेनन्, त्यसको परिणाम अहिले हाम्रो साहित्यको कमलो पाइलो अरूको हेरेर सयौं वर्ष पछि परेको छ।

हिन्दी कवि तुलसीदासको (हुन त उनको हिन्दी आधुनिक 'है' प्राधान्य हिन्दी होइन) देहान्त भएको तीन सय वर्षपछि १९७३ सालमा कवि लेखनाथले तुलसीदाससित तुलना गर्न हुने ऋतुविचार र बुद्धिविनोद लेखे, नेपालीमा त्यहाँभन्दा अगाड़िका श्लोक त पाइन्छन्—यथार्थमा कविता पाइँदैनन्, कविता पाइए पनि खालि अनुवादित पाइन्छन्। त्यसैले हाम्रो साहित्योन्नति अहिले हिन्दीसित दाँज्दा सन्तोषजनक छ। यही किसिमसित हामी नेपालीहरू मिलेर एउटै भाषाको मार्गमा हिँड़िरह्यौं भने हिन्दुस्थानका जुनसुकै उन्नत भाषालाई भेट्न नेपाली भाषालाई पचास वर्ष पनि लागोइन।

हिन्दीका दोहाहरू देखेर नेपालीहरूले पनि संस्कृतमा लेख्न छोड़ी आफ्नो बोलचालको भाषामा श्लोकहरू लेख्न लागे, त्यसैले ती पहिला कार्यहरूमा हिन्दीको कति असर परेको छ—उदाहरणार्थ—विद्यारण्यकेसरीको 'द्रौपदीकृत स्तुतिः'—

Vedic Archives Digital Preservation Foundation, Chandigarh

चीर खैंचत दुसासन घेरी ।
आइ नाथ शरणागत तेरी ॥
लाज राख कुरुका बिच मेरी ।
हूंगी मै जन्म जन्म कि चेरी ॥ १ ॥

× × ×

भयालमा बसि सुयोधन रानी ।
मेरी बात सखि छेउ बखानी ॥
हाँसिका नयनले तिर मारी ।
टुटिगै हृदय कृष्ण हमारी ॥ ६ ॥

संस्कृतमा अभ्यास गरिरहेको हातले नेपाली लेरुन थालेको कवि गुमानीका श्लोकहरूबाट देखिन्छ—कवि गुमानीपन्तकृत नेपाल भाषाश्लिष्ट पद्यानि—

कर्णनाथ घटोत्कचे युधि हते स्वां वीक्ष्य शक्ति हतां ।
तुष्टः प्राह शचीपतिः शिवमहो पार्थश्चिरं जीवितः ॥
एतद्भीमसुतस्य साधु निधनं मन्ये स्वसूनोर्वधात् ।
छोरा आफनु मर्न चाहिँ त बरू मीतैको छोरा मरोस् ॥ १ ॥

पार्थ त्वयाहं योद्धुमशक्तः ।
किन्तु रथो मे भूमिनिमग्नः ॥
कर्ण किमेतद्वाक्यवचोभिः ।
नाच्न नजान्ने आँगन टेढ़ो ॥ १ ॥ इत्यादि ।

यसै किसिमसित गुमानीले हिन्दीमा र पर्वतीय भाषामा पनि लेखेका छन् । कवि गुमानी पन्तकृत पर्वतीयभाषानुबिद्धाः श्लोकाः

स्वप्नगतस्मरसूनुनिमित्तं ।
कष्मलमाप्तवतीमधिचित्तम् ॥
हेतुमपृच्छदुषामिति बाणो ।
पीड कुठौर कि वैद्य जेठाणो ॥ १ ॥ इत्यादि ।

काठमाडौंमा १७०० सालतिर अथवा करीब तीन सय वर्षअघि राजा प्रतापमल्लको पालीमा नेपाली भाषाको शिलालेख पाइन्छ; काठमाडौंमा

Vedic Archives Digital Preservation Foundation, Chandigarh

यो इज्जत पाउनुभन्दा सयौं वर्षअघि यो भाषाले पर्वतभरी दौड़धूप गरेको हुनुपर्दछ। तर श्लोकचाहिँ दुइ सय वर्ष यता कुनै कुनै विद्वान्हरूले फाट्फुट रचन लागेका हुन्। पं० विद्यारण्यकेसरीको 'द्रौपदीकृत स्तुति' अनि पं० अङ्गिरसको (इन्दिरस ?) 'गोपिकास्तुति', पं० पतञ्जलि (पं० वीर शाली ?)-को 'बाल गोपाल वाणी' त्यसको केहीपछि रघुनाथको 'सुन्दरकाण्ड', अनि अन्त्यमा भानुभक्तको 'सात काण्ड रामायण'—पूर्ण यसरी भानुभक्तमा आएर उद्देश्यले पुस्तक घोप्ट्याई छाना लायो—अनि घरभित्रको रङ्ग रोगन शुरू हुन लाग्यो, हिजोआज हामीहरू भाषाको कोठामा तस्वीर, मेच, पानसहरू यता उता सार्दै खुलाउने प्रयत्नमा लागिरहेछौं—वर्षासित डर छैन, भूकम्पसित छ।

हाम्रो भाषासाहित्यमन्दिरमा छाना लागेको अहिले सत्तरी वर्ष भयो।

भानुभक्तीय रामायण अध्यात्म रामायणको केवल छोटकरी अनुवाद हुनाले त्यहाँका भावको विषयमा केही भन्ने कुरा छैन, तर श्लोक भने उनले घेरैलाई रुचि हुने भाषाशैलीमा बनाए। कोही रामायण लोकप्रिय (चाहे त्यो लोकको योग्यता जस्तो होस्) हुनाको यश मूल रामायणकै श्रीसीतारामको पवित्र चरित्र र त्यसको चित्रणलाई नै देलान्, किनभने रामायणभित्र भानुभक्तको केही विचार छैन, घेरै जनाले आनन्द मानी भाका लाएर रस निल्दै रामायण बाँचेकोले, कवि भानुभक्तलाई पनि यश दिनैपर्दछ। उनीभन्दा अगिका रघुनाथ भट्ट र उनले उही श्लोक उल्था गरेकोमा कत्रो अन्तर छ; तल केही उदाहरण छन्।

अध्यात्म रामायण—दृष्ट्वा हनूमतो रूपं सुरसा पंचयोजनम् ।
मुखं चकार हनुमान् द्विगुणं रूपमादधत् ॥ १९ ॥

ततश्चकार सुरसा योजनानां च विंशतिम् ।
वक्त्रं चकार हनुमांस्त्रिंशद्योजनसंमितम् ॥ २० ॥

ततश्चकार सुरसा पंचाशद्योजनायतम् ।
वक्त्रं तदा हनूमांस्तु बभूवाङ्गुष्ठसन्निभः ॥ २१ ॥

रघुनाथ—त्यो देखी पाँच योजन् वदन उ सुरसाले बढ़ाई बनाई।
दस् योजन्का हनुमान् तब बदन बडो बीस योजन् गराई ॥
तिस् योजन्का हनूमान्, तव वदन पचास् योजनैको तुल्याई।
औंठा मैं भै पस्याका बाहिर भइ कपी भन्न लाग्या भुलाई ॥ १ ॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

भानुभक्त—चार् कोश्का हनूमान देखि सुरसा बिस् कोशको मुख् गरिन् ।
चालिस् कोश् हनूमान् भया र असि कोश् मुख् फेरि जल्दी धरिन् ॥
जल्दी फेर् हनुमानले छबिस कोश्को रूप् गराई बस्या ।
फेर् दूई सय कोश् मुखै जब गरिन अङ्गुष्ठ झैं भै पस्या ॥ १ ॥

अर्को

अध्यात्म रामायण—चित्रकूटगिरौ पूर्वमेकदा रहसि स्थितः ।
मदंके शिर आधाय निद्राति रघुनन्दनः ॥
ऐन्द्रः काकस्तदागत्य नखैस्तुंडेन चासकृत् ।
मत्पादांगुष्ठमारक्तं विददारामिषाशया ॥

रघुनाथ— चित्रकूट गिरिका शिखरैमा ।
एक दिन् प्रभु सुत्या सहजैमा ॥
काख माथि शिर राखि निदाया ।
इन्द्रले तहिं त काग पठाया ॥ इत्यादि ॥

भानुभक्त—एक दिन् हे हनुमान, म चित्रकूटमा राम्का नजिक्मा थियाँ ।
मेरा काखमहाँ सुत्या र रघुनाथ् हात्को तकीया दियाँ ॥
मेरा लाल् दुइ पाउ देखिकन काग् आयो र ठूँग्यो जसै ।
मेरा यी दुइ पाउदेखि त रगत् पो बग्न लाग्यो तसै ॥१॥

पं० लेखनाथलाई नभेटुन्जेलसम्मका तमाम नेपाली कविताहरूमध्ये भानुभक्तको रामायणमा आफ्नै किसिमको सम्पूर्णता छ, लालित्य पनि छ । तसर्थ त्यो छाँटका श्लोकलाई हामी भानुभक्तीय श्लोक भन्दछौं—विशेष गरेर शार्दूलविक्रीडित छन्द केवल उच्चारण र बोलचालमा भर परेर लेखिइएकोलाई, जस्तो आजकल शुद्धतासित संस्कृत पदहरू हाली वसन्त तिलका वा वंशस्थमा लेखिएको श्लोकलाई हामी लेखनाथीय श्लोक भन्दछौं । भानुभक्तीय श्लोकको विषयमा कुरा गर्दा हामीले पं० होमनाथका पुस्तकहरू र बड़ा काजी मरीचिमान सिंहको 'सत्य हरिश्चन्द्र वर्णन'-लाई बिर्सनु हुँदैन—ती तुल्य योग्य छन् । फेरि भानुभक्तकै विषयमा कुरा गर्दा —अझ नेपाली भाषाकै कुरा गर्दा हामी मोतीराम भट्टलाई कहिल्यै बिर्सन सक्तैनौं ।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

अहिलेका कवि र लेखकहरू जस्तै जत्रै पास होऊन, जस्तै फूल जत्रै फल होऊन, तर भानुभक्त र मोतीराम जरा र फेद हुन्; यो फल नभए त्यो फल हुन्थ्यो, यो फूल नभए त्यो फूल हुन्थ्यो, परन्तु भानुभक्त र मोतीराम नभएका भए हाम्रो साहित्य-पल्लवको रूप यस्तो सम्म पनि हुँदैनथ्यो। यस बेला हामीले फेरि पं० होमनाथलाई बिर्सनु हुँदैन।

भानुभक्तले थुनुवा भएको अवस्थामा रामायण र मृत्युशय्यामा रामगीता अनुबाद नगरेका भए, मोतीरामले भानुभक्तको जीवनी लेखी बस्वेळ प्रशंसा गरेर उनका रामायणको प्रचार नगरिदिएका भए, होमनाथले कृष्णचरित्र र महाभारतका पर्वहरूको उलथा नगरेका भए सम्भव थियो हाम्रो राष्ट्रभाषा हुनामा हिन्दी उत्सुक हुन्थ्यो,—सम्भव थियो हामी हाम्रो भाव आज हिन्दीमा प्रकट गरिरहेका हुन्थ्यौं, हाम्रो आफ्नो जातीय भाषा नभएको हुन्थ्यो, अनि जातीय गौरव--!

रामायण भानुभक्तको नभए तापनि त्यो हामीलाई चाखिलो पारी पढाउने उनै हुन्, त्यसैले ती गुरु हुन्, पूज्य हुन्। बाल्यावस्थामा धाईले भानुभक्तको रसिलो मंत्र पढ़ेर लोलाइदिएको आँखाभित्र गुम्सी बूढ़ी कविताकुसुम फुलेर उम्दै झुलेको सपना देख्ने हामीहरू कवि भानुभक्त आचार्यका ऋृणी छौं।

---

हामीले पछि जान्यौं त्यो, अघि जन्म लिनेहरू।
ती बामे अघि नै सर्छन्, अघि नै बोल्न जान्दछन्॥
—बालकृष्ण शम्शेर।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# भानुभक्त र मोतीराम

[ पण्डित रुद्रराज पाण्डेय, एम० ए०, नेपाल। ]

नेपाली साहित्यक्षेत्रमा पण्डित मोतीराम भट्टले साह्रै नै उच्च स्थान पाएका छन्। हुन पनि जुन बखतमा भाषातर्फ मानिसको दृष्टि गएकै थिएन, ठूला ठूला विद्वान् कहलाउँदाहरूले संस्कृत र अंग्रेजीलाई नै अङ्कमाल गरेर नेपाली भाषालाई तुच्छ सम्झी तिरस्कार मात्र गर्दथे, त्यति मात्र कहाँ हो र! संस्कृतका साहित्य महारथीहरू भाषामा लेख्नु नै बेइज्जती र नालायकी सम्झन्थे, उता नवयुवकसमाज "तुम क्या खाएगा", "कहिए जनाब!" इत्यादि बोली बोल्नैमा आफूलाई सभ्य सम्झन्थ्यो—त्यस्तो हतोत्साही परिस्थितिमा हाम्रो पनि भाषा हो; यसमा राम्रा राम्रा पुस्तकहरू लेख्न सकिन्छ भन्ने भाव पैदा गराउन मोतीरामले कम उद्योग गरेका होइनन्। आज बस्वेल नभएको भए जोन्सनको साहित्यक्षेत्रमा त्यो स्थान हुने थिएन। त्यस्तै कवि मोतीराम नभएको भए श्रीभानुभक्तलाई यत्रो आदर र श्रद्धाको दृष्टिले हामी कदापि हेर्ने थिएनौं।

पं० मोतीराम भट्टको १९२३ साल भाद्र कृष्ण अमावस्याको दिन जन्म भएको हो। यिनका बाज्ये पं० मणिराम उपाध्याय ठूला नैष्ठिक विद्वान् हुन्। यिनका बाबु पं० दयाराम भट्टले नेपालका सुप्रसिद्ध विद्वान् पं० रामशर्मा पाण्डेयकी ज्येठी छोरी विवाह गरेका हुन्। मातृकुल पितृकुल दुवै विद्याविनयसम्पन्न भएकाले पं० मोतीराम भट्ट पनि बालककालदेखिनै होनहार बालक भएर निस्के। पछि ८ वर्षको उमेरमा बज्यै काशीवास गएकाले काशीमै यिनको उपनयन भयो। उस बखतमा उनका बाबुलाई के लहड चल्यो उनलाई फार्सी पढ़ाउने स्कूलमा भर्ना गरिदिए। उनी पनि दत्तचित्त भएर विद्यालाभ गर्न लागे। हुन पनि थोरै नै समयमा उनलाई फार्सीमा पूरा दखल भइसकेको थियो। उता सङ्गीतमा पनि केही रफत गरेका थिए। गजलको रचना गर्न पनि लागेका थिए। १९३७ सालमा विवाह गर्नाका निमित्त नेपाल आएर यहीं बसी संस्कृत अंग्रेजी दुवै पढ्न थाले।

पं० मोतीराम भट्टको कल्पनाशक्ति जबर थियो। उनको हृदयमा मधुरता भरिएको थियो। एक दिन वाग्मतीको किनारामा घाँसी घँसिनी-हरूले परस्परमा गाउन लागेको रसिया भन्ने गीतले उनको कवित्वशक्तिलाई जाग्रत तुल्याइदियो। भाषामा पनि भावपूर्ण कविता हुन सक्छ, अवश्य

Vedic Archives Digital Preservation Foundation, Chandigarh

हुन सक्छ, भन्ने विचार उठ्यो। त्यसै बीचमा उनका एउटा मित्रको विवाह भएको थियो। उनी पनि निम्तिएका थिए। दुलहीको घरमा रातभर मानिसहरूले श्लोक भन्न थाले। त्यसैमा एउटालाई भानुभक्तको बालकाण्ड आउँदो रहेछ उसले भटभटाउन थाल्यो। पं० मोतीरामको ध्यान त्यतै गयो। अब कसरी भानुभक्तको रामायण फेला पार्ने भन्ने धून सवार भयो। मातृभाषातर्फ प्रेम पनि बढ्दै गयो।

३८ सालमा मोतीरामलाई फेरि बनारस जानुपर्‍यो। उहीं स्कूलमा भर्ना भई अंग्रेजी पढ्न लागे। त्यसका साथसाथै आफ्ना भाषामा कविता पनि लेख्न थाले। उनले मित्रहरूको एउटा मण्डली नै खड़ा गरी साहित्यको चर्चा उठाए। 'मनोद्वेग प्रवाह' भन्ने उनको पहिलो पुस्तक हो। फेरि त्यस बखतसम्म नेपाली भाषामा एक पुस्तक पनि छापिएको थिएन। पहिले पहिले भारतजीवन प्रेस काशीमा एउटा मित्रलाई खोल्न लगाई बालकाण्ड छपाएको हो। त्यसैले मातृभाषाको पुस्तक पहिले छपाउने जस पनि उनैलाई छ।

बालकाण्डको नेपाली समाजले ठूलो आदर गरेकाले कविको उत्साह झन् बढ्यो। पछि ठूलो उद्योग गरी सातै काण्ड रामायण फेला पारी छपाए। उनको त्यो मेहनत आज कस्तो फलिरहेछ सबैलाई थाहै छ। उता पत्र-पत्रिका नभई भाषाको प्रचार हुँदैन, साहित्यमा रुचि बढ्दैन, प्रतिभाको विकाश हुन पाउँदैन भन्ने पनि उनले खूब बुझेका थिए। त्यसैले मातृभाषामा भारतजीवन अखबार उनैले प्रकाश गराएका हुन्। काशीमा यिनका मित्र-हरूमध्ये उमेरमा पाका भए तापनि हिन्दी साहित्यका जन्मदाता स्वर्गीय हरिश्चन्द्र पनि हुन्। हिन्दी र नेपाली साहित्यका यी आदि सेवकहरूको परस्परमा यत्रो मेल हुनु पनि एउटा अ तर्कै घटना हो।

काशीमा कविले हरेक विषयमा कविता लेख्न थालिसकेका थिए। त्यहीं भानुभक्त आचार्यमाथि श्रद्धा देखाउन, 'तत्रादौ कविकुलमुकुटमाणिक्य भानुभक्ताचार्यवर्णनम्' भन्ने १२ श्लोकको कविता लेखी नेपाली जनतालाई वीरपूजा सिकाएका हुन्। उहीं यिनले गजेन्द्रमोक्ष, भाषापञ्चक, प्रपञ्चक-शकुनौति, स्वप्नाध्याय, गफाष्टक नाम गरेका ग्रन्थहरू बनाएका हुन्।

४४ सालमा पं० मोतीरामजी नेपाल आए। उनको मातृभाषा सेवा गर्ने हौसला झन् बढ़ेकै थियो। पं० कृष्णदेव पाण्डेय उनको नातादार पनि भएकाले र उनी र उनका भाइ नरदेवसँग उनको मित्रता पनि भएकाले

Vedic Archives Digital Preservation Foundation, Chandigarh

नेपाली भाषाको पुस्तक बिक्री गर्न मोतीकृष्ण कंपनी नामको एउटा पुस्तक-पसल ठहिटीमा उनैको उद्योगले खुलेको हो। त्यहीं साहित्यको चर्चा पनि चलन थाल्यो र समस्यापूर्तिद्वारा कविताहरू बन्न थाले। रसिकहरूको मण्डली जम्न थाल्यो र एउटा परिष्कृत साहित्यिक वातावरणै सृष्टि भयो। कवि-वर नरदेव, लक्ष्मीदत्त पन्त, गोपीनाथ लोहनी, भोजराज पाण्डेय, राजीवलोचन जोशीहरू कविता लेख्दथे, साहित्यको रस चाख्दथे, भाषालाई अँगाल्दथे। नेपाल आए पनि कविजीले पठन पाठन बन्द गरेको थिएन। फेरि दरबार हाइ स्कूलमा भर्ना भई अंग्रेजी पढ्न थालिसकेका थिए। यहीं बड़ा काजी मरीचिमानसँग यिनको मित्रता पनि भएको हो। ४७ सालमा यिनी सेकेण्ड क्लास (आजकलको नवम् श्रेणी) मा पढ्दथे। भानुभक्त हाम्रा आदिकवि हुन्। पहिले भाषामा यिनैले कलम चलाइदिए। यिनको जीवनी लेख्नैपर्छ भन्ने जुन सङ्कल्प उनले काशीमा गरेका थिए सो पूरा गर्न त्यस विद्यार्थी उमेरमा नै उनी छटपटाउन लागे। "तँ चिता म पुर्‍याउँछु" भन्ने ईश्वरीय सिद्धान्तै छ। पं० भानुभक्त नेपालमा सु० धर्मदत्तकहाँ डेरा गरी बस्थे भन्ने उनले सुइँको पाए। अब उनी झन् उत्साहित भए। सुब्बासँग भेटी उनका विषयमा टिपोट तैयार पारे। पछि ४८ सालमा कविका छोरा पं० रमानाथसँग भेट हुँदा उनी झन् प्रसन्न भएर चाँड़ै नै भानुभक्तको जीवनी पनि लेखी प्रकाश गराइछोड़े।

पं० मोतीरामजीको विद्यार्थीजीवन पनि कम चहकिलो होइन, उनी फष्ट क्लासमा फष्टै भएका थिए। इन्ट्रेन्स पास गरेपछि एफ्० ए० पढ्न पनि थालेका थिए। कलकत्तैमा उनको पढ़ाइ शुरू भएको थियो। स्वास्थ्य ठीक नभएकाले उनी एफ्० ए० पास हुन सकेनन्। उतैबाट रोगग्रस्त अवस्थामा नेपाल फर्की झन् झन् बिरामी हुँदै गएर ५३ सालमा यो असार संसारलाई छोड़ी उनी परमधाम भए। उनको छात्रजीवन सम्म पनि समाप्त हुन पाएन।

नेपालीमा उनले लेखेका गजेन्द्रमोक्ष भाषा, प्रह्लादभक्ति कथा, प्रियदर्शिका नाटक, शकुन्तला नाटक, संगीतचन्द्रोदय, अद्यावधि लोक-प्रसिद्ध छन्। यीमध्ये दुइ नाटक प्रकाश हुन सकेका छैनन्। यिनी आफ्ना मित्रहरूमा पनि कवितैद्वारा लेखापढ़ी गर्दथे।

विद्यार्थी जीवनमा नै यतिका पुस्तक लेखी मातृभाषाप्रति एउटा नयाँ दृष्टिकोण खड़ा गराई भाषाको गौरव बढ़ाउने मोतीरामै हुन्। उनी

[ बाँकी पृष्ठ ३१ मा

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# भानुभक्तको एउटा नजानिएको कविता

[ पण्डित तारानाथ शर्मा, वीरगंज। ]

नेपाली भाषामा पद्यरचना गर्ने कविहरूमा स्वर्गीय कवि भानुभक्ताचार्यजी नै आदिकवि हुन भन्ने कुरा त सबैले मानेकै छ। यसका अतिरिक्त साउँ अक्षर सम्म चिह्नेका बालकहरूदेखि बुढ़ापाकासम्म सबैले कत्ति गाह्रो नभै सरलतासँग बुझ्न सक्ने अत्यन्त सरल पद्यहरूमा मर्यादा भगवान् श्रीरामचन्द्रका पुण्य पावन चरित्रलाई पद्यबद्ध गराएर सम्पूर्ण नेपाल साम्राज्यका आबालवृद्ध नर-नारीहरूलाई रामरसामृत पान गराउने श्रेयः पनि कविवर भानुभक्तजीलाई नै प्राप्त छ। यसकारणले सम्पूर्ण नेपाली समाज स्वर्गीय कविवर भानुभक्तजीका चिरऋणी छ।

भानुभक्तजी सशरीर आज यस नश्वर संसारमा विद्यमान नभए तापनि तिनका अनुपम कृति भानुभक्तीय रामायणरूपी यश-शरीरले "सजीवतियशोयस्य कीर्त्तिर्यस्य स जीवति" भने अनुसार आज पनि कविवर भानुभक्तजी कीर्त्तिरूपी शरीरले जीवितै छन्। त्यति मात्र होइन किन्तु सम्पूर्ण नेपाली समाजका घरघरमा विद्यमान छन्। यस्ता आफ्ना भाषाका आदिकवि भानुभक्तजीका जीवनसम्बन्धी कुराहरू हामीले जानिराख्नु पनि अत्यन्त आवश्यक छ किनभने देशका उत्तम पुरुषहरूको जीवन-चरित्र साहित्यको अमूल्य वस्तु हो। तर तिनका जीवनसम्बन्धी घटनाहरू पत्ता लाउन आजसम्म कुनै सज्जनले पनि तिनका जन्मभूमिसम्म जाने कष्ट

---

( पृष्ठ ३० को बाँकी )

बुढ़ेसकालसम्म बाँचिदिएको भए भाषाको कत्रो उन्नति हुन्थ्यो कल्पना मात्र गर्न सकिन्छ। पठन पाठनको बेफुर्सती अवस्थामा त उनले कत्रो करामत गरेर देखाए भने तन्मय भएर साहित्यसेवामा डुब्न पाएको भए उनको प्रतिभा कत्रो झलझलाकार भएर फुर्न पाउँथ्यो अनुमान मात्र गर्न सकिन्छ*।

---

* यो लेख पं० नरदेव पाण्डेयको हालै प्रकाश भएको कविवर मोतीराम भट्टको जीवनीको आधारमा लेखिएको हो। त्यसले लेखक उहाँको बहुतै ऋणी छ।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

उठाएर त्यहाँका बूढ़ापाका, संगी, सम्बन्धी र तिनका वंशजहरूसँगसमेत सोधपूछ गरेर विस्तृत जीवनी संग्रह गर्ने साहस र कृपा गरेका छैनन्। यो अत्यन्त अफसोसको कुरा छ।

भानुभक्तजीपछि भाषामा अहिलेसम्म अनेक कविहरूको उदय भएको छ। तिनका सत्परिश्रमले अब हाम्रो भाषासाहित्य पनि नाना विषयमा नानावलीका छन्दहरूले भरिँदै आएको छ तथापि मातृभाषाका अत्यन्त सरल शब्दमा पद्य रचना गर्ने गौरव कविवर भानुभक्तजी भैँ अरू कसैले प्राप्त गर्नसकेका छैनन्।

बालककालमा भानुभक्तजीका सम्बन्धको कैयौं कुराहरू मैले कर्नेल शिवशङ्कर उपाध्यायका साहिँला छोरा मेरा फुपाज्यू स्वर्गीय सुब्बा गौरीनाथ उपाध्यायबाट सुनेको थिएँ तर ती बालककालमा सुनेका कुरा अहिले विस्मृतिका गम्भीर गह्वरमा गएर विश्राम लिइसकेका हुनाले अब केवल त्यसको पछितो गर्नका सिवाय अरू केही छैन। तीमध्ये एकदिनको घटनाको सिर्फ एउटा पद्य सम्म मलाई अहिले संझना छ।

भानुभक्तजी कहीं हिँड्दा अथवा कहीं गएर वास बस्दा देखे सुनेको घटना उत्निखेरै पद्यबद्ध गरेर अर्तीरूपमा उसलाई दिएर जाने गर्ने गरेको कुरा त प्रसिद्धै छ। यसका अतिरिक्त नेपालमा बस्ता पनि भानुभक्तजी काम विशेषले कसैकहाँ गएमा केही न केही पद्य बनाएर उसका ढोकामा खरीले लेखेर अथवा कागतमा लेखेर उहाँका कसै मानिस-लाई दिएर जाने गर्थे। नेपालमा कैयौं ठाउँ भानुभक्तजीले त्यसो गरेको देखेको छु। बुढ़ापाकाहरूसँग सोधपूछ गरेर पत्ता लगाए त्यस्ता कैयौं फुटकर पद्यहरूको पनि पत्ता लाग्नेछ भन्ने कुरा पनि मैले फुपाज्यूबाट सुनेको छु। त्यसै गरी भानुभक्तजीले फुपाज्यूकहाँ पनि उहाँका पिता कर्नेल शिवशङ्कर उपाध्यायसँग भेट गर्न आउँदा भेट नभएर फर्कनुपर्दा उहाँका तबेलाका ढोकामा खरीले एउटा पद्य लेखेर छोड़िगएका थिए भनेर फुपाज्यू भन्नुहुन्थ्यो। त्यो पद्य यही हो :—

आएँथें मनका कुरा चरणमा भींजो गरौं क्यै भनी।
दर्शन् पाइन फर्कि जान्छु अहिले हाजिर् जनाई अनी॥
हींड़े घर् तिर आज ता घर पुगी फर्केर आई अब।
गन्थन् यी मनका कुरा चरणमा बिन्ती गरौंला सब॥

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# थुनुवा कवि

[ श्री रूपनारायण सिंह, बी० ए०, बी० एल०, दार्जीलिङ। ]

"………आफूले दुइ वर्ष काम गरेको कागत पत्र र आमद्‌नी खर्चको स्याहा बुझाउँदा केही सरकारिया बाँकी लागेछ र यिनी पाँच महीनासम्म कुमारीचोकमा थुनिएछन्।"

"………बिन्ती गरी पठाउँदा पनि भानुभक्तको आपत्ति छुटेन। मनमा बड़ा दिक्‌दारी भै चार महीनामा अयोध्या काण्ड, अरण्य काण्ड, किष्किन्धा काण्ड र सुन्दर काण्डको भाषा श्लोक यिनले बनाए।"

—मोतीराम भट्ट।

काममोहित भएका क्रौञ्चका जोड़ामा भालेलाई निष्ठुर व्याधाले मारिदियो। क्रौञ्ची यस्तो अप्रत्याशित आघातले व्याकुल भई। करुण स्वरमा विलाप गर्न लागी।

कविले यो हृदय-स्पर्शी बियोग देखे। पोथीको आर्त्तनाद कविले सुने। कविको कोमल हृदयमा ठूलो चोट लाग्यो।

कविले कठोर व्याधालाई सराप दिए। आदिश्लोकमा यो सराप कविका कण्ठबाट निस्क्यो। पक्षीको त्यो असह्य व्यथाले कविको हृदय विद्ध गरेको थियो। रात दिन त्यो व्यथाले कविलाई छोड़ेन। यही व्यथालाई जय गर्ने छलले कविले रामायण रचना गरे।

महर्षि बाल्मीकिको रामायण नामक संस्कृत काव्यको रचना यसरी भयो। प्रायः चार हजार श्लोक भएको महान् काव्य-ग्रन्थले हजारौं वर्षअघिदेखि आजसम्म हिन्दू नर-नारीहरूलाई धर्म, राजनीति, भक्तियोग, कर्मयोग आदि विषयहरूको शिक्षा दियो औ दिइरहेको छ।

कति युगपछि।

कुमारीचोकका खोरमा एउटा मध्यबयस्क सुपुरुष थुनिएका छन्। कोठाका दलिन ती एकाग्रपूर्वक निरीक्षण गरिरहेका छन्। दृष्टिमा अपूर्व ज्योति छ। दाहिने हातले ती आफ्नो चिउँड़ो वेला बेलामा मुसार्दैछन्।

खोरमा ती थुनिएका छन्। तर खोरका प्राचीर नाघेर, त्यसको धूलो मैलोदेखि अनेक टाढ़ामा छ तिनको मन औ प्राण।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

कविगुरु वाल्मीकिका काव्यका पात्र पात्रीहरू छन् तिनका निरन्तर सहचर। कारारुद्ध यी मानिस तिनीहरूसित कैले अयोध्या पुग्छन्। विराट् छ अयोध्या नगरी—"अमरावति कान्तिपुरी नगरी" जस्तै। फेरि कैले पुग्छन् दण्डक अरण्य अथवा किष्किन्धामा।

भरतको कर्त्तव्य-ज्ञान पढ़ेर तिनको शिर भक्तिले आफै निहुरन्छ, सीताको पति-प्रेमले तिनका आँखा सजल पारिदिन्छ। लक्ष्मणको भक्तिले तिनका आँखाबाट हर्षका आसु खसाइदिन्छ औ रामका विरहले तिनको आर्द्र हृदय विद्ध गर्छ।

भानुभक्ताचार्यले यसरी खोरमा बस्दा नेपाली भाषामा अध्यात्म रामायण जस्तो अनमोल ग्रन्थ तर्जुमा गर्ने निश्चय गरे। कविले अघि नै, प्रायः एघार वर्ष पूर्व नै बालकाण्ड उल्था गरिसकेका थिए। चार महीनामा खोरमा बसेर तिनले अरू चार काण्ड उल्था गरे।

चार महीना थुनुवा छँदा जुनसुकै मानिसलाई दिक्दारी लाग्छ। विद्वान् श्रीमोतीराम भट्टका भनाइअनुसार "मनमा बड़ा दिक्दारी भै" कविले रामायणका चार काण्डहरूका भाषा-श्लोक बनाए। हुन पनि सक्छ। आधुनिक एउटा लब्ध-प्रतिष्ठ नेपाली कविले भने झैं—

"आ चिन्ते मनमोहिनी तँ वर आ, साँची रहीछस् तँ आ।
दिक्दारी, भगिनी लिएर सँगिनी, चिन्ते तँ ता आ, न जा।
दिक्दारी तँ त वाक्क पारी मन यो, संसारदेखि हटा।
चिन्ते लौ परमार्थ दर्शन दिशा, तँले नछोड़ी लगा।"

कुमारीचोकमा रुद्ध हुँदा कविलाई चिन्ता पर्न गयो होला – स्वाभाविक हो। चिन्ताले दिक्दारी भगिनी पनि सँगिनी लिएर अवश्य कविको मन संसारदेखि वाक्क पारिदिने चेष्टा गरिहोली।

तर कवि भानुभक्त संसारदेखि वाक्क भएनन्। तिनको उदार, विशाल मन संसारदेखि विमुख भएन। परमार्थ दर्शनदिशापट्टि लाग्यो—साँचो हो। अघिदेखि नै लागेको थियो।

कवि भानुभक्ताचार्य कवि मात्र होइन्, दार्शनिक थिए, नैयायिक थिए औ थिए असल मान्छे।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

"सरकारिया बाँकी"-को क्षुद्र अभियोगमा कवि थुनिए। तर ती विशाल हृदयका पुरुष थिए। यसरी थुनिँदा तिनले सरकारसित विरोध गरेनन्। कसैका टाउकामा दोष लाउने चेष्टा गरेनन। हुने हुनामी टर्दैन भनी तिनले खोरमा बसेर लोकोपकारका व्रतमा आफूलाई तल्लीन पारे।

'मान् माथी पनि भुक्तमान् थपि' दिए हरिले। तर हरिप्रति तिनको विश्वास औ भक्ति रतिभर पनि विचलित भएन। उल्टो ईश्वर-प्रति कविको भक्ति झन् बढ्न गयो।

कविले एउटा सुविज्ञ दार्शनिकका दृष्टिले आफूमाथि आइलागेको यो अभियोग औ आपद्‌लाई हेरे तथा तिनको मीमांसा गरे। संसारमा सुख र दुःखको लीला मानिसहरूको भ्रम औ भूल, तिनको पाप-पुण्य, मनुष्य जीवनका दुःख र दारिद्र्य यी सबै तिनको दरदी हृदयले एक एक गरी अनुभव गर्‍यो। यी सबैमा कविले एउटा कुरा देखे—दुर्बल असहाय मानिस।

अनेक युगअघि एउटा महर्षिका हृदयमा एउटा सद्य विधवा भएकी क्रौञ्चपोथीको करुण-क्रन्दनले असह्य आघात लागेको थियो। अहिले कुमारीचोकमा थुनिएका ऋषि कवि भानुभक्तको हृदय पनि दुर्बल असहाय मानिसका दुःख औ दारिद्र्यले द्रवीभूत भयो।

आफूमाथि आइलागेको त्यत्रो ठूलो आपद्‌को तिनलाई स्मरण नै रहेन। असहाय मानवलाई यथार्थमा "मान्छे" बनाउने विचार लिएर कविले कविता गरेर खोरका कष्ट प्रफुल्ल मनले सह्य गरे। अंग्रेजीमा कुनै विद्वान्‌ले भनेको छ।

"Stone walls do not a prison make,
Nor iron bars a cage"

हुन पनि कवि भानुभक्तका शरीरलाई कुमारीचोकले बन्दी पारेर थुनिराख्यो—तर असल भानुभक्तलाई थुन्ने संसारमा शक्ति थियो कसको ?

कल्पनाको उन्मुक्त आकाशमा उड़ी उड़ी, सृष्टिका सुन्दर, पवित्र औ अनमोल जिनिसहरू संग्रह गरेर कविले नेपाली जातिलाई प्रदान गरे।

खोरमा ता तिनको शरीर मात्र थियो, मन कविको आफ्नै थियो। स्वतन्त्र थियो। मुक्त थियो। यही कारण थुनुवा कविको हास्य-रसप्रियता कुमारीचोकका कालकोठरीमा पनि उस्तै रह्यो जस्तो तनहुँका अति बेस

Vedic Archives Digital Preservation Foundation, Chandigarh

पहाड़को देशमा। कविले खोरमा हाँस्न बिर्सेनन्, हँसाउन छोड़ेनन्। लामखुट्टेको गीत औ उपियाँको नाचले असल कवि, सुकवि औ महाकविलाई मात्रै आमोद गराउँछ।

खोरमा रुद्ध भएका कविको यो चित्र औ चरित्र मनमा गन्दा औ गुन्दा भानुभक्ताचार्यका सम्बन्धमा तल लेखिएका कुरा मुक्त कण्ठले भन्नुपर्छ।

"We are the music-makers,
And we are the dreamers of dreams
Wandering by lone sea breakers,
And sitting by desolate streams;—
World-losers and world-forsakers,
On whom the pale moon gleams:
Yet we are the movers and makers
Of the world for ever, it seems."

कवि भानुभक्त कल्पनामा विभोर रहन्थे, सपना देख्थे, संसार एकचोटि तिनले हराए। संसारदेखि पृथक् खोरमा तिनलाई बस्नुपर्‍यो।

तर तिनले के गरे? संसारदेखि पृथक् खोरमा बसेर तिनले नेपाली साहित्य तथा जाति हल्लाइदिए—रचना गरे।

---

भानूभक्त भनी प्रसिद्ध नरमा जस्को त नाऊँ पनी
घर् तिन्को तनहूँ त बेंसि चुंदि हो गाऊँ छ रम्घा भनी।
प्रख्यात् छन् सब लोकमा ति गुणि हुन् विद्वान् कवी खुब् थिया
यो प्रश्नोत्तर बुझ्नलाइ सजिलो भाषा बनाई दिया॥

—भानुभक्त।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# कवि भानुभक्तको प्रिय स्मरणमा

[ प्रोफेसर कृष्णदास प्रधान, एम०ए०, कालिम्पोंग। ]

स्वदेशदेखि बाहिर तीन चार पुस्तादेखि बसाइँ सरेर आउने नेपालीहरूका सन्तानमध्ये हामी कतिलाई कबि भानुभक्तको पूरो जीवनवृत्तान्त थाहा छैन औ जे जति थाहा भएको तिनीबाट लेखिएका रामायणका सात काण्ड औ मोतीराम भट्ट लिखित तिनको संक्षिप्त जीवनवृतान्तबाट मात्र हो तापनि तिनलाई नेपाली साहित्यका निर्माणकर्ता भनी तिनको स्मरण पूरो भक्ति र प्रेमसित गर्छौं।

जुनै पनि जातिमा धार्मिक कुरोको लेख रूपमा पहिले प्रचरण भएकोमा उस उस जातिको साहित्यको निर्माण भएको बुझिन्छ। अंग्रेजी साहित्यको इतिहासको पाना पल्टाएर हेर्दा यो कुरो भएको पाइन्छ। भारतवर्षमा संस्कृत, बंगला, हिन्दी, गुजराती, मराठ्ठी प्रभृति भाषामा तिनै तिनै भाषाका साहित्यको निर्माण यसरी नै भएको देख्नामा आउँछ। यूनान, मिश्र, चीन, जापानको साहित्यतिर नजर लाउँदा उसरी नै उहाँ उहाँको साहित्यको शुरू भएको पाइन्छ। हाम्रा स्वदेश नेपालभित्र यसै भएको प्रत्यक्ष देखियो। रामायण जस्तो वृहत् धार्मिक ऐतिहासिक ग्रन्थ जसबाट सुन्दर छन्दमा निज भाषामा अन्य भाषाबाट अनुवाद गरी जनतामा प्रचार गरियो तिनी भाषामा साहित्यका जन्मदाता भए भन्नामा कति भूल देखिँदैन। कवि भानुभक्त जैलेसम्म नेपाली भाषा र नेपाली साहित्यजगत्‌मा रहलान् तैलेसम्म चिरस्मरणीय रहनेछन्। तिनले आजको दिनदेखि ८०-९० वर्षअघि देश र देशवासीको उस वेलाको स्थितिमा भाषाको लेखनशैलीलाई एउटा मार्ग तोकिदिए जसले गर्दा सकल देशवासीमा एउटा सरल ढाँचाले बोलिने औ लेखिने भाषाको रूप बसालिन गयो भनी अनुमान गर्न सक्छौं। भारतवर्षका अन्य भाषाहरूलाई धार्मिक कुरोको प्रकाशन र प्रचरणले एउटा निश्चित रूप लिनालाई जतिको शीघ्रता प्राप्त भयो उत्तिको शीघ्रता भर्खरै जन्मेको नवीन नेपाली भाषालाई पनि प्राप्त भएको देख्ता यस तीव्रगतिले हाम्रा भाषाले यस खुट्‌किलासम्म पुग्न सकेकोमा कवि भानुभक्तप्रति विकाश हुँदै गरेको नेपाली साहित्य भारी ऋणी छ भन्नामा केही अत्युक्ति देखिँदैन। [ बाँकी पृष्ठ ३८ मा

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# भानुभक्त कवि तथा आदर्श पद्यानुवादक

[ श्री पुष्कर शम्शेर जङ्ग बहादुर राणा, नेपाल । ]

भानुभक्त नेपालका आदिकबि होइनन् तापनि उनीभन्दा अगाड़िका कविबाट न पुस्तक बन्न लायकका नेपाली कविता निस्के, न नेपाली भाषाको रूप खड़ा गर्न केही सहायता मिल्यो। कोही हिन्दीपट्टि ढल्के, कसैले संस्कृत श्लोकमा नेपाली पुच्छर मात्र गांसे। उसैले भानुभक्तलाई आदिकवि भन्नु अत्युक्ति होइन।

भानुभक्तले अध्यात्म रामायणको श्लोकबद्ध अनुवादबाहेक मौलिक कविता ज्यादै थोरै रचेको देखिन्छ, तापनि उनमा कवित्वशक्ति यथेष्ट थियो भन्ने उनको रामायण र मोतीराम भट्टले लेखेको उनको जीवन चरित्रबाट देखिन्छ। विन्तिपत्र लेखे पनि कवितै छ, मित्रलाई सानो खेस्रो लेखेर छोड़्दा पनि कवितै छ, देशको परिस्थिति र कालको विचार गर्दा उनको मनमा मौलिक ग्रन्थ लेख्ने ख्याल नआउनु स्वाभाविकै हो। तर उसले लेखेको भए सक्थे भन्ने अनुमान गर्न सकिन्छ, किनभने उनमा कविताशक्ति मात्र होइन साहस पनि प्रशस्त थियो। रणभूमिमा तरवार नचाउनु मात्र साहस होइन, दूषे बालक भाषाद्वारा त्यत्रो ग्रन्थ श्लोकैमा उल्था गर्न कलम उठाउनु सानो साहस हुँदैन। कविको साहस कविले नै,

---

[ पृष्ठ ३७ को बाँकी ]

यद्यपि आज तिनको चोला उठेको ७० वर्ष भयो तर तिनले लेखेका रामायणको ज्योंका त्यों भाषामा अध्ययन लाखन् नेपाली गृहमा भइरहेको छ औ त्यस धार्मिक ग्रन्थको अमृत पान गरी आफ्ना आत्मालाई पुष्टि दिइरहेका छन्, यसमा लाखन् नेपालीले तिनलाई धन्य धन्य भन्दै स्मरण गर्छन् औ गर्नेछन्।

कवि भानुभक्तका पूर्ण जीवनवृत्तान्त औ लेखहरूको खोज गरी प्रकाश गर्न पाए हाम्रो भाषाको साहित्यको इतिहासको प्रथम अध्याय पूरो हुनेछ। यस खोज र प्रकाशको भारा नेपाली साहित्यका नवीन रचयिता-हरूमा नै पर्छ भन्ने कुरो त साफ छ।

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

लेखकको साहस लेखकै ने बुझ्दछ। फेरि थुनिदा मानिसको मन खिन्न हुन्छ, हात उठ्तैन; त्यस वेलामा कविता आए पनि कि आफ्ना दुःख-दर्दको पुकारा निस्कन्छ, कि रिसको उद्गार अथवा अरूको निन्दा। त्यस्तो अवस्थामा धैर्य राखी खोरलाई एकलासको गुप्त कोठा सम्झी सबै रसले पूर्ण भएका चार काण्ड रामायण सरल र रसिलो पारी—चार महीना भित्रै अनुवाद गर्नु लरतरो कुरा होइन।

उसमाथि पनि पैसा कमाउने आशाको प्रेरणा नभई घाँसीको कुराबाट अर्ति लिई 'धिक्कार हो मकन बस्तु नराखि कीर्ति' भन्ने संभेर मात्र उठान गरेको ग्रन्थलाई मृत्युशय्यामा रामगीता लेखाई टुङ्ग्याउनु प्रशंसनीय हो।

उनले अध्यात्म रामायण अनुवाद मात्र गरेका हुन तापनि उनको अनुवादमा महत्वका धेरै कुरा छन्। ती कुराको विचार गर्न मूल ग्रन्थका दुइ चार श्लोक उनका श्लोकसँग दाज्नु बढ़ता होओइन—

अध्यात्मरामायण—ततः सुमित्रा दृष्ट्वैनं रामं राज्ञीं ससंभ्रमा।
कौसल्यां बोधयामास रामोऽयं समुपस्थितः॥ १॥
श्रुत्वैव रामनामैषा बहिर्दृष्टिप्रवाहिता।
रामं दृष्ट्वा विशालाक्षमालिंग्याङ्केन्यवेशयत्॥ २॥
मूर्ध्न्यवघ्राय पस्पर्श गात्रं नीलोत्पलच्छविं।
भुंक्ष्व पुत्रेति च प्राह मिष्टमन्नं क्षुधार्दितः॥ ३॥
रामः प्राह न मे मातर्भोजनावसरः कृतः।
दण्डकागमने शीघ्रं मम कालोऽद्य निश्चितः॥ ४॥
कैकेयीवरदानेन सत्यसन्धः पिता मम।
भरताय ददौ राज्यं ममाप्यारण्यमुत्तमम्॥ ५॥
चतुर्दश समास्तत्र ह्युषित्वा मुनिवेषधृक्।
आगमिष्ये पुनः शीघ्रं न चिन्तां कर्तुमर्हसि॥ ६॥

अनुवाद—सुमित्राले भन्दा पछि पलक माइका खुलि गयो।
प्रभूलाई देख्ता अधिक मन सन्तोषपनि भयो॥
खुशीले काखमा लीकन जब भनिन् खाउ कछु भनी।
सुनी रामज्यू भन्छन् अब त कति खाँला नि म पनि॥ १॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

गयो खान्या वेला मकन त मिल्यो राज्य वनको।
भरत्ले राज् पाया यहिं बसि गरुन् राज्य जनको॥
विदा बक्स्या जावस् खुशिसित म जान्या छु बनमा।
म चाँड़ै फिर्न्याछू विरह नरहोस् कत्ति मनमा॥ २॥

यसबाट स्पष्टै देखिन्छ केही छोट्याउने विचार राखी मूलको भाव मात्र लिई उनले स्वतन्त्र अनुवाद गरेका हुन्। तर उनको उद्देश्य आफ्ना श्लोकमा पद-लालित्य पार्ने हुनाले शब्दार्थमा एक जात बाँधिएका छैनन्। मूलको ठाड़ो अर्थ मात्र गरेको भए 'अब त कति खाँला नि म पनि। गयो खान्या वेला मकन त मिल्यो राज्य वनको।' ले दिएको मीठोपन बेपत्ता हुन्थ्यो। उच्चारण गर्न कठिन क्लिष्ट संस्कृत श्लोकको अगाड़ि उनका विना परिश्रमले निस्केको देखिने दिलमा चुभ्ने रसिला पदहरू उच्चार्दा जिब्रो र आँखाले सुविस्ता पाउँछ, मन भावमा जम्न थाल्छ।

७० वर्षअगाड़ि बोल्ने भाषामा लेखिएको हुनाले उहाँका कैयन् शब्द अप्रचलित भइसकेका र पाखेमा गनिइसकेका छन्, जस्तो—रामज्यू, कछु, खान्या, मकन, जान्याछु, खाँला, इत्यादि। उनले नसकेर यी पद राखेका होइनन् किनभने 'जान्याछु' लाई 'जानेछु' गरेर छन्द भङ्ग हुँदैन। उही कारणले महाकवि शेक्सपियरका कवितामा पनि यस्ता शब्द धेरै परेका छन्।

हाम्रो बाल्यावस्थाको सुनौला दिनको टक परी सुनौला बनेका यी कविका 'गयो खान्या वेला मकन त मिल्यो राज्य वनको।' जस्ता श्लोकले कति पटक हाम्रा गहलाई आँसुले भरे, कति पटक हाम्रो छातीमा भकानु पारे। त्यही वेलादेखि हाम्रा नशा नशामा, हाड़भित्रसम्म पनि यी कविका कविता-रस घुस्न गएर होला, हाम्रा आँखा कान अर्कै किसिमले यति तालीम भइसकेपछि पनि, तारीफ यही छ, यी श्लोक सुन्ने साथ माथि लेखिएका शब्दहरू सहसा खट्कँदैनन्। हो, केही विचार गरेपछि जरूरै याद हुन्छ। हाम्रो आँखा, कान, जिब्राको बागडोर प्रथाले समातेको छ। चिप्ले कीरो मानिसले खाने चीज भए तापनि अरूको बहसले हामी त्यसलाई घीन मान्न छोड्दैनौं, न फूलकोपीको वथुवाइ गर्दैमा हामी त्यसलाई छाड्छौं। उसैले धेरैसम्म हृदयङ्गम भएका कुरा हुनाले धेरै विद्वान्उपर ती कविताको असर रहिरहेकै छ। झन् अपठितको के कुरा? झन् त्यस समयका नेपालीहरूमा यसले कत्रो सनसनी पैदा गर्‍यो

Vedic Archives Digital Preservation Foundation, Chandigarh

होला! अहिलेसम्म पनि यसको प्रचार यति बढ्ता छ! धेरै जना यही पढ्नाको लागि नेपाली वर्णमाला चिह्न मन गर्छन्। यसबाट भानुभक्तले हाम्रो भाषाको ठूलो सेवा गरे भन्नुपर्छ।

यहाँ एउटा शंका उठ्न सक्छ: दुनियाँ राम-पीयूष-धारा पिएर भुलेका हुन् कि भानुभक्तीय कविता-रसमा? उनको कवितामा रसिलोपन छैन भनूँ, मधुरता छैन भनूँ, केवल रामसुधामा दुनियाँ लठ भएका हुन् भन्ने सम्झूँ, तैपनि भानुभक्तले नेपाली साहित्यको, अझ नेपाली भाषैको, शत्रुउपर रामबाण प्रहार गरेर सफल भएकामा हामी उनको ऋणी छौं। फेरि जति लेख वा कविताको आकर्षकता कथा वा विषयमा निर्भर रहन्छ, उति कथा हृदयग्राही हुन कविता वा लेखका शैली, पद, इत्यादि रुचिकर र रसिला चाहिन्छन्। उसले यही रामायण रूखो टर्रो कवितामा लेखेको भए कसले रुचाउँथ्यो? उनले पट्‍याइ नलाग्ने गरी कुरा अनुसारको भिन्न भिन्न छन्द रोजी आबाल-वृद्ध-बनितालाई भाका मिलाएर गाउन दिनु नै प्रचारको प्राण हो।

रुचिकर हुनाको लागि उनले आफ्नो अनुवादमा कति स्वतन्त्रता लिएका छन् त्यसको अर्को नमूना यहाँ दिन आवश्यक सम्झन्छु:—

अध्यात्म रामायण—

सुग्रीवेण कृतं किं ते मया वा न कृतं किमु।

भानुभक्त—

सुग्रिव् हो कति साख् म हूँ कति कुसाख् हा दैव क्या मन् दियो।

नेपाली भाषाको हकमा यो पाउ यति सुहाउँदो, यति राम्रो, यति हृदयग्राही छ कि यसलाई अनुवाद भन्न मन लाग्दैन। यसैबाट देखिन्छ उनका श्लोक कति लालित्यपूर्ण छन्।

भानुभक्तले कुनै नयाँ कुरा गरेका होइनन् उनीभन्दा अघाड़ि रघुनाथले पनि त 'सुन्दर काण्ड' श्लोकैमा उल्था गरेका थिए भन्ने प्रश्न उठ्न सक्तछ। तर दुइ कविले अनुबादका भिन्न भिन्न मार्ग पक्रेका छन्। रघुनाथ भाषा राम्रो होस् नहोस् मूलको शब्दार्थमा तलमाथि नपरोस् भन्नेतिर लागे। भानुभक्तचाहिँ—चाहे मूलको शब्दार्थमा तलमाथि परोस्, चाहे मूलमा नभएका एक दुइ पद थपिउन् भाषा रसिलो नबनाई छोड्दिनँ भन्नेपट्टि लागे। उसैले यी दुइ कविका श्लोक दाँजेर हेर्दा नेपाली भाषाको हकमा भानुभक्तको श्लोक रघुनाथको भन्दा निकै परिष्कृत र

[ बाँकी पृष्ठ ४२ मा

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# भानुभक्त

[ श्री सूर्य्य विक्रम ज्ञवाली, बी०ए०, बी०टी०, दार्जीलिङ । ]

रणक्षेत्रमा ठूलो पुरुषार्थ देखाउने, आफ्ना तरवार र खुकुरीका टलकले शत्रुका आँखा तिरीमिरी पार्ने औ परेका बेलामा रगतको खोलो बगाई जननी जन्मभूमिको सेवा गर्ने वीरहरू तथा आफ्ना विद्याले गर्दा भारतका विद्वत्-समाजमा आदर पाउने; सरस्वतीका उपासनामा सांसारिक वैभवलाई तृण समान गन्ने औ ज्ञानामृत पान गरी जीउँदै अमर समान भएका विद्वान्हरूले नेपालमा जन्म ग्रहण गरी स्वदेशसेवा गरेका कुराका अनेक उदाहरण नेपालका इतिहासमा पाइन्छन्। आमाको काख वीर र विद्वान्ले कहिले शून्य भएको थिएन।

उन्नाइसौं शताब्दीका प्रारम्भमा (सन् १८१२) आमाले एउटा छोरो पाइन् जसले आफ्ना पुर्खाहरूले समातेको वीरता र विद्वताको बाटो छोड़ी आफ्नो एउटा नयाँ बाटो खन्यो। त्यो बालकको जन्म बड़ो आतङ्कका समयमा भएको थियो। सिमलादेखि दार्जीलिङसम्म विस्तृत नेपाली राज्यको बढ़तीकला भारतमा अंग्रेजको बल्दो प्रतापसँग जुध्न पुगेको थियो। दुवै जाति अनेक निहूँ थापी परस्पर झगड़ा गर्न लागेका थिए। लड़ाइँ अवश्यम्भावी जस्तो भएको थियो। यस्ता समयमा जन्मे भानुभक्त, शान्तिका पुजारी, धर्मका अवतार, प्रेमका मूर्ति।

दुइ वर्षपछि अंग्रेज र नेपालीका युद्धको आगो बल्यो। बड़ा बड़ा वीरहरूले आफूलाई त्यो आगोमा होमी स्वार्थत्याग र देशप्रेमको

---

( पृष्ठ ४१ को बाँकी )

उच्च कक्षाको देखिन्छ; र उसैले, नेपाली भाषाको साहित्यलाई युगहरूमा विभक्त गर्यौं भने भानुभक्तदेखि एउटा नयाँ युग शुरू गर्नुपर्छ।

यो छोटकरी लेख वा समालोचनालाई टुङ्ग्याउँदा म यति नभनी सक्तिनँ : भानुभक्तलाई महाकवि वा कविसम्राट् भन्न हामी गरुकाए पनि, उनलाई मौलिक भावुक कविको स्थान दिन हामी अनकनाए तापनि, उनले साहित्यको गारोको जग लाए भन, अथवा जग खने मात्र भन, वा जगमाथि दुइ-चार ईंट राखे पनि भन, जे भन, तर नेपाली साहित्यलाई राम्ररी खुट्टा टेकाएकोमा हामी नेपाली मात्रको कृतज्ञतामा उनको पूरा हक छ।

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

ज्वलन्त उदाहरण देखाए। तर विधि विधानसँग कसैको केही नलाग्ने हुनाले नेपालको सो युद्धमा पराजय भयो औ आफूले जितेको निकै राज्य फर्काइ नेपालले अंग्रेजसँग सन्धि गऱ्यो। युद्धमा एउटा न एउटाको हार हुन्छ हुन्छ तर यो युद्धले नेपाली जातित्व संसारमा चिह्नियो औ उसका बहादुरीको धाक सर्वत्र फिँजियो।

भानुभक्तको बाल्यावस्था बित्यो यत्रो भयङ्कर युद्धको हारको दुष्परिणाम देशले सहन गरेका सङ्कटका समयमा। यिनकी धाईले कहिले यिनलाई बूढ़ा भक्ति थापाका बलिदानको कथा सुनाइहोलिन् औ कहिले बलभद्रसिंहका बहादुरीको वर्णन यिनले सुनेहोलान्। कहिले यिनले अमर-सिंह थापा र जेनरल अक्टरलोनीका क्षत्रियोचित युद्धका कुरा सुनेहोलान्। देशभक्तिका यस्ता सुनौला उदाहरणका पाठ यिनले व्याकरणका सूत्र र काव्यका श्लोक सँगसँगै पढ़े। यत्रो भयानक युद्धमा हार भएको हुँदा देशले जो दुःख दारिद्र्य अनुभव गऱ्यो सो पनि यिनले देखे। यो युद्धबाट भएका दरिद्रताको परिणाम स्वरूप यो वीर जातिमा घरझगड़ा चलेको कुरा पनि युवक भानुभक्तले सुनी रगतका आँसु बगाए।

त्यो कोमल भावुक हृदयलाई वेदना कस्तो असह्य भयो होला! यो वेदना बिर्सन भानुभक्त कहिले मर्स्याङ्दीका किनारामा त्यसको कल कल ध्वनिपूर्ण गति हेरेर समय काट्थे औ कहिले तनहूँका जंगलमा गएर उहाँका वृक्षलताको शोभा हेर्थे। जंगलका चराहरूले आफ्ना मधुर गानले यिनको उद्विग्न हृदयलाई शान्त गराउँथे औ खोलाका जल-सीकरले यिनको उत्तप्त मस्तकलाई शीतल पार्थे। यसो गर्दा गर्दै भानुभक्तले पूर्ण यौवन प्राप्त गरे।

यिनका हृदयले मसक्क आँटेर न त शस्त्र मार्ग नै ग्रहण गर्न सकेको थियो न ता शास्त्रको। यी मनस्वी युवक दोधारमा परेका थिए। जीवनको लक्ष निर्धारित गर्न सकेका थिएनन्। कुन दिशातिर जानुपर्ने हो यिनले थाहा पाउन सकेका थिएनन्। यिनी बाटो खोज्दै थिए। कोमल प्रकृतिका मानिस हुँदा यी शान्तिप्रेमी थिए अतएव युद्ध यिनलाई मनपर्दैनथ्यो औ भावुक हृदयका युबक हुँदा पाण्डित्यप्रति पनि यिनको अभिरुचि थिएन।

बाईस वर्षको उमेर भएपछि एक दिन यिनले आफ्ना जीवनको ध्रुवतारालाई देखे। सो पनि एउटा घाँसीसँग भएका क्षणिक वार्तालापले

Vedic Archives Digital Preservation Foundation, Chandigarh

यिनका आँखा उघ्रे। घाँसीको आफूले जगेरा गरेका पैसाले कूवा खनाई पाटी बनाई लोकोपकार गर्ने बुद्धि भएको थाहा पाई यिनी झल्याँस्स ब्युँझे जस्ता भए। यिनका हृदयले घाँसीका कुराबाट शान्तिलाभ गर्‍यो औ यिनी आफ्नो अज्ञानलाई गालि गर्न थाले। अन्त्यमा यिनका जीवनको उद्देश्य स्थिर भयो। यिनले लोकसेवाको व्रत गरे, सङ्कल्प गरे औ त्यसलाई अँगालो हाले।

बालककालदेखि नै जंगलका कोइली, सुगा, मैना, मुनियाँ, आदि मीठो बोली भएका चराहरूले यिनलाई आफ्ना दिव्य स्वरको शिक्षा दिएका थिए। पहाड़का खोला, छहराहरूले यिनलाई आफ्ना मधुर कलकलनादको पाठ घोकाएका थिए। जंगलमा स्वतन्त्रतापूर्वक फुल्ने थरी थरीका स्वर्गीय सुन्दरता भएका फूलहरूले यिनलाई सुन्दरताको ज्ञान गराएका थिए। स्वयं प्रकृतिमाताले यिनलाई शान्तिको मन्त्र सुनाएकी थिइन्। अतएव यिनले पनि सोही नैसर्गिक सुन्दरता, दिव्य शान्ति औ अमर सत्यको रस बगाई नेपाली मात्रको हृदय पगार्ने निश्चय गरी कविताको मार्ग ग्रहण गरे।

संसारमा वाल्मीकिको फेरि अवतरण भयो। तुलसीदासले नेपाली नारीका कोखमा जन्म लिए। क्रौञ्चको जोड़ामध्ये एउटा पक्षी व्याधाका शरको लक्ष हुँदा वाल्मीकिको हृदय करुणाले द्रवीभूत भएथ्यो र उनले रामायण लेखेथे। आफ्नी प्रेयसीका वाग्बाणले विद्ध हुँदा तुलसीदास भरङ्ग भएथे र रामभक्तिमा लागेथे। अदना गरीब घाँसीको धार्मिक भाव देखी भानुभक्त पनि छाँगाबाट खसे जस्ता भई उनी जब बौहे उनले पनि रामचरित्र नेपाली भाषामा लेख्ने सङ्कल्प गरे र बाल काण्ड ता लेखि पनि हाले। ( १८४१ )

भानुभक्त यिनैताक नेपालको राजधानी काठमांडूमा आए। काठमांडूका वैभवका तेजले पहाड़िया युवकको आँखा तिरीमिरी पार्‍यो। उहाँका "धनिया"-ले यिनका मनमा पनि धनी हुने लोभ उत्पन्न गराए र यी चाकरी गर्नथाले। चाकरीको फलस्वरूप एउटा जागीर पाई यिनी मदेस आए। ( १८५० )

भानुभक्तले जागीर खाएको खुट्टामा मैलपोस लाए जस्तो भयो। काल्पनिक लोकमा मग्नसँग डुल्ने कविलाई स्याहा स्रेस्ताको जटिल चाँजो मिलाउर्न गाहारो भयो र दुइ वर्ष नपुग्दै सरकारी बाँकी लागी यिनी कुमारीचोकमा थुनिए। ( १८५२ )

Vedic Archives Digital Preservation Foundation, Chandigarh

कुमारीचोकका खोर निस्तब्ध अन्धकारमा यिनले आफ्नो गत जीवनको सिंहावलोकन गर्ने अवसर पाए र आफ्ना जीवनको मान र धन खोज्ने लोभको कालिमा यिनले देखे। उनको हृदय सँगालियो, उनले आफूलाई देखे औ आफ्नो हराएको बाटो फेरि पाए। अब उनका दृष्टिमा खोर खोर रहेन औ खोरको दुःख सुखका रूपमा परिणत भयो। अतएव कबि भानुभक्तले खोरका जीवनको उल्लेख गर्दा भन्नसके:—

लाम्खुट्टे उपिन्या उडुस् इ सँगि छन् उन्कै लहड्मा बसी।
लाम्खुट्टेहरु गाउँछन् इ उपिन्या नाच्छन् म हेर्छू बसी॥

फेरि उनी बाल काण्ड मात्र लेखी पन्छाएर राखेको रामायण लेख्न थाले औ सुन्दर काण्डसम्म चार काण्ड रामायण उनले यहीं लेखे। अर्को वर्षमा (१८५३) यिनले बाँकी दुइ काण्ड पनि लेखी रामायण समाप्त गरे।

रामायणबाहेक अरू पनि फाटफुट कविता नेपालीमा भानुभक्तले रचना गरेका छन् तर उनका कार्यको शिरोमणि यही हो। रामायण लेखी भानुभक्तले आफ्नो ठाउँ बालमीकि, तुलसीदास आदि महात्माहरू बस्ने लश्मा तुल्याए। नेपाली भाषालाई साहित्यको रूप प्रदान गरे। नेपाली जातिका बिभिन्न अङ्गलाई एकताका सूत्रमा बाँधे। धन्य महात्मा भानुभक्त।

कविको जीवन-कथा अरू थाहा छैन तर एउटा महान् त्याग र आफ्ना कामसँग तल्लीनताको जो उदाहरण उनले मर्ने बेलामा छोड़ेर गएका छन् त्यसको उल्लेख नगरी यो लेख समाप्त गर्नु अनुचित हुन्छ। रोगाक्रान्त भै कविले रोग-शय्याको आश्रय लिएका छन्। जीवनदेखि हरेस खाइ-सकेका छन्। त्यो बेला उनलाई रामगीता लेख्न बाँकी रहेको कुरा स्मरण हुन्छ। आफैं लेखुन् भने नाताकतले उनको हातै चल्दैन। कवि आफ्नो छोरा रामनाथलाई डाकी आफूनेर बसाउँछन्। सुस्त सुस्त भनी रामगीताका श्लोक उनले आफ्ना छोरालाई लेख्न लाए। त्यसका केही दिनपछि भानुभक्तको ऐहिक लीला समाप्त भयो। (१८६८)

भानुभक्त आज हाम्रा समक्षमा छैनन् तर उनले बालेका कविताका चिराकले आज हाम्रो मुलुक नै उज्यालो भएको छ औ उनका कविता पढ़ी अथवा सुनी आज हजारौं लाखौं नर-नारीले आफ्ना जीवनको कर्त्तव्य बुझ्न सहायता पाएका छन्। भानुभक्त नेपाली साहित्यका ध्रुवतारा हुन्, कहिलै ननिभ्ने अग्निशिखा हुन् औ मानिस मात्रको हृदयलाई शान्त शीतळ पार्ने चन्द्रज्योत्स्ना हुन्।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# शिव शर्मा पण्डित

[ खरीदार बाबुराम आचार्य, नेपाल। ]

भानुभक्तका जन्मभूमि तनहूँमा ती भन्दा पहिले पनि अनेक विद्वान् पैदा भएका थिए। वीर-योद्धा पैदा गर्नामा जस्तो गोरखा प्रसिद्ध थियो, उस्तै विद्वान् पैदा गर्नामा तनहूँले नाउँ कमाएको थियो। जुन समयमा गोरखालीहरू आफ्नो बाहुबल फैलाउन लागेका थिए, उस समयमा तनहूँका राजा त्रिविक्रम सेनका दरबारमा विद्वान्हरू गर्जिरहेका थिए। यो कुरा गंगाविष्णु पण्डितका एक लेखाइबाट स्पष्ट देखिन्छ (विद्यावन्तो यत्र गर्ज्जन्ति सार्थाः)। गएका उन्नाइसौं शताब्दी ( विक्रम संवत् )-का र यस बीसौं शताब्दीका नेपालका राज्यगुरुका दुइ वंशका मूल पुरुष पैदा गर्ने सौभाग्य पनि तनहूँले पाएको छ।

उन्नाइसौं शताब्दीका पृथ्वीनारायण शाहदेखि राजेन्द्रविक्रम शाहका समयसम्मका राजगुरु जयमङ्गल, व्रजनाथ र रंगनाथ पण्डितज्यू यी तीन पुस्ताका मूलपुरुष तनहूँका रिसिंग प्रदेशमा रहन्थे। आफ्ना विद्वत्ताका प्रभावले जयमंगल पण्डित पृथ्वीनारायण शाहकी महारानी नरेन्द्रलक्ष्मी देवीका गुरु बनेर गोरखामा आएका हुन्। यस शताब्दीका नेपालका राजगुरु विजयराज पण्डितज्यू आदिका मूलपुरुष लक्ष्मण पण्डित तनहूँमा पैदा भएका थिए। आफ्ना समयका प्रभावशाली विद्वान् हुनाले सिद्ध कहलाएका थिए। यिनका छोरा गौरीश्वर पण्डितज्यू ता तनहूँका र गोरखाका समेत राजगुरु भएका थिए। यिनैका वंशका वाणीबिलास पण्डितज्यूले (अं० १८१२—१६०१ ) साठी बर्खभन्दा ज्यादा नेपालका राजपण्डितका पदको शोभा बढ़ाएका थिए, जो धर्मशास्त्रमा आफ्ना समयका नेपालका अद्वितीय विद्वान् थिए।

नेपालका राजनैतिक क्षेत्रमा ३४ बर्खसम्म ढलिमली गरेर रहेका जनरल भीमसेन थापाको ( १८३२-६६ ) जन्मभूमि पनि तनहूँ नै हो। यिनका समयमा तनहूँमा नै पैदाभएका, यो संसार छोड़े पनि एउटा तारा समान भएर प्रयागक्षेत्रमा प्रकाश फैलाइरहेका शिव शर्माको परिचय यहाँ दिइन्छ, जसको अमर रचना वासुदेवरसानन्द देख्ने सौभाग्य लेखकले पाएको छ। त्यसका साथैमा यिनैले बनाएको विष्णुमहिम्न स्तोत्र पनि प्रयागबाट छापी प्रकाशित भएको छ। वासुदेवरसानन्दमा आफूले बनाएका

Vedic Archives Digital Preservation Foundation, Chandigarh

गोविन्दगुणानन्द, रामचिन्तालहरी र कृष्णमहिम्न स्तोत्रका उद्धरण दिएका छन्[1]। कृष्णमहिम्न स्तोत्रको जुन पद्य दिएका छन्, त्यो विष्णुमहिम्न स्तोत्रमा छैन। यसकारणले यी दुइ स्तोत्र छुट्टा छुट्टै देखिन्छन्।

वासुदेवरसानन्दका आखिरका पुष्पिकामा यिनले आफ्नो घर तनहूँ, वसन्तपुर, आमाको नाउँ गंगादेवी र बाबुको नाउँ मकरन्द पण्डित बताएका छन्[2]। बसन्तपुर तनहूँको एक प्रसिद्ध मौजा छ; जो रमघाबाट ६ माइल उत्तर पर्दछ। त्यस ग्रन्थमा आफ्ना बाबुका दुइ पद्य पनि दिएका छन्[3]। त्यसकारणले मकरन्द पण्डितले पनि कुनै ग्रन्थ रचना गरेका देखिन्छन्। शिव शर्माले आफ्ना थरको परिचय स्पष्ट रूपले दिएका छैनन् तापनि बसन्तपुरमा अचेल 'पण्डित' थर भएका ब्राह्मणको आबादी ज्यादा हुनाले मकरन्दका साथ जोड़िएको 'पण्डित' पद थरको सूचक पनि हुनसक्छ। यो ग्रन्थ प्रयागमा संवत् १८६० वैशाख शुक्ल पञ्चमी बुधबारका दिन समाप्त गरेका थिए[4]।

---

[1] विवृतं चैतन्मदीयगोविन्दगुणानन्दे—

नित्यं सत्यं श्रीमत्प्रियं घनानन्दमद्वयं ध्येयम्।
पदकमलमेव भगवत इत्यनुरागो हि भक्तिराख्याता॥ (पातो १७९)

यथा मामक-रामचिन्तालहर्याम्—

धीरसो धीरसोऽभीप्सितस्ते यदा तन्तदा तन्तवा देहि मेध्य गिरा।
रामतो रामतो नाऽपरः शासतां दामनो मान्यतो मान्यतोषधिया॥ (पातो २७९)

अस्मदीयश्रीकृष्णमहिम्नि—

योगसिद्धिः कलौ नास्ति ज्ञानं भूरिश्रमैर्नृणाम्।
मुक्तिदैकैव यद्भक्तिः स मुकुन्दोऽस्मदाश्रयः॥ (पातो २१८)

[2] इति श्रीवासुदेवरसानन्दः सदद्वैताभिमतविद्वन्मण्डलीमण्डनायमानत्रितुङ्गाचलवसन्तपुरवास्तव्यगङ्गादेवीद्वितीयश्रीमकरन्दपण्डितस्य महात्मनः कुमारेण श्री शिवशर्मसूरिणा विरचितम्...।

[3] अस्मत्तातचरणाः—

मनोधृताऽधोक्षजपादपङ्कजा दयार्द्रशीलार्पितलोकमङ्गलाः।
क्षिपन्ति तापत्रितयं वपुष्मतां सदुक्तिभिर्भागवताः सुदुर्लभाः॥ (पातो १८२)

[4] गगनग्रहगजचन्द्रैर्मितवत्सर औरगे गौरे।
राधे बुधे प्रयागे कृतिरियमुदभून्मुदे विदुषाम्॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

उस समयमा रिवाँ ( बघेल खण्ड ) का महाराज जयसिंह थिए। संवत् १८७० मा बृटिश कम्पनी-सरकारसँग आश्रित सन्धि गरेर लड़ाइँ-भिड़ाइँदेखि फुर्सद लिएर आफ्ना शास्त्रका चर्चा र अध्ययनमा लागेका थिए। यी स्वयं विद्वान् थिए; केही ग्रन्थ बनाएका थिए, विद्वान्हरूका पृष्ठपोषक पनि थिए[१], यिनका दरबारमा अर्का नेपाली विद्वान् धरणीधर पन्थ राजपण्डित भएर रहेका थिए[२]। यी महाराज प्रतिसाल प्रयागमा आएर विद्वान्हरूलाई जम्मा गरी शास्त्रको चर्चा गर्दथे। संवत् १८९१ मा शिव शर्मासँग यिनको पहिला भेट भएको थियो। यस हिसाबले वासुदेवरसानन्द तयार हुनुभन्दा एक-आध बर्ख पहिले मात्र यी प्रयागमा गएर बसेका देखिन्छन्। यस कारणले गोविन्दगुणानन्द, रामचिन्तालहरी र कृष्णमहिम्नस्तोत्र प्रयागमा नरहँदै अगाड़ि नै लेखिएका देखिन आएका हुन्।

प्रयागका महामहोपाध्याय आदित्यराम भट्टाचार्य एम०ए० ले वासुदेवरसानन्दलाई अनमोल ग्रन्थ देखेर छपाई विना-मोलमा बाँड़ेका थिए। तिनका जीवनीलेखक पण्डित मदनमोहन मालवीय ( भाइस चान्सलर, हिन्दू युनिभरसिटी, बनारस )-ले शिव शर्मालाई ब्रह्मचारी थिए औ प्रयागमा एक कुटी बनाएर रहेका थिए भनेर लेखेका छन्। प्रयागमा जानुभन्दा पहिलेको यिनको वृत्तान्त कहीं नपाइने हुनाले यिनका युवावस्थाको हालत र गोविन्दगुणानन्द आदि ग्रन्थ लेखेको समय पत्ता लाग्न लगभग असम्भव नै छ।

---

१ Jai Singh ( 1809-35 ) was a scholar and author of several works, as well as a great patron of literary men. ( Imperial Gazeteer of India, Part XI. P. 282. )

२ प्रोफेसर गणेशदत्त शास्त्री एम० ए०, एल० एल० बि०, का लेखअनुसार ( हंस, काशीअंक, पातो १२८, ) तर शास्त्री महाशयले धरणीधर पन्थलाई यस्ता ढंगसँग कुमाई बनाएका छन्, मानो तिनको जन्म घर खेत सबै कुमाउँमा थियो, नेपाल देखेके थिएनन्। पन्थज्यूले ईशतत्व भन्ने अनमोल ग्रन्थमा आफूलाई प्रसिद्ध विद्वान् प्रेमनिधि पन्थका भाइ हरनिधिका नाती बताएका छन्। प्रेमनिधि कुमाउँबाट नेपाल ( पर्वत )-मा आएर बसेको कुरा तिनका मल्लादर्श आदि ग्रन्थबाट स्पष्ट देखिन्छ। धरणीधरले नेपालमा नै बसेर ईशतत्व लेखेका थिए, यो कुरा त्यस ग्रन्थका उपोद्घातबाटै देखिन्छ। तिनको जन्म नेपालमा नै भएको हो, कुमाउँमा कुल्चेका पनि सम्भवतः थिएनन्; यो कुरा निश्चय छ। ईशतत्वबाहेक यिनले बनाएका रामतपनीयोपनिषद् व्याख्या, रामरक्षाविवेक, कालनिर्णय व्याख्या, चातुर्वर्ण्यविवेचन, चातुर्वर्ण्यव्यवस्था र सापिंडचतत्व यी छ ग्रन्थ औफ्रेख्टका पंजिकाबाट देखिन्छन।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

वासुदेवरसानन्दको विषय भक्तिप्रधानको वेदान्त छ। यस किसिमका ग्रन्थका विषयमा अधिक लेख्ने योग्यता लेखकमा छैन। यस कारणले महामहोपाध्याय पण्डित गङ्गानाथ झा, एम० ए०, डि० फिल० महाशयले यस ग्रन्थको हिन्दीमा जो समालोचना गरेका छन् त्यो यहाँ नेपालीमा अनुवाद गरेर दिन चाहन्छु।

दर्शनशास्त्रका ती धुरन्धर विद्वान् लेख्दछन्-"वासुदेवरसानन्द नामक ग्रन्थलाई सम्झनाका निमित्त यी कुराका उपर ध्यान राख्नु आवश्यक छ। यो विषय नै यस्तो छ कि, यसका प्रसंगमा हेतु तर्क वितर्क हुन सक्तैन। यो आत्मानुभवगोचर छ। यसैले यस ग्रन्थको समादरणीयता पनि सिद्ध हुन्छ। यसका रचयिता थिए यस्ता महापुरुष जो मेरा श्रद्धेय पूजनीय चिरस्मरणीय महामहोपाध्याय आदित्यराम भट्टाचार्यज्यूका श्रद्धापात्र भए। महामहोपाध्यायज्यू यस्ता परीक्षकमा थिए, जसका कसौटीबाट निस्कनु सुगमता थिएन। फेरि यस्ता परीक्षकका श्रद्धाभाजन जो महापुरुष भए उनका निमित्त अरू ज्यादा लेख्नु व्यर्थ होला।"

प्रयागमा महाराज जयसिंहको र महात्मा शिव शर्मा पण्डितको पहिला भेटको कथा पनि बड़ो मनोरञ्जक छ। जयसिंहले प्रयागमा आएर पण्डितहरूलाई जम्मा गरेर एक प्रश्न सोधे। प्रश्न कठिन हुनाले कसैबाट उत्तर मिल्न सकेन। कुटीमा रहेका शिव शर्माबाट उत्तर मिल्ने भरोसा सबैले देखाए। शिव शर्मालाई डाक्न मानिस गए। तर शिव शर्मा जयसिंहभन्दा कम थिएनन्। यस कारणले कुटी छोड्न राजी भएनन्। जयसिंह नै कुटीमा गएर उनबाट उत्तर पाई बड़ो सन्तुष्ट भए। यहीं वासुदेवरसानन्दको पुस्तक देखेर जयसिंहले हेर्न मागे। प्रयागमा नै बसेर हेरी फिर्ता गर्न भनेर दिए। एक दिन जयसिंहका मानिसहरू गंगापार जान लागेको शिव शर्माले देखे र पुस्तक फिर्ता लिन मानिस दौड़ाए। जयसिंहका केही नोकर मात्र जानालाई तयार भएका थिए। जयसिंहको मुकाम नै थियो। तपाइँको पुस्तक फिर्ता नगरी प्रयाग छोड्नेछैन भनी शिव शर्मालाई यिनले सन्तुष्ट गराएर कबोल पनि पूरा गरिदिए।

शिव शर्माको प्राण-प्रिय यो पुस्तक ती परलोक भएपछि चालीस-पैंतालीस बर्षसम्म नजाने कुन कुन कुनामा थाँदिएर रह्यो। संवत् १९४७ तिर एक अंग्रेजको जायदात प्रयागमा लिलाम हुन लाग्दा अनेक हस्तलिखित पुस्तकहरू पनि आए। त्यस समयका म्योर सेन्ट्रल कलेज (इलाहाबाद)-का

Vedic Archives Digital Preservation Foundation, Chandigarh

अध्यापक आदित्यराम भट्टाचार्यले केही हस्तलिखित पुस्तक त्यस लिलाममा लिंदा वासुदेवरसानन्दको पुस्तक पनि आइपर्‍यो; जो शिव शर्माकै हातबाट लेखिएको थियो। आदित्यराम भट्टाचार्यले त्यो ग्रन्थ देखेर अत्यन्त दंग भई शिव शर्माका भक्त बने। दैवसंयोगले शिव शर्माको अघि कुटी रहेकै ठाउँमा आदित्यरामज्यूले आफ्नो घर बनाएका थिए। यो कुरा त्यो पुस्तक हात परेपछि मात्र थाहा पाए।

यस ग्रन्थले आदित्यरामज्यूलाई साह्रै असर गरिदियो। शिव शर्माको नाम चिरस्थायी राख्नाका निमित्त आफ्ना घरमा जोड़ेर अर्को घर बनाई त्यसमा संस्कृत पाठशाला राखेर त्यसको नाम शिव शर्मा-संस्कृतपाठशाला राखिदिए। यस पाठशालालाई चाहिने धन गुठी राखेर हिन्दू युनिभरसिटी (बनारस)-का देखरेखमा छोड़िदिएका हुनाले यो पाठशाला राम्रा तरहले चलेको छ। त्यस पाठशालाको काम चलाउने एउटा कार्यकारिणी समिति छ। आदित्यरामज्यूका सुयोग्य-पुत्र पण्डित सत्यव्रत भट्टाचार्य एम० ए० अचेल त्यस समितिका सेक्रेटरी छन्।

आदित्यराम भट्टाचार्यले आफूले संग्रह गरेका जम्मै पुस्तक दिएर आफ्नी आमा धन्यगोपीका नाउँबाट एक पुस्तकालय खड़ा गरी धन्यगोपी पुस्तकालय सो पाठशालाका साथ जोड़िदिएका छन्। शिव शर्माका हातले लेखिएको वासुदेवरसानन्दको पुस्तक त्यसै पुस्तकालयमा रहेको छ। गोविन्द-गुणानन्द, रामचिन्तालहरी र कृष्णमहिम्नस्तोत्र कहाँ पुगे, त्यो पत्ता छैन।

वासुदेवरसानन्दको दोस्रो आवृत्ति हिन्दू विश्वविद्यालयका धर्मशास्त्र-का अध्यापक पण्डित राधाप्रसाद शास्त्रीले गरेका हिन्दी अनुवादसहित, संवत् १९९१ मा पं० सत्यव्रत भट्टाचार्यले प्रकाशित गरेर विना मोलमा वितरण गरिदिएका छन्। परन्तु शास्त्रीज्यूका अनुवादमा केही त्रुटि छन्। यदि त्यसको नेपाली भाषामा सुन्दर अनुवाद तयार भयो भने आदित्य-राम या सत्यव्रत जस्ता नेपाली अनुवादसहितको पुस्तक प्रकाशित गर्ने नेपाली मानिस पैदा हुने सम्भावना छ।

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# नेपाली कवि भानुभक्त

[ श्री फणीन्द्रनाथ वसु । ]

( बंगाली संवत् १३३६ तदनुसार विक्रम संवत् १९८६ का श्रावण मासका 'प्रवासी'-मा छापिएका लेखको अनुवाद )

वर्तमान नेपाली साहित्यका सम्बन्धमा आलोचना गर्दा हाम्रो आलोचना नेपालमा गोरखा राज्य चलेका समयमा सीमाबद्ध हुन्छ किन-भने गोरखा राज्य स्थापित भएका समयदेखि नेपाली साहित्यको उत्पत्ति भएको हो। प्राचीन नेपालमा नेवारी भाषा प्रचलित थियो। नेवारी भाषाका अक्षर घेरै जसो बंगाली अक्षर जस्ता छन्। अद्यावधि नेवारी भाषामा लेखिएका अनेक पुस्तक नेपालका दरबार लाइब्रेरीमा छन्। वर्तमान गोरखाली भाषा नागरी अक्षरमा लेखिन्छ।

वर्तमान नेपाली साहित्य अझै शिशु अवस्थामा छ। गएको एक सय वर्षमा नेपाली साहित्य निकै उन्नतिका बाटामा अघि बढ़ेको छ। नेपाली साहित्यका प्रथम र प्रधान कवि भानुभक्त हुन्। यिनी रामायणको नेपाली अनुवाद गरी प्रसिद्ध भएका छन्। यिनले रचना गरेको रामायण नेपालमा विख्यात छ। बंगालमा जस्तो काशीरामदासको महाभारत र कृत्तिवासको रामायण तथा उत्तर भारतमा तुलसीदासको रामायण जन-साधारणमा आदृत छन् उस्तै नेपालमा भानुभक्तका रामायणको आदर छ। नेपालका गाउँ गाउँमा भानुभक्तको रामायण दिनहुँ पढ़िन्छ। भानुभक्तका रामायणसँग परिचय नहुने नेपालमा मानिस पाउनु गाहारै छ।

कोही कोही नेपाली लेखकहरूले यी प्रथम नेपाली कविका जीवन-को इतिहास संग्रह गरी प्रकाश गरेको कुरो बड़ो सुखकर छ। १८९१ सन्‌मा काशीबाट स्वर्गवासी मोतीराम भट्टले भानुभक्तको जीवनचरित्र नामक पुस्तकमा उनको जीवनी प्रकाशित गरेथे। हाल १९२७ सन्‌मा दार्जीलिङको नेपाली साहित्य सम्मेलनका उद्योगले यो पुस्तकको द्वितीय संस्करण प्रकाशित भएको छ[1]। मेरा बन्धु श्री सूर्य विक्रम ज्ञवाली महाशय-ले एउटा विस्तृत भूमिका सहित त्यसको सम्पादन गर्नुभएको छ।

---

[1] सन् १९३८ मा सो पुस्तकको तृतीय संस्करण पनि नेपाली साहित्य सम्मेलनद्वारा प्रकाशित भएको छ।—सं०।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

नेपालराज्यको राजधानी काष्ठमण्डप वा काठमांडूका पश्चिमतिर तनहूँ नामक एउटा प्रदेश छ। त्यही प्रदेशमा नेपाली कवि भानुभक्तको जन्म भएको हो। यहाँ श्रीकृष्ण आचार्य नामक एक जना पण्डित थिए। तिनका छ छोरा थिए—प्रथम धनञ्जय, द्वितीय काशीनाथ, तृतीय पद्मनाभ, चतुर्थ तुलसी, पञ्चम गंगादत्त औ कनिष्ठ इन्द्रविलास। यी सबै बुद्धिमान् औ पण्डित थिए। श्रीकृष्ण आचार्यका जेठा छोरा धनञ्जय आचार्यको पनि आफ्ना देशमा नाउँ चलेको थियो। उनले राजाको जागीर खाएका थिए। यिनैका छोराको नाम भानुभक्त हो। सन् १८११ मा भानुभक्तको जन्म भएको हो। कवि आफैंले लेखेका छन्।

पाहाड्को अति बेस देश् तनहुँमा श्रीकृष्ण ब्राह्मण् थिया।
खुप् उंचा कुल आर्यवंशि हुन गै सत् कर्ममा मन् दिया॥
विद्यामा पनि जो धुरन्धर भई शिक्षा मलाई दिया।
इन्को नाति म भानुभक्त भनि हूँ यो जानि चिठ्ठी लिया॥

कवि भानुभक्त नेपालमा आफ्ना कवित्व शक्तिका निमित्त प्रसिद्ध छन्। तिनले बाल्यकालमा नियमबमोजिम शिक्षा पाए औ अठार वर्षका उमेरमा उनी नाना शास्त्रका पण्डित भए। तिनले कुन प्रकारले कवित्व शक्ति प्राप्त गरे त्यो विषय नेपालमा एउटा कथा प्रचलित छ। तिनी २२ वर्षका थिए। एक दिन तिनी एउटा[1] नदीका किनारमा डुल्न गए। त्यहाँको मधुर हावा लाग्दा उनलाई निद्रा लाग्यो। दुइ घण्टापछि जब उनका आँखा खुले, उनले केही पर एउटा घाँसीले घाँस काटिरहेको देखे। तिनी त्यसलाई देखी त्योसँग कुरा गर्न आए औ उसका दुःखको कथा सुनी साह्रै दुःखित भए। त्यसको गम्भीर ज्ञान देखेर उनलाई आश्चर्य लाग्यो। उसका दुःखका कथाले उनको हृदय व्यथित भयो र जसरी वाल्मीकिले क्रौञ्चका जोड़ाका शोकले कातर भै व्याधाका उद्देश्यले श्लोक भनेका थिए उसै गरी भानुभक्तले तल लेखिएका श्लोकमा आफ्नो हृदयको व्यथा व्यक्त गरेका छन्।

भर् जन्म घाँस तिर मन् दिइ धन् कमायो।
नाम् क्यै रहोस् पछि भनेर कुवा खनायो॥
घाँसी दरिद्रि घरको तर बुद्धि कस्तो।
मो भानुभक्त धनि भै कन आज यस्तो॥

---

[1] लेखकले एउटा नदी भनी लेखेको छ सो नेपाली शब्द 'घोटा'-को अर्थ लेखकले नबुझेको हो।—सं०।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

मेरा इनार न त सत्तल पाटि क्यै छन्।
जे धन् र चीजहरु छन् घर भीत्र नै छन॥
तेस् घाँसिले कसरि आज दिये छ अर्ती।
धिक्कार हो म कन बस्नु न राखि कीर्ति॥

थो पछिदेखि भानुभक्तले कविता लेख्न थाले। नेपालीहरू उनको महाकवि वाल्मीकिसँग तुलना गर्छन्। जसरी महर्षि वाल्मीकिले अर्काको दुःख देखी कातर भै कवितादेवीको आश्रय लिएथे उसै गरी भानुभक्तले पनि अर्काका दुःखमा कातर भएर आफ्नो मनको चोट कवितामा जाहेर गरेका छन्। वाल्मीकिले रामायण लेखेर चिरस्मरणीय भएका छन, कवि भानुभक्तले पनि नेपालीमा रामायण लेखी नेपालीहरूको कृतज्ञता प्राप्त गरेका छन्।

यो अलौकिक रीतिले कवित्व शक्ति प्राप्त गरी कवि भानुभक्तले रामायण रचना गर्न थाले। यो रामायणको रचना नै उनका जीवनको श्रेष्ठ कार्य हो। तिनले नेपाल दरबारमा के मान पाएका थिए वा तिनले के जागीर खाएका थिए त्यसको अचेल मानिस आलोचना गर्दैनन्। तिनले सुललित भाषामा जो रामायण लेखेका छन् त्यो पढ़ी नेपालका मानिस आनन्द-लाभ गर्छन्। भानुभक्तको नेपाली रामायण वाल्मीकिको संस्कृत रामायणको अनुवाद हो भन्ने भूल नचिताउनु होस्। कवि भानुभक्तले वाल्मीकिको संस्कृत रामायणको अनुसरण नगरी अध्यात्म रामायणमाथि निर्भर गरी आफ्नो रामायण लेखेका छन्। तिनी स्वयं संस्कृतका पण्डित हुनाले मात्र उनलाई यो रामायण रचना गर्न सम्भव भयो।

कवि भानुभक्तले नेपाली रामायणबाहेक अरू धेरै पुस्तक नेपालीमा लेखेका छन्। यी मध्ये (१) प्रश्नोत्तरी, (२) बधूशिक्षा औ (३) भक्तमाला प्रसिद्ध छन्। दार्जीलिङ्को नेपाली साहित्य सम्मेलनले उनको बधूशिक्षा नामक पुस्तक फेरि छपाएको छ। भानुभक्तको नेपाली रामायण नेपालमा सबैको प्यारो छ भनी पहिल्यै भनिसकिएको छ। यो पछि प्रश्नोत्तरी र भक्तमालाको प्रचार निकै छ।

स्वयं संस्कृतका पण्डित भए तापनि कवि भानुभक्तले रामायण र अरू अरू पुस्तक नेपाली भाषामा लेख्न थालेको कुरो बड़ो अचम्मको छ। हाम्रा देशमा कुनै समयमा जसरी ब्राह्मण पण्डितहरू संस्कृत भाषामा समस्त विषय लेख्थे औ बंगालीमा लेख्ने रीतिलाई घृणाका दृष्टिले हेर्थे

Vedic Archives Digital Preservation Foundation, Chandigarh

उस्तै चलन कवि भानुभक्तका समयमा नेपालमा थियो। संस्कृतज्ञ पण्डितहरूको दृष्टि संस्कृत भाषातिर थियो, नेपाली भाषापट्टि थिएन। भानुभक्तले सर्वप्रथम यो विषयमा परिवर्तन प्रारम्भ गरेको कुरा बड़ो आनन्दमय छ। तिनले नेपाली भाषामा कविता लेखी रामायणको रचना गरी वर्तमान नेपाली साहित्यको जग बसाले। उनको स्वतन्त्रता र जातीयता यही कुराबाट राम्ररी बुझिन्छ। उनी नेपाली साहित्य र नेपाल देशलाई पूर्णतया प्रेम गर्थे। नेपालको राजधानी काठमांडू वा काष्ठमंडपको उनले "अमरावति कान्तिपुरी नगरी" "अलकापुरि कान्तिपुरी नगरी" औ "शिवकी पुरि कान्तिपुरी नगरी" भनी वर्णन गरेका छन्। काठमांडू देवादिदेव शिवको पुरी हो औ यो पशुपतिनाथको स्थान हो भन्ने गर्व अनुभव गरी उनले भनेका छन्:—

पशुका पति छन् रखवारि गरी
शिवकी पुरि कान्तिपुरी नगरी॥

---

ज्यूँदै मर्‍याको भनि नाउँ कस्को?
उद्यम् विना बित्तछ काल जस्को।

× × ×

कुन् हो जति जती दियो उति बढ्न जान्या?
विद्यै रहेछ बुझि निश्चय तेह्रि मान्या।

—भानुभक्त।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# बालककालका तपस्वी योगी
औ
# वर्तमान नेपाली साहित्यको उदय

[ श्री खड्ग बहादुर सिंह, दार्जीलिङ। ]

नेपाली साहित्य कुन स्रोतमा बगिरहेको छ? हर एक शिक्षित नेपाली नरनारीको हृदयसित आज यही प्रश्न छ।

विविध वैज्ञानिक यन्त्रहरूको आविष्कार—कतै हाहाकार—ज्यू जातिको बहिष्कार—आदि दृश्यले संसार आश्चर्यान्वित छ। "म कुन स्रोतमा बगिरहेको छु" भन्ने कुराको संसारलाई पत्तो छैन।

आदि युगमा मानिसहरू लुगा फाटा बनाएर लाउन तथा पकाएर खान जान्दैनथे। वर्तमान संसारले तिनीहरूलाई असभ्य भन्यो। समयको प्रादुर्भाव —मानिसहरूले लुगा फाटा लाउन सिके—पकाएर खान जाने—लेख्ने, पढ्ने भए। सभ्यताको पूर्ण विकाश भो। आज कति सभ्य देशमा ता लुगा फाटा नलगाई नाङ्गै बस्नु स्वास्थ्यका लागि वेस छ भन्ने कुरा चलिरहेको छ। यसरी नाङ्गै बस्ने मानिसहरूको एउटा शहर पनि बनेको छ भन्ने समाचार, समाचार पत्रले सुनाउँदैछ। वर्तमान संसारले भन्छ तिनीहरूलाई, "सभ्य"। समयलाई कसले बुझ्ने? मानिसहरूले अलिक दिनमा पकाएर खान छोड्नेछन्—लेख्न पढ्न छोड्नेछन्। किन? उत्तर छ यी प्रकृतिका विरुद्ध काम हुन्। यसो गर्नाले स्वास्थ्यको सुधार हुन्छ औ आयुको वृद्धि हुन्छ। यी कुरा हुनेछन्—किन? उन्नतिको पूर्ण विकाश हुनाले। जुन अवस्था असभ्य भनिएका वेलामा मानिसहरूको थियो, सोही अवस्था उन्नतिका उच्चातिउच्च शिखरमा पुगेका वेलामा मानिसहरूको हुनेछ। काखको दाँत नउम्रेको नानी औ वृद्धातिवृद्धका अवस्था संसार स्रोतको उत्थान औ पतनसँग तुलना गरे—के बिरिएला?

विभिन्न उन्नतिका मार्गमा संसारका विविध जातिहरू हिँड़िरहेका छन्। कोही हिँड्दै छन्—सय, दुइ सय, पाँच सय, वर्षदेखि। कोही टुङ्गामा पुगेर फर्कने तर्खर गर्दैछन्। नेपाली जाति पनि त्यस बाटामा हिँड्न लागिरहेको छ। स्वयं हिँड्दै तथा लाठीका सहाराले। अन्धकार निमग्न बाटो—भानुको उदय भयो। भानुका ज्योतिले प्रायः ६० वर्षअघि

Vedic Archives Digital Preservation Foundation, Chandigarh

त्यो बाटो प्रकाशित गरायो—देखायो। मोतीराम भट्ट हिँड़े त्यही बाटाबाट, अब हिँड़िरहेका छन् नेपाली नरनारी।

बाल्यावस्था थियो। जुन रूप नेपाली भाषाको आज छ, त्यो रूप १५ वर्षअघि थिएन। जुन थलामा नेपाली जाति अहिले पुगेको छ, १५ वर्षअघि यो जाति त्यस थलामा पुगेको थिएन। बड़ो श्रद्धाले मानिसहरू भानुभक्तले लेखेको रामायण पढ़्थे—लय मिलाएर। एकै रातमा आठै काण्ड रामायण पढ़ेर टुङ्गाएर जम्मै पाप काटिन्छन् भन्ने जनसमुदायको धारणा थियो। अरूले टीका-टिप्पणी गरेका रामायण पनि थिए। कसैले ती रामायणको चाह गर्दैनथे। सबैले भन्थे "भानुभक्तले लेखेका कुराहरू मात्र जम्मै साँचा हुन्। यी भगवान्का परम भक्त थिए। यिनी किताब लेख्नभन्दा अघि मर्थे। स्वर्गमा जति कुरा हुन्थे एक आध घण्टापछि उठेर लेख्थे।" शिशुकाल—पाका मानिसहरूका यस्ता मोजका कुरा—तिनीहरूले एक लय मिलाएर पढ़ेको—कुन बालहृदय होला आकर्षित नहुने।

एक कुनामा बसेर रामायणका जिल्दमा भएको भानुभक्तका चित्र हेर्ने तथा बाल काण्डको, "एक् दिन् नारद" भन्ने प्रथम श्लोकलाई दशचोटि, "एक् दिन्, एक् दिन्, एक् दिन्" भनेर पढ्न चेष्टा गर्नुपर्ने दिन गयो। नैवेद्यमा भानुभक्तप्रति लेखिएका कविताले भानुभक्तको नेपाली साहित्यमा स्थान देखायो। समयले यी महापुरुषका जीवनका घटना—घाँसीसँगको आलाप—कारागारमा बसी पुत्रको व्रतबन्ध गर्न नपाइएका अवसरमा सरकारमा लेखी चढ़ाएको विलाप—गजाधर सोतीकी स्त्रीको आतिथ्य सत्कार—तारापतिका परस्परमा लड़िरहने परिवार—उपस्थित गरायो औ चिह्नायो बालककालमा तपस्वी योगी मानिएका आत्मालाई नेपाली साहित्यजगत्को भानु भनी।

नेपाली साहित्यजगत्का भानु जसले नेपाली साहित्यजगत्मा प्रकाशित भै साहित्यजगत्का विभिन्न बाटाहरू देखाएथे, अस्ताएको ७० वर्ष भयो तापनि आज प्रत्येक शिक्षित नरनारीका घरमा तिनको नामको जपना भैरहेछ।

साक्षात् दर्शन पाइएन—अहिले तिनको शुभनाम जप्ने मौका मात्र छ- तापनि तिनका कविताले तिनको आचरण स्पष्टै अङ्कित गरेको छ। भानुभक्त परम बुझकी, विद्वान्, शान्तिप्रिय; निरहंकारी तथा कर्तव्यपरायण

Vedic Archives Digital Preservation Foundation, Chandigarh

रहेछन्। भानुभक्तमा अर्को ठूलो गुण रहेछ—हास्य-प्रेम। तिनको यो गुण जाहेर हुन्छ, तिनका निम्नलिखित कविताबाट :—

रोज् रोज् दर्शन पाउँछु चरणको ताप् छैन मन्मा कछू।
रात् भर् नाच् पनि हेर्छु खर्च नगरी ठुला चयन्मा म छू॥
लाम्खुट्टे उपिञा उडुस् इ सँगि छन् इन्कै लहड्मा बसी।
लाम्खुट्टेहरु गाउँछन् इ उपिञा मार्छन् म हेर्छू बसी॥

खोरमा थुनिएका छन्, चीफ साहेबलाई लेखी चढ़ाउँछन्—यस्ता हास्यपूर्ण श्लोक। धन्य भानुभक्त!

भानुभक्तका जति कविताहरू छन् खोलाका पानी झैं सहजै बग्नेछन्। कविताका प्रत्येक पद, प्रत्येक शब्दमा—रस छ—आनन्द छ—जीवन छ।

रामचन्द्रलाई वनवासमा जान प्रस्तुत देखी लक्ष्मण क्रोधले आमा बाबुलाई पनि मार्छु भनेर तम्सिन्छन्। यो देखेर रामचन्द्र भन्छन् लक्ष्मणलाई,

"सुन्यौ भाइ! संसार्मा शरिर अति कचा छ जनको।
शरिर् कचा जानी न गर तिमि रिस् कत्ति मनको॥
सबै भोग् चञ्चल् छन् बिजुलि सरि एक् छिन् न रहन्या।
बिचार् यस्तो राखी सहु तिमि बडो हुन्छ सहन्या॥

दुःखमा अथवा रिसमा सबैले मीठा मीठा कुरा गरेर शान्त गराउन खोज्छन्। एक ता सान्त्वना गराउने शब्द, दोस्रो भानुभक्त जस्ता कवि सम्राट्ले जीवन सञ्चार गराउने कवितामा गाँथेको। कुन हृदयमा यसका सारमा आनन्दले ननाच्दो हो? जसले भानुभक्तको रामायण पढ्छ उसले यो श्लोक सदैव उच्चारण गरेको सुनिन्छ।

भानु अस्ताए तर चम्किरहेका छन् तिनका ताराहरू—रामायण—वधूशिक्षा—प्रश्नोत्तर—भक्तमाला—वर्तमान नेपाली जगत्मा। यी ताराहरूका ज्योतिमा नेपाली साहित्यको स्रोत बगिरहेको छ। कुन स्रोतमा बगिरहेको छ? अब बुझ्ने कर्तव्य हो प्रत्येक नेपाली नर-नारीको।

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# कर्तव्य

[ श्री लक्ष्मीनन्दन शर्मा, नेपाल । ]

आदिकविमा भानुभक्तको नाम प्रसिद्ध छ। भानुभक्तको पहाड़ी प्रदेशमा (तनहूँ) जन्म भएको हो तापनि उनको साहित्य-क्षेत्रमा पूरा दखल थियो। विश्वकवि तुलसीदाससँग हरेक बातमा यिनको तुलना गर्न सकिन्छ। जस्तो तुलसीदासले रामचरितमानस लेखेर हिन्दी साहित्यको जन्म गराएथे उस्तै भानुभक्तजीले पनि नेपाली साहित्यको जन्म गराए। यिनीहरूको पद्य-रचना बड़ो लालित्यमय र भावपूर्ण छ। यी दुवैले सबभन्दा पहिले धार्मिक ग्रन्थ रामायणको पुनरुद्धार गरेका हुन्। भानुभक्तजीको जीवनमा कड़ा कड़ा दुःख परे तर उनले सब दुःख हँसिलो मुखले झेले। उनलाई एकान्तवासको बड़ो सोख थियो। हुन पनि जति गूढ़ विचार मनुष्यमा उत्पन्न हुन्छ, त्यो एकान्तवासैबाट हुन्छ। यसैले उनले पहाड़ी प्रदेशमा कहिले एक वृक्षमनि बसी कहिले ओड़ारभित्र पसी अनेक भावपूर्ण सरस कविता लेखे। सामाजिक जीवनक्षेत्रमा पनि ओर्लेर उनले आफ्नो नाम कमाउन खोजेका हुनाले आखिर थुनुवाको अवस्थाको कड़ा यातना सम्म पनि झेल्नुपर्‍यो, तैपनि उनी निर्भयसाथ आफ्नै काव्यरचनामा लागिरहे र यही समयमा रामायण समाप्त गरे। सांसारिक यातनाले उनको सरस हृदयभाण्डमा रस सुकाउनुको बदला झन् अमृतको वर्षा गर्‍यो। उनको भावभङ्गीमा झनझन् नवोत्थान भएर निस्कन लाग्यो। कैयन्ले उनको समालोचनासमेत गरे होलान् परन्तु समालोचनाका दृष्टिमा उनी कदापि वैलाएनन्! झन हरीयोपना लिएर अगाड़ि बढ़े। जस्तो सूर्यको कड़ा घाम नपाईकन कुनै कोमल, सुगन्धी, रमणीय फूलहरू फुल्न सक्तैनन्, त्यस्तै प्रकृतिको पूरा सहयोग नपाईकन कविको काव्यरचना फल्न-फुल्न सक्तैन।

भानुभक्तजीको काव्य-रचनामा प्रकृतिको सहयोग पूरा देखिन्छ। सुन्दर काण्डमा प्राकृतिक दृश्यको बयान बड़ो लालित्यपूर्ण छ। पम्पासरको बयान कस्तो राम्रो छः—

"माछा कच्छप चल्दछन् कमलका सब् गिर्छ केशर्तहाँ।
केशर्ले जब छोपियो पनि भन्या देखिन्छ जल्पो कहाँ॥
नीला लाल सफेदकमलपनि अनेक् रङ्गा भयाका तहाँ।
बोल्छन् हंस चकोर सारसहरू लाटा क्वस्यारा जहाँ॥ २॥

जस्तो निर्मल हुन्छ सन्तहरुको मन् सोहि माफीक जल्।
निर्मल् देखि बहुत् प्रसन्न हुनु भो लाग्यो र साह्रै असल्।
थोडा जलपनि पान् गरी सकल वन् हेर्‍या जगन्नाथ् तहाँ।
देख्या सुग्रिवले डरायर नजर्‍लाया प्रभू छन् जहाँ॥ ३॥

फेरि उनको विद्वता पनि पूरा देखिन्छ। तारालाई उनको पतिको मृत्यु हुँदा आध्यात्मिक विचारबाट कति सजिलो गरी संझाएको छ—

"हे तारजि विचार्नराखि तिमिले शोकै कती गर्दछ्यौ।
यो मेरो पति हो भनेर नबुझी व्यर्थै शरिर्हेर्दछ्यौ॥
जीवै हो पति भन्दछ्यौ पनि भन्या मर्दैन जिव् ता कहीं।
देहै हो पति भन्दछ्यौ त किन शोक् गछ्यौं छ ऊ त व्हही॥
स्फटिक जस्तो जिव् हो शरीरकन लाहा बुझिलिनू।
स्फटिक् लाहाका सङ् धरिकन त दृष्टान्त छ दिनू॥
लाहाका सङ् बस्ता स्फटिक म छु लाछ् भन्छ जसरी।
शरीर्मर्दा मर्छु म पनि भनि जिव् भन्छ तसरी॥ ६७॥

स्फटिक्ले रातो छु भनिकन सुहावस् तर पनी।
सुहावस् यस्जिब्ले शरिर सँगमा मर्छु म भनी॥
न ता जिव् मर्न्या हो शरिरसँग लागेर जनको।
न रातो हुन्या हो स्फटिक सब खेल् जान मनको॥ ६८॥

हनुमान्‌को बीर गाथा कति राम्ररी अङ्कित गरिएको छ—

"यसरि किन बहूतै गर्दछस्सेखि घेरै।
प्रभुकन त परै राख् जोरि छैनस्तँ मेरै॥
अघि सरुँ त तँ जस्ता कोटि रावण्म मारूं।
हुकुम त नभयाको मार्न पो आज क्यारूं॥

यी सब विचार गर्दा उनको पद्यरचना नवरसले परिपूर्ण छ। हुन ता उनी आजकलका सभ्य कवि लेखकहरू जस्ता पढ़ेगुनेका थिएन होलान्, तर उस वेला उनको जत्तिको पढ़ाइ नै प्रशस्त थियो। उनले व्याकरण एवं संस्कृतको अध्ययन गरेका भए तापनि पैल्हेदेखि नै उनमा पद्य-रचनाको बिचार उत्पन्न हुन्थ्यो। एक दिन पहाड़को हावा खान जाँदा उनको एक घाँसीसँग भेट भयो र उसको सबै हाल सोधे। घाँसीले पनि सबै हाल बतायो। उनलाई घाँसीको धार्मिक दिलले ठूलो शिक्षा दियो।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

उसको उच्च विचारको उनले ठूलो प्रशंसा गरे र हिँड्दा हिँड्दै ढुङ्गामा कोर्न लागे। एकाएक कविजननी शारदाको मनमा दया उत्पन्न भयो र यी आदि दुइ श्लोक रचना गरेः—

"भर्जन्म घाँसतिर मन्दिइ धन् कमायो।
नाम् क्यै रहोस् पछि भनेर कुवा खनायो॥
घाँसी दरिद्रि घरको तर बुद्धि कस्तो।
मो भानुभक्त धनि भैकन आज यस्तो॥ १॥

मेरा इनार न त सत्तल पाटि क्यै छन्।
जे धन् र चीजहरु छन् घरभित्र नै छन्॥
त्यस् घाँसिले कसरि आज दिए छ अर्ति।
धिक्कार हो म कन बस्नु नराखि कीर्ति॥ २॥"

यी दुवै श्लोकलाई कण्ठ गरी भानुभक्त घरतर्फ हिँडे। यसै दिन-देखि कवि भानुभक्तका हृदयमा कविताको प्रेम बस्यो र बराबर कविता गर्न लागे। विक्रम संवत् १८९८ मा बाल काण्डको तर्जुमा गरे। यसपछि आठ वर्षसम्म फाटफुट कविता मात्र गरे जुनमध्ये एक श्लोक अभ्रसम्म प्रख्यात छ। संवत् १९०१ मा कलाधर ब्राह्मणलाई उसको घरमा मन्त्र सुनाउन जाँदा रम्घा गाउँदेखि दुइ कोश पर बस्ने एक गजाधर सोती उनको मित्र थियो र वास त्यहीं बसूँ भनी गए, तर घरमा नभएकोले उसका मानिसले उनलाई चिन्हेनन्। वास माग्दा गजाधरकी बुहारीले पिँढ़ी देखाइदिई र त्यहीं बसे। एक क्षणपछि गजाधरकी स्त्री आएर त्यहाँ बस्न दिइन, तर बुहारी दयालु हुनाले ढिकी राखेको छाप्रोमा लगी बस्न दिई। तुरन्तै गजधरकी स्त्री गएर त्यहाँबाट निकालिदिई र उनी त्यहाँबाट निस्केर अलि पर वास बसे। उनले त्यहीं बसेर यो कविता बनाएः—

गजाधसोतीका घर बुढि अलच्छिन्कि रहिछन्।
नरक् जानालाई सबसित बिदाबारि भइछन्॥
पुग्यौं साँझमा तिन्का घर पिँढ़िमहां वास गरियो।
निकालिन् साँझैमा अलिक पर गुज्रान गरियो॥ १॥

गजाधरका छोराको तनामा बाँधी उसलाईसमेत कण्ठ गराएर गए। यस्ता यस्ता भावपूर्ण कविता एक पर्वतीय बाहुन-चरीको मुखबाट निस्कनु सानो कुरा होइन।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

एकाएक यस्ता काल्पनिक उन्मादको तुफान उनको प्राणमा उठेर आउँदथ्यो। विश्वमोहिनी मदिरामय रूप उनको अश्रुपूर्ण चक्षुको समक्ष उपस्थित हुन्थ्यो र त्यसैको तालमा उनी नाच्न लाग्थे। अभ्र-पयोराशिमा उच्छृंखल विद्युन्माला भीमगर्जन गर्दथ्यो। चतुर्दिकमा अन्धकारको माया प्रसृत हुन्थ्यो। आलोकको एक रश्मिरेखा पनि पृथ्वीमा नदेखिएर कविको हृदयमा कति पुरानो एवं चिरन्तन पिपासाकुल-ज्वाला धपधप गर्दथ्यो र उनी पागल झैं भएर गाउन लाग्थे।

"हे रावण् किन गर्दछस्सरनि यो धिक्कार्म मांछू बरू।
मेरो मुड्कि पस्या पछी पनि बचिस् बोल्छस् यहाँ क्या गरूँ॥
एक चोट् हान्तँ पनी मलाइ म पनी फेर्हान्छु छातीमहाँ।
एक् मुड्की जब हानुला त नमरी उम्केर जालास्कहाँ॥ ४७॥"

गाउँदा गाउँदै उनको प्राण मायाको यस्तो भ्रम-तमः पूरित एवं आडम्बर परिपूर्ण ग्रहको ऐश्वर्य-विनश्वरताको स्मरण गरेर उन्मत्त हुन्थ्यो। समीपस्थ झंझावात र वृक्षका चक्रवाक मिथुनको हाहारवले उनलाई झन् अधिक निपीडित गर्दथ्यो र उनी डढेलो लागेको लंकाको यस प्रकार बयान गर्दथे—

बन्धन्देखि त खुस्कि सूक्ष्म रुपले पर्वत्सरीका भया।
ठूलो स्तम्भ उठाइ राक्षस अनेक् मास्या र कुदै गया॥
बल्दो लामु पुछर्लिएर घर घर् कुदै सहर्मा डुली।
पोल्या सब् सहरै छुटेन कहिघर्बांकी कतै एक् भुली॥ २५॥

लाग्यो बल्न शहर्जल्यो र सब घर् सब्बंद रस्ता भई।
भागी जान नपाउँदा हुँदि अनेक् राक्षस् अटाली गई॥
फाल्हालीकन अग्निमा परि मस्या यो चालशहर्मा भयो।
पोल्यानन् घर एक् विभिषणजिको त्यो मात्र बाँकी रह्यो॥ २६॥

मनोहारिणी दिनश्रीको अञ्चलमा लुकेर हनुमान् सीताको खोजमा हिँड्रिहेका थिए, चारौंतर्फ शान्ति थियो, कोलाहलको कहीं नाम पनि थिएन; संसारको सारा हाहारव, सारा संघर्षण, अशोक वाटिकाको दिलभित्र विलीन हुन्थ्यो र कवि त्यो सौन्दर्यमय कारुणिक अवस्थाले प्रभावित भएर आफ्नो प्राणको वेदना एवं तृष्णा प्रकट गर्न लाग्दथे—

Vedic Archives Digital Preservation Foundation, Chandigarh

"अधिक गभिर छाया सूर्यको ताप् नपस्न्या।
उपर अति पहेंला वेस् चरा मात्र बस्न्या॥
वरिपरि पनि नाना राक्षसीको छ घेरा।
रुखमनि तहिं सीता देखिइन्फेद नेरा॥ ३०॥

भोकी मैलि निन्याउरी न त कपालकोख्याकि सब् केश् उसै।
लट्टा मात्र गख्याकि खालि भुमिमा रूँदै बस्याकी यसै॥
राम् राम् राम् यति मात्र बोलिरइंदी देख्या र साना भई।
पातका अन्तरमा लुक्या ति हनुमान् रुखका उपर्मा गई॥"

यस्तो करुण रसको कविता गाउँदा गाउँदै उनी विपिन-स्थित कुटीरमा पुग्दथे र त्यहाँ बसेर आफ्नो मनको वेदना एवं शून्यपनदेखि विह्वल हुन्थे। नजाने कहाँबाट दलका दल प्रलोभन आएर उनको मन आच्छन्न गर्दथे र उमङ्गहरू उनको मानसलोकलाई विकम्पित एवं हिल्लोलित गर्नलाग्दथे। एक मलय-लुब्ध उद्दीपन जस्तै उनको मनमा नाच्न लाग्दथ्यो र उनी गाउन लाग्दथे:—

"रां मेरा पतिहुन् भनेर तिमि पो भन्छ्यौ उ भंछं कहाँ।
मेरी हो यदि भंद्थ्या पनि भन्या आऊनु पर्थ्यो व्हाँ॥
माया छैन तिमी उपर्त बुझियो शोक् मात्र गछ्यौं यसै।
यौवन् व्यर्थ गयो विचार किन यो यौवन् अफालछ्यौ यसै॥ ३७॥
यौवन् व्यर्थ नफाल व्यर्थ मनमा शोक् गर्दछ्यौ यो कती।
मैलाई पति मान आज तिमिले हुन्छू म तिम्रो पति॥
मेरी पत्नि भयौ भन्या त सबकी मालिक् हुन्याछौ म ता।
साह्रै प्रेम् गरि राखुँला बुझ अधिक् बेगूनि छन् राम ता॥ ३८॥..."

यस्तै रीतसँग सीतालाई प्रलोभन देखाउँदा पनि रावणको दाल गल्दैन र उ रिसाएर फर्कन्छ। कवि पनि त्यसतर्फको विचार छाड़ी मनको लहरमा गोता मार्न लाग्दछन्। कहिले उनी भावमा डुबुल्की मार्दछन्, कहिले उत्रन्छन्। यस प्रकार डुब्दाडुब्दा उनको मनमा एकदम साहस उठेर आउँछ र आफैं बड़ो वीर हुँ कि भनेझैं गरेर गाउँछन्।

"प्राण् बाण् हानि सबको म हरेर छिन्छू।
तिम्रो शरिर्पृथिविमा म गिराइ दिन्छू॥
यस्ता वचन् सुनि ति लक्ष्मणजी रिसाया।
हान्या र बाण् तहिं तुरुन्त थला बसाया॥ ५॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

मूर्छा पर्‍यो दुइ घरी र जुरुक्क ऊठ्यो।
लाल् लाल् नजर्गरि रिसाइ अगाड़ि छूट्यो॥
मेरो पराक्रम रती नबुझेर पैह्ले।
हानिस् पराक्रम त लौ बुझि लेन ऐह्ले॥ ६॥......"

यस्तो गाउँदा गाउँदै कविको हृदयमन्दिरमा कहाँबाट एकाएक दुःखित अबलाको करुण क्रन्दन पुकार गुञ्जन लाग्दथ्यो र उनी ती अबलालाई ढाडस दिई भन्न लाग्दथे :—

"बांच्यै देखि त देखिइन्छ सब थोक् यस्तो बुझी ज्ञानले।
यो शोक् दुर्गरि हाल हुन्छ अब क्या यस्ता असत्ध्यानले॥
अज्ञानै छ भुलाउन्या शरिरमा यो देह मै हूँ भनी।
त्यै अज्ञान् बलवान् भयो भनि भन्या फैलिन्छ संसार्पनी॥ ३३॥
आत्मा ज्ञानस्वरूप् बुझेर मनले अज्ञानको नाश् गरी।
स्वस्थै भै रहु शोक् नमान तिमिले क्या हुन्छ यो शोक् गरी॥..."

इत्यादि अनेक भावपूर्ण सरस कविताको रचना गरेर कविकुलमणि भानुभक्ताचार्य गए। उनको बारेमा जति लेखे पनि हामी नेपालीको लेखनी थर्थराएर आउँछ। लेख्यौं भने एक पुस्तक नै हामी लेख्न सक्छौं, परन्तु यहाँ खालि उनको भावको केही अंश मात्र बयान गरिएको छ।

यी सब विचार गर्दा हामीलाई ज्ञान हुन्छ कि नेपाली आदिकविमा भानुभक्तको स्थान अन्यतम छ। उनको रचनामा उद्वेग छ, तड़पन छ, उद्गार छ—लालसाको सन्तप्त पुकार छ। यी कविमा अपरिसीम विषाद—महान् वेदना एवं भावभङ्गी लुकेको छ। उनको यही वेदना—भावभङ्गी—विषाद अड़ी अड़ी हाहाकार गरेर निस्कन्छ र उनी आफ्नो रचनामा सन्तुष्ट भएर नाच्न लाग्दछन्, झुम्न लाग्दछन्! यस्ता नेपालीका आदिकवि, नेपाली भाषाका निर्माणकर्ता, श्री भानुभक्तजीको गुणगान गाउनु हामी नेपालीको मुख्य कर्तव्य हो।

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# नेपाली जातित्वका विकाशमा भानुभक्तको स्थान

[ श्री सूर्य्य विक्रम ज्ञवाली, बी०ए०, बी०टी०, दार्जीलिङ । ]

प्रकृतिमाताको क्रीडास्थल स्वर्ग समान पुण्यभूमि हाम्रो नेपालमा अनेक वीर पुरुषले समय समयमा जन्म ग्रहण गरेका छन्। यी वीराग्रणीहरूले आफ्ना वीरताको कार्यले नेपालका इतिहासको स्रोत नै आफूले चिताएका दिशामा बगाई देशको ठूलो उपकार गरेको कुरो हामीलाई थाहा छ। यस्तै महात्माहरूलाई राष्ट्रनिर्माता भनी इतिहासमा भनिन्छ। यिनै राष्ट्रनिर्माता महात्माहरूका महान् कार्यको समय समयमा स्मरण गर्नाले हाम्रो आत्माले शक्ति, जीवन औ तेज प्राप्त गर्छ र हामी स्वदेशका योग्य सन्तान हुन सक्छौं।

आजका ३८० वर्ष पहिलेको एउटा कुरो भन्छु औ आफ्ना वेलाको त्यो सानो कुरो कति ठूलो कुरोको बिउ रहेछ त्यसको विचार गर्नुहोस् औ त्यो बिउ राख्ने महात्मालाई नमस्कार गर्नुहोस्। पश्चिम नेपालमा लमजुङ्ग भनेको एउटा सानो इलाका छ। त्यो इलाकाका राजा यशोब्रह्मका तीन छोरा थिए। (१) नरहरि शाह, (२) द्रव्य शाह, र (३) नरपति शाह। यशोब्रह्मलाई राजा भनेको मात्र हो; अचेल राजा भन्नाले जो चित्र हाम्रा मनमा उत्पन्न हुन्छ, अर्थात् ठूलो दरबार, झलमल गर्ने शिरपेच, धेरै धन, महान् ऐश्वर्य, हुकुम मान्ने मानिस इत्यादि तिनको यी यशोब्रह्ममा नितान्त अभाव थियो। यिनी फुसको छाना भएका घरमा बस्थे, मोटा लुगा लाउँथे औ यिनको आमदानी पनि थोरै थियो। राजाको जेठोबाहेक अरू छोरो हुनु बड़ो बेमोजको कुरो हुन्छ किनभने जेठो छोरो ता गद्दीको हकवाला हुनाले एक दिन राजा हुने सपना उ सधैं देखिरहन्छ। तर अरू छोराका सम्मुख अधीनताबाहेक अरू थोक केही रहँदैन। अतएव यी भाइहरूमध्ये अलि स्वतन्त्र बुद्धि भएको कुनै भाइ भयो भने आफ्नो अवस्था परिवर्तन गर्न छटपटाइरहन्छ। यशोब्रह्मका माहिला छोरा द्रव्य शाह स्वतन्त्र प्रकृतिका मानिस थिए। उनलाई चौतरिया भएर बस्न मन थिएन, राजा हुने उनको रोल थिएन। त्यसै मुरमुराई बसेका थिए। एक दिन छिमेकको गोरखामाथि आक्रमण गरी उहाँको राजालाई लड़ाइँमा मारी आफू गोरखाका राजा भए। तिनताकका पहाड़का जीवनमा यो एउटा साधारण घटना थियो। जसरी गोरखाको मतवाली खण्डका राजालाई मारी द्रव्य शाहले गोरखा जितेथे उसै गरी अर्को बलियो राजाले

Vedic Archives Digital Preservation Foundation, Chandigarh

उनलाई मारी गोरखा जित्न सक्थ्यो। लमजुङ्गका राजा नरहरि शाहले गोरखा मेरो हुन्छ भनी आफ्नो हक कायम गर्न खोजे तर द्रव्य शाहले मानेनन्। मेरा बाहुबलले अर्जन गरेको राज्य मेरो हुन्छ भनी हठ गरी उनी बसे। दाज्यूभाइको गोरखाका लागि झगड़ा पर्‍यो, लड़ाइँ भयो। तर द्रव्य शाह गोरखाका राजा भएको भैगए। स्वतन्त्र गोरखा राज्यको स्थापना भयो। गोरखाली राजा, गोरखाली प्रजा भन्ने भाव सृष्टि भयो। यी सबै कुरा त्यो वेला आगाका झिल्का जस्ता थिए। बलेर आगाका फिलुंगा होलान् भन्ने कसका मनमा थियो? उस्तै कोही मनस्वीबाहेक अरू कसले यो बिउ बढ़ेर रूख होला भनेर चिताएको होला?

द्रव्य शाहपछि उनका चारौं पिढ़ीमा राम शाह भनेका राजा भए। यिनले आफ्ना पराक्रमले गोरखा राज्यको विस्तार बढ़ाए। उत्तरमा भोटका सीमानासँग गोरखाको सीमाना जोरिन गयो औ पूर्वमा नुवाकोट इलाकासम्म पुग्यो। पश्चिमका लमजुङ्ग, तनहूँ आदि राज्यलाई लड़ाइँ गरी यिनले दबाइराखे। द्रव्य शाहले लाएको बिउ अब एउटा मजाको बोट भयो। पहाड़का राजकाजमा गोरखाली जातिको आदर हुन थाल्यो। द्रव्य शाहले लाएको बिउ कसैले चिताउँदै नचिताएका रूपमा बढ़्न थाल्यो।

राम शाहका सातौं पिढ़ीमा गोरखामा फेरि घाम झुल्क्यो। पृथ्वीनारायण शाह गोरखाका राजा भए। यिनले पूर्वपट्टि आक्रमण गरे औ प्रायः आफ्नो जीवनभरी संग्राम गरी नेपाल खाल्डाका नेवारी राज्यहरू तथा अझ पूर्वको किरात र लिम्बुवान प्रदेश जिती आफ्नो राज्यको सीमाना दार्जीलिङसम्म पुर्‍याए औ दक्षिणमा पनि निकै राज्य जिते। अब ता द्रव्य शाहले लाएको बिउ एउटा रूख भयो। पहाड़ खण्डमा सबै योसँग डराउने भए औ यसको धाक मान्ने भए।

राज्यविस्तार सँगसँगै एउटा अर्को परिवर्तन यो जातित्वमा हुन आयो। गोरखाली जातित्वमा नेवार र किरात जातित्व मिसिन आए। गोखालीसँग बहादुरी थियो, नेवारसँग कला थियो औ किरातसँग प्राचीन गौरव थियो। तीनै जाति मिसिए औ एउटा नवीन जातित्वको सृष्टि भयो। त्यो थियो नेपाली जातित्व।

यो जातित्वलाई जन्म दिने बित्तिकै पृथ्वीनारायण शाहको मृत्यु भयो। तर उनको पञ्चभौतिक शरीर नभए तापनि उनको आत्मा अझ नेपालीहरूका माझमा थियो औ छिटै नेपालीहरूले आफ्नो राज्य पश्चिम-

Vedic Archives Digital Preservation Foundation, Chandigarh

तिर बढ़ाई सतलजका किनारसम्म पुऱ्याए। बीचमा एक दुइ बाधा आइलागे। अन्त्यमा यो राज्यको सीमाना पूर्व मेची पश्चिम काली हुन आयो। सम्झनुहोस्, गोरखालाई, कति सानो थियो। सम्झनुहोस्, अहिलेको नेपाली साम्राज्यलाई। त्यसका तुलनामा कति ठूलो छ?

यो भर्खर जन्मेको नेपाली जातित्वको गौरव अति ठूलो भयो। हिन्दू स्वतन्त्रता भारतमा हरायो। हिमालयका आश्रयमा त्यसको रक्षा गरेर बस्यो नेपाली जातित्वले। अहिलेसम्म हिन्दू स्वतन्त्रता त्यहीँ बसेको छ।

नेपाली जातित्व यसरी हिन्दू स्वतन्त्रताको एक मात्र वारीस भयो। यसका सहायक थिए नेवार, किरात, मगर, गुरुङ्ग, तामाङ्ग,। सबै भिन्न भिन्न बोली बोल्थे, सबैका आचार विचार पृथक् पृथक् थिए। अर्का शब्दमा भनूँ भने नेपाली जातित्व विविध जातिको एउटा पसारो थियो। एउटा थुप्रोको अर्को थुप्रोसँग आन्तरिक सम्बन्ध र सहानुभूति थिएन। नेपाली जातित्व मूक थियो, बोल्न सक्तैनथ्यो किनभने यसको भाषालाई बुझाउने केही युक्ति भएको थिएन। नेपाली जातित्व बलहीन थियो किन-भने यसका सबै अङ्गले हामी जातीय शरीरका अङ्ग हौं भनेर ठानेका थिएनन्। साम्राज्य ता यसले जितेको थियो तर यसलाई डढ़ाउन सक्ने आगो पनि यसैभित्र थियो। त्यो आगो कसरी निभ्यो?

यिनै ताक तनहूँमा एक जना बाहुन जन्मे। यिनको नाउँ थियो भानुभक्त। यिनले नेपाली बोलीमा कविता गर्ने विचार गरी रामायण नेपाली बोलीमा लेखे। यिनको रामायण लेखिने बित्तिकै बाहुन छेत्रीले मात्र पढ़ेनन् किन्तु मगरले पढ़े, गुरुङ्गले पढ़े, नेवारले पढ़े, किरातीले पढ़े, तामाङ्गले पढ़े औ सो पढ़ी सबै नेपाली जातित्वको कत्रो ठूलो गौरव तथा कति ठूलो धनका वारीस आफू भएका रहेछन् थाहा पाउन लागे औ सबै त्यो महान् सम्पत्तिको उत्तराधिकारी हुन पाएको हुँदा खुशी भए। नेपाली जातित्वरूपी घरका थप थप राखिएका इँट अब भानुभक्तका साहित्यका बज्रलेपले जोरिन आए। सबै रामलाई गौरवका दृष्टिले हेर्न थाले, सीता सबैकी आदर्श नारी भइन्, लक्ष्मण जस्ता भाइको सबै आदर गर्न थाले औ रामराज्यको मधुर कल्पना सबैले देख्ने सपना भयो।

यी कुरा बाहेक नेपाली जातिले भाषा पायो। अब यो सबैलाई आफ्ना कुरा बुझाउन सक्ने भयो। भानुभक्तपछि यो भाषामा होमनाथ बोले, मोतीराम बोले। हाल लेखनाथ, बालकृष्ण शम्शेर, सिद्धिचरण जस्ता कवि नयाँ नयाँ सुर भिकी यसै भाषामा गीत गाउँदैछन्। दिन प्रतिदिन

Vedic Archives Digital Preservation Foundation, Chandigarh

यसलाई बोल्ने र गाउनेको संख्या बढ़दो छ। यसले गर्दा यो जातिका मानिसको दुःख र दर्द तथा सुख र आशा अंश नगरिएको सम्पत्ति भएको छ। युरोपका विगत महायुद्धमा एउटा मगरले विक्टोरिया क्रस पाउँदा बाहुन छेत्रीको मुटु हर्ष र गौरवले उफ्रन थाल्यो औ पटना विश्वविद्यालयमा एउटा नेवारले सर्वोच्च स्थान प्राप्त गरी परीक्षा पास गर्दा सारा नेपाली घमण्डले आफ्नो जुँघा मुसार्न थाले। यो ऐक्य, यो भ्रातृभाव औ यो समानताका विकाश सँग सँगै नेपाली जातित्व झन् झन् बलियो हुँदो छ औ यसको यश र कीर्ति बढ़्दो छ।

आज हामी, नेपाल हाम्रो बगैँचा, हामी त्यसका फुल हौं भन्न लागिरहेछौं। आज फलानो लड़ाइँमा जित्ने, ढिस्को लड़ाइँमा हार्ने भन्ने कुरा हराइसक्यो। आज हामी सबै नेपाली जातित्वका सुन्दर बगैँचाका माली भएका छौं। आज हामी सबै पहिलेका कुरा बिर्सी त्यो बगैँचा कसरी राम्रो हुन्छ, कसरी त्यसमा राम्रा राम्रा फूल फुल्लान्, कसरी त्यसमा सुन्दर फूलका बिरुवाहरूलाई बढ़्न नदिने झारपात एउटा पनि नरहुन् भनी तँ छोड् कि म छोड् गरेर परिश्रम गर्न लागिरहेका छौं। आज हामी सबै हाम्रो नेपाल साँचीकै भूस्वर्ग होस् भनेर उद्योगमा लागेका छौं। आफ्ना वर्गत बुद्धिले भियाएसम्म चेष्टा गर्न सबै अघि सरेका छौं। सबैले मैलपोस सुरुवाल लाएका छौं। सबै नेपाली भाषा बोल्छौं। सबै पशुपतिनाथ र गुह्येश्वरीको आराधना गर्छौं। सबै श्वेत हिमाच्छादित पर्वतराजबाट प्राण ग्रहण गर्छौं। सबै प्रेमकी बागमतीमा नुहाउँदैछौं। पश्चिमका सातवटी काली औ पूर्वका सातवटी कोसीलाई आफ्नै दिदी-बहिनी ठानेका छौं। सबैका मुखबाट एकनाससँग हाम्रो नेपाल भन्ने ध्वनि निस्कन्छ।

जातित्वको यो विकाश भर्खर जस्तो भएको छ। अझ यसले पुग्नुपर्ने ठाउँ टाढ़ै छ। तर बाटो ता हामी लागिसकेका छौं, यसमा केही सन्देह छैन। त्यो बाटो खन्न झण्डै पहिलो भने जस्तो कोदालो कसले बाहुला सारी आफ्ना हातमा लियो? को म एउटा नयाँ बाटो बनाउँछु भनी बाटो नभएका ठाउँमा अघि सर्‍यो? कसले म सबैलाई रामभक्तिका धागोमा उनी माला गाँस्छु भनी कम्मर कस्यो? कसले म मेरा सारा दिदी-बहिनीलाई सीता तुल्याउँछु भन्ने सपना देख्यो? को म नेपाली मात्रलाई राम, लक्ष्मण, भरत, शत्रुघ्नको प्रेमपूर्ण भ्रातृभावका डोरीले बाँध्छु भनी अग्रेसर भयो? कसले झण्डै मूक भने जस्तो नेपाली जातित्वलाई

[ बाँकी पृष्ठ ६८ मा

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# अर्चना

[ कविराज श्री दीननाथ सापकोटा, आयुर्वेदविज्ञानाचार्य, काशी। ]

नेपालराज्यान्तर्गत तनहूँ प्रान्त चुँदी बेंसीका रम्घा ग्रामनिवासी आचार्य श्रीकृष्ण पण्डितका नाती कविवर भानुभक्ताचार्यको नाम सबै नेपाली-लाई थाहा नभए तापनि तिनका मीठा कविताका कतिपय पंक्तिहरू ता आर्यघाटमा पनि पुगिसकेका बोल्न सम्म सक्ने वृद्धदेखि लिएर भरखर आमाको स्तनपान गर्न छोड़ेका तोतेबोली बोल्ने बालकहरूका मुखबाट पर्यन्त अति श्रद्धापूर्वक उच्चारित भएको सुनिन्छ। यसैले हाम्रा स्वर्गीय कविप्रति नेपाली जनताको कस्तो हार्दिक प्रेम रहेछ भन्ने हामी स्पष्ट बुझ्न सक्छौं। हामी समस्त नेपाली कवि भानुभक्तका भक्त छौं।

हे अमरकीर्ति! तनहूँपुत्र! उच्चवंशावतंस! ब्रह्मविद्या-विशारद! भक्त! धर्मात्मा! परोपकारी! भानुभक्त! हामी तिमीलाई कसरी बिर्सन्छौं! कोही लेख लेखी तिमीलाई सम्झन्छौं त कोही अन्तस्करणले आफ्ना हृदयमा तिम्रो स्मरण गर्दछौं!

सँधै अवाच्यशब्दले भरिएको गीत गाउने घाँसी, गोठाला, कोदाले, हली, दाउरे प्रभृतिका मुख र कान दुवै इन्द्रियमा तिमीले रामायणको अमृतकणा छर्‍यौ! हे रामभक्त! जहाँ जहाँ नेपालीहरू बसेका छन् संसार-का ती सबै स्थानमा तिम्रा मीठा पंक्तिहरूको पाठ हुन्छ। अहोरात्रको कुन घड़ी, कुन पला, कुन विपलामा तिम्रा मीठा पंक्तिको जप नेपालीप्रजा गर्दैन?

बाल्यकालमा तोते बोली बोली आफ्नी माता तनहूँ भूमिको कहीं उठेको कहीं दबेको र कहीं समथर भएको काखमा तिमीले "भर् जन्म घाँस तिर मन् दिइ धन् कमायो, नाम् क्यै रहोस् पछि भनेर कुवा खनायो। घाँसी दरिद्र घरको तर बुद्धि कस्तो? मो भानुभक्त धनि भै किन आज यस्तो॥ मेरा इनार नत सत्तल पाटि क्यै छन्, जो धन् र चीजहरु छन् घर भित्रनै छन्! यस् घाँसीले कसरि आज दिये छ अर्ती,

[ पृष्ठ ६७ को बाँकी ]

भाषा दियो? कसले जाबो एउटा नेपाली बोलीलाई उदाउन लागेका सूर्य-को कान्ति भएको साहित्यको रूप दिने चेष्टा गर्‍यो? कसले खनेको बारी आज नेपाली साहित्यकारहरू गोड़ी झन् राम्रो तुल्याउने चेष्टा गर्दैछन्? ती हुन् महात्मा भानुभक्त। तनहूँका एक जना साधारण बाहुन। आउनुहोस् आज उनको स्वर्गवास भएको सत्तरी वर्षका अवसरमा ती महात्माको गुणगान गरौं औ तिनलाई नमस्कार गरौं।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

धिक्कार हो मकन बस्तु न राखि कीर्ति ॥" भनी यताउता लोटपोट गरेको तिम्री जननी कसरी बिर्सन सक्छिन्?

ब्राह्मण जाति नै उच्चवंश हो। त्यै वंशमा उत्पन्न भएका हे उच्चवंशावतंस! तिमीले नेपाली साधारण जनतालाई रामायणको शिक्षा गरी ब्राह्मणको कर्म नै विद्या पढ्नु पढाउनु हो भन्ने संसारलाई देखाइदियौ! तिम्रो यो कर्मले कुन नेपाली ब्राह्मण तिमीलाई बिर्सन सक्छ?

नेपालीहरूले पनि अनायसैमा वेदान्तको सार बुझ्न सकी जीव र आत्माको भेद र ऐक्यको विचार गरी, देहावसानकालमा ब्रह्मतत्व बुझी फेरि यस संसारमा ती निर्बोध नेपाली जनताले भड्कनु नपरोस् भन्ने ध्येय राखी हे ब्रह्मविद्याविशारद! तिमीले वेदान्तको सार भएको रामगीताको पनि आफू मृत्युशय्यामा सुती सुती मुखैले कवितामा अनुवाद गरी आफ्ना पुत्र रामनाथद्वारा लेखाई प्रचार गरायौ! यो तिम्रो भाषाप्रेम, यो तिम्रो दया, यो तिम्रो दानलाई नेपालसन्तति के कहिल्यै बिर्सन सक्छ?

तीव्र बुद्धि भएका बड़ा बड़ा विद्वान्हरूले पनि शास्त्रहरूको मन्थन गरी प्रपञ्चसारको ठेकाना लाउन सक्दैनन् भने, चारैतिर पहाड़ै पहाड़ले घेरिएका, हिमाचलबाट झरेका अनेक नदी नाला र झरनाका कलकलध्वनिमा नै मुग्ध रहेका, रूख, पोथ्रा, लहराहरू र ढुंगो, माटो, वालुवाका सहचर भएका यी मेरा नेपालीभाइहरूले संसारलाई कसरी पार गर्लान् भन्ने दयाभावले प्रेरित भई तिमीले भक्तिरसपूर्ण भएको भक्तमाला र रामायण लेखी आवालवृद्धवनिता सबैलाई भक्त बनायौ। भक्तदेखि परमेश्वर चाँड़ै नै सन्तुष्ट हुन्छन्। ईश्वर तुष्ट भए संसार तर्न केही गाहारो छैन। हे भक्तवत्सल भानुभक्त! यो तिम्रो कत्रो धर्म र कत्रो परोपकार हो! तिमीले आफ्ना स्वार्थका निमित्त रामायण रचना गरेका हैनौ। तिमी ता विद्वान् छँदै थियौ। तिमी स्वार्थी भए आफैं मात्र तर्ने उपाय गर्थ्यौ। सबै भाइ तरुन् भनी तिमीले रामायण लेख्यौ। तिम्रो त्याग र परोपकाररूप ऋणले हामी नेपालीहरू कहिल्यै पनि उऋण हुन सक्दैनौं।

हाम्रा स्त्रीसमाजलाई पनि तिमीले शिक्षा दिएकै छौ। "वधूशिक्षा" लेखी स्त्रीहरू पनि पढ्न पढाउन सक्ने हुन्, समयमा कर्मच्युत नहुन्; पतिपरायणा भै गार्हस्थ्य जीवन शान्तिपूर्वक निर्वाह गरून् भनी हाम्रा गृहलक्ष्मीहरूलाई ज्ञान दियौ। तिमी तिनीहरूका पनि सदा प्रीतिभाक् छौ!

हे नेपालीजातिका गुरु! हामीले तिम्रो दर्शन गर्न पाएनौं! तिम्रो पूजा गर्न सकेनौं। आत्मा अमर हुनाले तिमीलाई नित्य सम्झी यिनै हाम्रा विचित्र शब्दका टूटेफूटेका पंक्तिहरूले नै तिम्रो अर्चना गर्दछौं।

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# भानुभक्तप्रति हाम्रो कर्तव्य

[ श्री पूर्ण दास, नेपाल। ]

राष्ट्रभाषाको उपासनामा अवश्य नै जाति, देश तथा राष्ट्रको उन्नति तथा उद्धार निहित छ। जुन जातिको साहित्यमा कलाकारको उत्सर्ग छैन, जुन देशको साहित्यमा मानवको उच्च भावनाको अभाव छ औ जुन राष्ट्रको साहित्य निर्जीव छ, त्यो जाति, त्यो देश, त्यो राष्ट्र अवश्य नै उन्नत भनाउन सक्दैन। यदि पाश्चात्य देशमा शेक्सपियर, इमर्सन, गोयथ, स्पेन्सर, र टालसटाय जस्ता कवि, तत्वदर्शी, विचारक र कलाकारहरूको उत्साह, लगन र त्यागको पाश्चात्य साहित्यमा अभाव हुँदो हो ता, मलाई ता विश्वास छैन कि आज जुन रूपमा, जुन उन्नत शिखरमा उनीहरू पुगिरहेका छन् सो पुग्दथ्यो? आज यदि हिन्दुस्थानमा अमर कलाकार कवीन्द्र रवीन्द्रनाथ टैगोर नहुँदा हुन् ता के देशले यति चाँड़ो निद्रा त्याग्न सक्थ्यो? कदापि सक्दैनथ्यो। विचारक र कलाकारहरूको प्रयत्न निःसंशय उन्नतिको सहायक हो। यसै सत्यको स्फुरण हुँदा हाम्रा आदिकवि भानुभक्तले आफ्नो हृदयको पवित्र र उच्च भावनालाई रामायणको रूप दिएथे। उनले आफ्नो मातृभाषाको सेवामा आफ्नो शान्तिको बाटो मात्र पहिल्याएको होइन अपितु हामीहरूलाई बाटो पनि देखाएर गएका हुन्। उनी हाम्रा साहित्यिक महारथी हुन्। उनको भाषाप्रेममा संकल्प, लगन र उत्सर्ग निहित छ। त्यसैले उनी धन्यवादको पात्र मात्र होइन, हाम्रो श्रद्धाको अधिकारी पनि हुन्। जुन समयमा उनले अत्यन्त अमूल्य सेवा भाषामा अर्पण गरेथे त्यस समय उनलाई प्रोत्साहन दिने कोही थिएनन्। भाषाको सेवकलाई त्यस समयका पण्डित भनाउँदा मानिसहरूले घृणा नगरे तापनि प्रशंसाको दृष्टिले अवश्य हेर्थे भन्न सकिदैन। उनी माली नभएको बगैंचामा फले थे, फूले थे।

आज उनै कविवरको स्मरण र सम्मान गर्न हामी प्रस्तुत भएका छौं। हामी धेरै जसोले यस समय आफ्नो भावुक हृदयबाट निस्केको उद्गारले उनको स्मरण गर्नेछौं, प्रशंसाको पुल बाँध्नेछौं तर खोक्रो प्रशंसाले मात्र नता कुनै मृत आत्मालाई शान्ति मिल्ला न सम्मान प्रदर्शित गरिएकै ठहरिएला। यस कारण प्रशंसाले मात्र होइन परन्तु सार्थक कार्यले उनको सम्मान गर्नु हाम्रो कर्तव्य हो। उनको सम्मान त्यसै वेला गरिएको ठहरिएला जुन समयमा उनले देखाएको बाटोमा हामीहरू अग्रेसर हौंला।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

उनले रामायण जस्तो ग्रन्थको रचना गरी मातृभाषाको सेवातिर लाग्नुपर्ने कर्तव्यको शिक्षा दिएर गए। औ यसको निमित्त कति संकल्प, लगन र उत्सर्गको आवश्यकता छ सो पनि देखाएर गए। हामी साहित्यिकहरूले पनि आफ्नो संकल्प, लगन र उत्सर्गद्वारा ग्रन्थहरू रची राष्ट्रभाषाको भण्डार भरौं। यसको अंग पूर्ण र पुष्ट गरौं। सिंगारौं। श्रीसम्पन्न गरौं। हाम्रा कविवरले रामायणको रचना गरे। त्यसले भाषाको जति प्रचार गर्‍यो मानिसमा पवित्र भावनाहरू जगायो सो वर्णनातीत छ। त्यो समय त्यसै ग्रन्थको उपयुक्त पनि थियो। तर अबको समयलाई त्यतिले मात्र तृप्ति मिल्नु मुश्किलै छ। वर्तमान समयको दृष्टि धेरै व्यापक छ। यस कारण हाम्रो साहित्यको क्षेत्र पनि विस्तृतै हुनुपर्छ। हाम्रो साहित्यमा धर्म पनि होस् औ विज्ञान पनि, कला पनि होस् औ दर्शन पनि। त्रुटिको अभावले नै साहित्यको वृद्धि हुनेछ।

आज जुन गतिले हाम्रो साहित्य अग्रेसर हुन थालेको छ त्यो अवश्य नै उज्ज्वल भविष्यको लक्षण हो। जति भाषाको सेवा नेपाली भाषा प्रकाशिनी समिति र नेपाली साहित्य सम्मेलनले आज भोली गरिरहेका छन् त्यो निश्चय नै स्तुत्य छ। दुवै संस्थाबाट उपयोगी ग्रन्थहरू प्रकाशित हुँदै आइरहेछन्। पत्र-पत्रिकाहरूको सेवा पनि थपिंदै आइरहेको छ। संस्था र पत्र-पत्रिकाहरूको प्रोत्साहनले लेखकहरू पनि बढ्दै आएका छन्। तर विद्वान्‌हरूको मत छ कि सन्तोष अवनतिको बाटो हो। त्यसकारण यस विषयमा सन्तुष्ट हुने शिक्षा हामीले लिनुहुँदैन। जति असन्तोष बढ्यो उति असल। वर्तमान समयको वेग पनि अघिको भन्दा धेरै तेज छ। आज जुन द्रुतगतिले राष्ट्रहरूको भौतिक उन्नति हुँदै आइरहेछ त्यो समयको वेगको नै सूचक हो। आजको समयको द्रुतगति हेर्दा Rome was not built in a day को उखानलाई पनि असत्य सावित गर्ला कि जस्तो लाग्छ। शायद अब मानिसहरू भविष्यमा Rome will be built in a day भन्नेछन्। हामीहरू यस्तो युगका मानिस हौं यो ज्ञान हामीलाई अवश्य हुनुपर्छ।

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# भानुभक्त झ्यालखानामा ?

[ खरीदार बाबुराम आचार्य, नेपाल । ]

कविवर भानुभक्त आचार्यले रचना गरेका रामायण आदि ग्रन्थ छपाई प्रकाशित गर्ने र तिनको जीवनचरित्र लेख्ने काम अर्का कवि पण्डित मोतीराम भट्टले गरि नदिएका भए भानुभक्त आचार्य यस किसिमका उज्ज्वल-चन्द्रमाका रूपमा कदापि देखिने थिएनन्, जस्तो अचेल देखिएका छन्। तिनका कामको महत्व सबभन्दा पहिले भट्टज्यूले नै पहिचानेका थिए। यस कुरामा सन्देह छैन। ती परलोक भएको ७० वर्ष भइसक्यो। तिनीसँग जान-पहिचान हुने मानिस अब बचेका छैनन्। यस कारणले तिनका जीवनचरित्रका विषयमा भट्टज्यूले जो जति लेखेका छन् त्यही सबैले विश्वास गर्नुपर्ने हुन आएको छ। तिनका जीवनमा भएको एक मुख्य घटना "झ्यालखानाका वास'-को उल्लेख भट्टज्यूले गरेका छन्। के यो कुरा साँचै होला ?

झ्यालखाना भनेको उस घर या घरका समुदायको नाउँ हो, जो चारैतिर पर्खालले घेरिएको र नेल लगाएका कैदीको वासस्थल बनेको हुन्छ। यस ठाउँमा कागत, कलम र मसी लैजान कदापि पाइँदैन। के भानुभक्त आचार्य यस किसिमकै झ्यालखानामा परेका थिए ? के तिनले नेल पहिरनुपरेको थियो ? यदि यो कुरा साँचै भए कागत, कलम, मसी नपाइने ठाउँमा कसरी रामायण लेखे ?

भानुभक्त आचार्यको जीवनचरित्र लगभग ३० बर्ख पहिले मेरा दृष्टिमा परेको थियो। त्यसमा कुमारीचोक बुझाउने गडबड़मा झ्यालखाना परेको कुरा लेखिएको देखेर मलाई आश्चर्य लाग्यो। यस कुराको चर्चा उनैताक उनका ( भानुभक्तका ) भानिज सुब्बा वीरेन्द्रकेशरी पण्डितज्यूसँग गर्दा त्यो कुरा गलत बताएर केही महीना अथवा एक डेढ़ बर्ख कुमारीचोकमा थुनिएको कुरा सम्म साँचो बताएका थिए। पछि उनैका नाति डिट्ठा दुर्गाभक्त आचार्यसँग सोधपुछ गर्दा पनि यिनै कुराको समर्थन गरेथे। अचेल पनि भानुभक्त आचार्यका वंशका मानिसहरू कान्तिपुरमा बराबर आउँदैछन्। यिनीहरू पनि ती झ्यालखानामा परेका कुरालाई अनुमोदन गर्दैनन्। वीरेन्द्रकेशरी पण्डितज्यू आदिले आफ्ना नातादार भानुभक्त आचार्यलाई झ्यालखानामा परेको कलंकबाट बचाउनालाई असत्य बोले कि भन्ने शंका गरे तापनि अरू प्रमाणबाट पनि ती झ्यालखानामा परेका देखिंदैनन्।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

कुमारीचोक[1] भनेको त्यस अड्डा ( office )-को नाउँ हो, जहाँ सरकारको दाम-काम गर्ने मानिसले आफूले जिम्मा लिएर खर्च गरेका रुपियाँको फाँट बुझाउनुपर्दछ। त्यो फाँट पछि कितापमा लेखिन लागेको छ तापनि अघि बेहुवा बहीमा लेखिन्थ्यो। यसकारण त्यो फाँट बुझाउनालाई अचेल पनि बही बुझाउनु भन्ने चलन रहेकै छ। बही बुझाउँदा सरकारको दाम काम गर्ने मानिससँग सरकारको रुपियाँ बाँकी देखिन आयो भने त्यो रुपियाँ बुझाउँदछु भन्ने मञ्जुरनामा लेखिदिनुपर्दछ। यदि लेखिदिएन भने सरकारबाट बलप्रयोग गरेर पनि लिइन्छ। यो रुपियाँ बुझाउनालाई धन जमानी दिएमा एक वर्षको भाखा पाइन्छ। तैपनि बुझाएन भने त्यसको (नबुझाउनेको) चल-अचल सम्पत्ति लिलाम गरेर त्यो बाँकी रुपियाँ लिइन्छ। तैपनि नउठेमा कैद गरी झ्यालखानामा पठाइन्छ। यस किसिमका ऐन महाराज जङ्गबहादुर राणाका समय (१९०३-३३) भन्दा पनि पहिलेदेखि चलिआएका छन्। चल-अचल सम्पत्ति लिलाम नभई बही बुझाउने मानिस झ्यालखानामा कदापि पर्न सक्दैन।

भानुभक्त आचार्यले पाल्पा-दफ्तरमा खरिदार भएर त्यहाँ (पाल्पा) रहेका पल्टन कम्पनीलाई जागीर बाँड्ने काम गरेका हुनाले लाखौं रुपियाँ तिनका हातबाट खर्च भएको थियो; यो कुरा निश्चय छ। यस खर्चको बही बुझाउन तिनलाई आवश्यक थियो। त्यो बही बुझाउँदा यिनका जिम्मा सरकारको रुपियाँ बाँकी देखिएको भए र त्यस बाँकीमा झ्याल-खानामा परेका भए अवश्य तिनको जायदात, चल-अचल सम्पत्ति लिलाम भएको हुनुपर्दछ। परन्तु यस किसिमसँग तिनको सम्पत्ति लिलाम भएको कुरा न भट्टज्यूले लेखेका छन्; न कसैका मुखबाट सुनिएको छ। यस कुराको उल्टो भानुभक्त आचार्यले बनाएको भाटसँगका विरोधले भाटाहरू ( Bottoms ) नराखेर बाँसका चोयाले काम लिइएको चुँदीको घर आजसम्म तिनका वंशधरका अधिकारमा रहेकै छ। यदि तिनको सम्पत्ति लिलाम भएको भए यो घर अर्कैका दखलमा पुग्दथ्यो।

कुमारीचोकमा थुनिएको कुरा उनका परिस्थितिबाट प्रमाणित हुन सक्दछ। बही बुझाउने मानिस ठीक समयमा आएर काम गर्‍यो भने

---

[1] कुमारी ( देवताका रूपमा पूजिने गरेको कन्या ) रहेको जुन घर कान्तिपुरमा छ; त्यसमा जोरिएका घरमा यो अड्डा अघि रहेको हुनाले कुमारीचोक भन्ने नाउँ रहेको हो। संवत् १९७३ देखि यो अड्डा अर्का ठाउँमा सर्‍यो तापनि नाउँ कुमारीचोक नै रहिरहेको छ।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

त्यससँग सरकारको रुपियाँ बाँकी नदेखिए सम्म छेकथुन केही हुँदैन। ठीक समयमा आएन भने त्यसलाई पक्री ल्याई कागत-पत्रहरू भिड़ाई मिलाइनसकिन्जेल कुमारीचोकमा नै थुनी, हाजिर-जमानी दियो भने नथनीकन बहीपत्र बुझनू भन्ने ऐन महाराज जङ्गबहादुर राणाका समय-भन्दा अघिदेखि चलिआएको छ। भानुभक्त आचार्यको घर तनहुँमा हुनाले ठीक समयमा कान्तिपुरमा—कुमारीचोकमा—आइनपुग्नु स्वाभाविक पनि हुनाले पक्रिएर आए होलान्। कान्तिपुरमा घर-खेत नभएका पहाड़ी मानिसको हाजिर-जमानी (अर्थात् यिनलाई रोज रोज या खोजी भएका समयमा हाजिर गराउँला, हाजिर भएनन् भने यिनले बुझाउने दाम-काम म बुझाउँला भन्ने मानिस) कान्तिपुरमा मिल्न महाकठिन थियो। यसकारणले बहीपत्र बुझाइनसकिन्जेल थुनिनु स्वाभाविक छ।

कागतपत्र साबुद बुझाउन नसकेमा बुझाउने मानिसको रिपोर्ट लिई मुखत्यार छेउ जाहेर गरी जवाफ भएबमोजिम गर्नू भन्ने ऐन पनि अघिदेखि चलिआएको छ। लाखौं रुपियाँको दाम-काम गर्दा तयार गरिएका कागतपत्रमध्ये केही मामुली कागतपत्र पाल्पामा घरमा छुट्न अथवा हराउन पनि स्वाभाविक छ। ती मामुली कागतपत्रको खोज गर्नुभन्दा पाइएनन् भन्ने रिपोर्ट गर्दा सुविस्ता थियो। यस किसिमको रिपोर्ट परेपछि उसलाई उस समयका मुखत्यार कमाण्डर-इन-चीफ जनरल कृष्णबहादुर राणा छेउ कुमारीचोकका हाकिमले जाहेर गर्न आवश्यक थियो। यता कुमारीचोकका हाकिमबाट यस विषयमा जाहेरी पर्नु र त्यसका साथसाथै लामखुट्टेका गाना र उपियाँका नाचका रूपकले भरिएको भानुभक्त आचार्यको कवितामय प्रार्थना-पत्र पर्नु औ मामुली कागत-पत्र बुझाउन नसकेका हुनाले मजकुर मुखत्यारबाट छोड़िदिनु पनि स्वाभाविक छ।

कुमारीचोकमा थुनिने मानिसलाई विशेष कष्ट हुँदैनथ्यो। भान्से, नोकर आदि राख्न इच्छाअनुसार पाइन्थ्यो। जनाना मानिस त्यहाँ लैजान नपाइने हुनाले सुग्घर सफा कम हुन गई लामखुट्टेका गाना र उपियाँको नाच साँच्चै नै सुन्नु-हेर्नुपर्दो हो। लेख-पढ़ खेल-बहाड़लाई केही बाधा थिएन। यसै कारणले त्यहाँ रहेर पनि भानुभक्त आचार्यलाई रामायण लेख्न बाधा केही भएन। एक किसिमबाट समय मिल्यो।

यस हिसाबले भानुभक्त आचार्य कुमारीचोकमा निगरानीमा रहेका थिए, भ्यालखानामा कदापि परेका थिएनन् भन्न सकिन्छ।

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# कवि भानुभक्ताचार्य

[ श्री मृगेन्द्र शम्शेर जङ्ग बहादुर राणा, एम०ए०, नेपाल। ]

"भाषा? नेपालीमा? यसमा के लेख्नु? दिव्य भाषा संस्कृतमा लेख्नु पो लेख्नु। भाषामा लेखेर नाम कहाँ हुन्छ र, हद्द पढ़्लान् हजार जनाले, त्यो पनि प्रायः मलाई चिह्निसकेका मानिसले। यिनीहरूमा त म त्यसै परिचित छँदैछु। संस्कृतमा लेखे पो विदेशका मानिसले समेत मेरो नाम सुनी पढ़ी म बढ़्ता प्रख्यात हुन्छु—विद्वान् पण्डितमा गनिन्छु।" यो विचार अहिले बीसौं शताब्दीको अधबैंसमा पनि छ कि छैन पाठकवर्ग आफै जान्दछन्। सबै संसारमा जातीय गौरव, मातृभाषाप्रति मोहब्बत र आदर, बढ़्दै गएको यस समयमा पनि हाम्रो देशमा उपरोक्त विचारमा झुली मातृभाषादेवीको सेवाभन्दा दिव्य भाषाको अलङ्कारमा बढ़्ता महत्व मान्ने पण्डिताचार्यहरू छैनन् भन्न सक्छौं?

अहिलेभन्दा झण्डै सय वर्ष अगाड़ि के थियो? शिक्षा भनेको जो कुछ थियो संस्कृत पढ़्नु नै। भाषा त खालि अपठित किसिमका मानिसको बोलचालका निमित्त मात्र दरकार थियो। पठितहरू ता संस्कृतमा नै व्यवहार गर्दथे। नेपालीमा श्लोक त कि सारङ्गी बोकेका गाइनेहरूबाट झर्दा हुन, कि त लहड़ दहड़मा कुनै पण्डितको संस्कृतप्रति परिश्रमको निथारबाट। यस्तो समयमा एक व्यक्ति आए, जसले ठाने कि हेला भएको, अपठितका योग्य सम्झिएको मातृभाषामा पनि मनोहर लालित्यपूर्ण लेख तथा श्लोक लेख्न सकिन्छ। संस्कृतभाषामा कौशल कम थिएन। संस्कृतमा मेहनत गरेको भए यिनका कलमबाट कैयन् पंक्ति झर्दा हुन् जसलाई प्रकाशकहरूले हाराल्छ गर्दा हुन्। तर देशभक्तको विचारै अर्को हुन्छ। कतैबाट प्रकाश हुने सम्भावना थिएन, कसैले यसलाई रुचाई पढ़्लान् भन्ने उम्मेद गर्नु अति हुन्थ्यो, तर देशप्रेममा जड़ भएको भाषा-प्रेमको प्रेरणाले गर्दा जो लेख्ने हो आफ्नै मातृभाषामा लेखे। यी व्यक्ति हुन् पण्डित भानुभक्ताचार्य—हाम्रा आदिकवि।

कुनै व्यक्तिलाई आदिकवि भनी मान गर्ने र श्रद्धा देखाउन पाउने सौभाग्य बहुत कम साहित्यले पाएको होला।* तर हाम्रो साहित्यको

* अंग्रेजी साहित्यमा आदिकवि को हुन् निर्णय गर्न असम्भव छ। त्यस्तै हिन्दी साहित्यको पनि हालत छ।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

बाल्यावस्था हुनाको एक फाइदा यो छ—हामीले आफ्नो आदिकविको उपासना गर्न सक्यौं। कवि भानुभक्तभन्दा अगाड़ि एकआध जनाले नेपालीमा श्लोकहरू लेखेका छन्, तर एउटा गौंथली आउँदैमा ग्रीष्मऋतु आउँदैन भन्ने अंग्रेजी उखान जस्तै थोर बहुत छन्द बनाउँदैमा कवि भन्न सकिन्न। नेपाली भाषाश्लोकमा विशेष कलम उठाउने पहिला त गुमानी कवि ( वि० सं० १८४७-१९०३ ) हुन् क्यारे। तर यिनले लेखेका श्लोकहरू-लाई नेपाली भन्नु धृष्टता हुन्छ। उनको एक दुइ श्लोकको नमूना दिइएको छ—

दिन दिन खजनाका भारिका बोकनाले
शिव शिव चुलिमैंका बाल नै एक कैका
तदपि मुलक तेरो छोड़ि नै कोइ भाजा
इति वदति गुमानी धन्य गोर्खाली राजा ॥१॥

× × ×

कर्णेनाथ घटोत्कचे युधि हते स्वां वीक्ष्य शक्तिं हताम्
तुष्टः प्राह शचीपतिः शिवमहो पार्थश्चिरं जीवितः।
एतद्भीमसुतस्य साधु निधनं मन्ये स्वसूनोर्बधात्
छोरा आफनु मर्न चाञ्चित बरू मीतैको छोरा मरोस् ॥१॥†

यस्ता दिल्लगीका श्लोकले त भाषाको सामर्थ्यभन्दा असामर्थ्य बढ़ता दर्शाउँछ। भाषामा प्रेम र श्रद्धाभन्दा अवहेलना र उपेक्षा देखाउँछ। गुमानीपछि पं० रघुनाथले नेपाली भाषामा कलम चलाएको देखिन्छ। यिनले नेपालीमा 'सुन्दर काण्ड' लेखेका छन्। तर त्यसपछि यिनको कलम बन्द भएको र उनको श्लोक पनि त्यस्तो रसिक नभएकोले यिनलाई आदिकविको पदवी दिन सकिन्न। तर सुन्दर काण्ड लेखी यिनले भानुभक्तलाई रामायण लेख्ने काममा जरूर असर पारे, त्यसको निमित्त भने नेपाली भाषा निज पण्डितको जरूर ठूलो ऋणी छ। अरू कविहरू-को हकमा अन्वेषणप्रेमी सूर्य विक्रम ज्ञवालीको 'नेपाली भाषाको विकासको संक्षिप्त इतिहास'-मा पाइने भन्दा बढ़ता कुरा हामीलाई थाहा छैन, तर नेपाली भाषाप्रति अहिलेको जस्तो लोकप्रेम बढ़्दै गएमा यो गौरवको आवश्यक विषयमा पनि जरूर बढ़ता खोजी हुन जानेछ।

† संस्कृत हिन्दी उर्दू कूर्मांचली तथा नेपाली भाषामें इनकी कविता पाई जाती हैं —पं० देवीदत्त पांड़ेको गुमानी कविबाट।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

अब आए भानुभक्त। यिनको कुरा लेख्न अगाड़ि कवित्वमा के के गुण चाहिन्छन् बिचार गरौं, लेखनशैलीमा लालित्य, सरलता र दिलचस्पी हुनु, औ विचारशक्ति अर्थात् मौलिक बिचार अथवा पुरानै बिचार भए पनि मौलिक वर्णन, कविका मुख्य गुण यी दुइ कुरा पनि हुन् भन्न मतभेद हुनेछैन।

कवि भानुभक्तमा यी गुण कत्तिका छन्, हेरौं। लालित्य र सरलताको चर्चा गर्नु केही दरकार छैन। निज कविको पुस्तकको फैलावट नै यो गुणको स्वयंवक्ता प्रमाण छ। पढ़े लेखेका मात्र होइनन् किं एक अक्षर पनि कनीकुथी पढ़्नु पर्नेले समेत यो पुस्तक चाख मानी पढ़्दछन्। कतिका त यो पुस्तक अक्षर सिकाउने गुरु नै भएको छ। २-४ उमेर पुगेका स्वास्नी मानिसहरूले त यही पुस्तक हेरेर अक्षर सिकेका भन्ने सुनिएको छ। पहिले त यो कुरा कसरी हुन सक्ला भन्ने जस्तो लाग्दछ, तर बुझ्दा त उस्तो असम्भव रहेन छ। अक्षर जान्ने दिदी-बहिनीहरूले हरफमा औंला दौड़ाई सानो स्वरमा बिस्तारै रामायण पढ़्दा रहेछन्, अक्षर नजान्ने चाहिं नियालेर हेरिरहँदी रहिछ। सो रामायण खतम हुने बखत त एक किसिमको अक्षर चिन्ने भइहाल्ने। अनि आफूले कनीकुथी पढ़्यो, जान्ने भइहाल्यो। सरलताको चिह्न यो भन्दा बढ़ी के होस्! दिलचस्पीको कुरालाई त के शंका हुन्छ। यो रामायणको एक दुइ श्लोक भए पनि कण्ठ नभएका नेपाली कुनै होओइनन्। बालकपनमा जाड़ोले ओछ्यानमा घुस्रिरहेको बखत आफ्नी धाईले आगाको उज्यालोमा 'एक् दिन् नारद...' लय हाल्दै भनेको नसुन्ने मानिस विरलै होलान्। कति नेपालीको मनमा त रामायण भनेकै संसारमा यही एक मात्र हो भन्ने परेको छ। बाल्मीकि तुलसीदास भनेका त को हुन् को हुन्? हुनत हाम्रो नेपाली भाषाले सरलरूप धारण गरेको धेरै भइसकेको थियो,* तथापि यो भाषालाई कवितामा ढाल्न

---

* यस प्रसंगमा हाम्रो नेपालमा पाइएको करीब २७० वर्षअगिको विक्रम संवत् १७२६, शाके १५९२, ने० सं० ७९० को राजा प्रतापमल्लका कान्छा छोरा, चक्रवर्तीन्द्रका नामले वनाएको शिलापत्रको नेपाली लेखन प्रणालीको नमूना दिने साहस गर्छु:—

ॐ नमः श्री श्री श्री कालिकायै ॥ शस्त्रशास्त्र संगितादि सकल विद्या पारग महाराजाधिराज नेपालेश्वर विदग्ध चूड़ामणि सकल राजचक्राधीश्वर श्री श्रीराजराजेन्द्र कवीन्द्र जयप्रतापमल्ल देवेन श्री श्री श्री परमेश्वर परमेश्वरी ब्रह्मभूमिनेमकृतं ॥ अतः परं भाखा ॥ श्रीश्री जयप्रतापमल्लदेवेन आफुले शास्त्र हेरिकन असंख्यात

Vedic Archives Digital Preservation Foundation, Chandigarh

सरल हिसाबसित सकिँदो रहेछ भनी दर्शाई अरूलाई उत्साहित गराउने श्रेय जरूर यी कविलाई छ। यिनको समकालिन कविहरूको लेखाइबाट त लेख्ने तथा पढ्ने अभिरुचि र उत्साह बढ्न मुश्किलै छ। भानुभक्तको सरलताको उदाहरण दिनु बेप्रयोजन छ। यस विषयमा भनिनु र लेखिनु केही बाँकी छैन। फेरि कविता नै स्वयंवक्ता छन्।

मौलिक विचारको हकमा भने हामी भानुभक्तमा अधिकांश पाउन सक्तैनौं। उनको मूल पुस्तक नै अनुवादित भएको हुनाले मौलिक विचार प्रकट गर्ने उस्तो अवकाश भएन। अरू मौलिक पुस्तकमा पनि त्यस्तो विचारशक्तिको तीव्रता देखिँदैन। यद्यपि एक भावना र विचारमा भने उनको हामीले प्रशस्त तारीफ गर्नुपर्छ। यो हो पितृभूमिप्रति मातृप्रेम। उनको

---

पुण्य देखिकन निकासिकन गंगा आदि नाना तिर्थको जल लेइकन महाराजाधीराज नेपालेश्वर राजराजेन्द्र श्रीश्री जयचक्रवर्तेन्द्रमल्लदेवको नामले बनायाको पोषरिमाहा राष्याकोछ॥ श्रीवारानशिको जल॥ श्री वैद्यनाथको गंगाजल॥ श्री वाग्मतिको जल भारि १०६४२॥ श्रीशङ्खमूलको जल॥ श्री पनतितिर्थको संगमको जल॥ श्री गंण्डकिको जल॥ श्री कौशिकिको जल॥ श्री सुन्दरि नदिको जल बहाइकन पोषरि भरचा॥ श्री नीलकण्ठको जल भारि ६३५॥ श्री विस्नुमतिको जल॥ श्री विश्वनाभको जल बहाइकन आफुले संकल्प गरिकन पानि राख्या॥ श्री तेवायको जल॥ श्री बागेश्वरको जल॥ श्री मनमतिको जल॥ श्री शंखदहको जल॥ श्री कागेश्वरको जल श्री वाग्मतिनाभको जल॥ श्री सपनतीर्थको जल॥ श्री कोमतिको जल॥ श्री डाम्हुटुको जल। श्री बालनिलकण्ठको जल॥ श्री त्याङाको जल॥ श्री मशिलको जल॥ श्री थयपिको जल॥ श्री सप्तकौशिकिको जल॥ श्री सौदहको जल॥ श्री ववदुवालको जल॥ श्री मातातिर्थको जल॥ श्री इन्द्रदहको जल॥ श्री गोकर्णको जल॥ श्री ग्यानवापिको जल॥ श्री पशुकुंण्डको जल॥ श्री सीताकुण्डको जल॥ श्री टेवुबोभानको जल॥ श्री हुनुमत्तघाटको जल॥ श्री गोलहिटिदहको जल॥ श्री ज्वालामुषिको जल॥ श्री मुक्तिक्षेत्रको जल॥ श्री काशिगंण्डकिको जल॥ श्री श्वेतगण्डकीको जल॥ श्री सरजुगंगाको जल॥ श्री मालिकाको जल॥ श्री पातालगंगाको जल॥ श्री प्याग गंगा जमुना सरस्वती त्रिवेनिको जल॥ श्री कमलेस्वरीको जल॥ श्री सप्तगण्डकिको जल॥ श्री बाराहाक्षेत्रको जल॥ श्री गंगासागरको जल॥ श्री समुद्रको जल॥ श्री अनन्तलिङ्गको जल॥ श्री सिपाडोलको जल॥ एति तिर्थको जल एक एक तिर्थको अनेक अनेक फल एति तिर्थ सबै यो पोषरिमाहा छ, यो पोषरिमाहा स्नान गरिकन देव तर्प्पन पितृतर्प्पण संध्या आदि समस्त कर्म्म जसले गर्‍यो एति तीर्थमाहा स्नान गरचाको कर्म्म गरचाको पुण्यफल पावनु छ, टेदन ढोषाबाहिर पनालिमाथिको देवलले

Vedic Archives Digital Preservation Foundation, Chandigarh

हरेक लेखाइमा यो प्रेम झल्कन्छ। यो साधारण कुरा होइन। पूर्वीय साहित्यक्षेत्रमा पाश्चात्य साहित्यमा जस्तो मातृभूमिप्रति भक्ति उस्तो पाइन्न। पाश्चात्य साहित्यमा एक न एक कवितामा 'मेरो प्यारो मातृभूमि' भन्ने किसिमको हरफ नलेख्ने कवि कमै होलान्। तर पूर्वीय साहित्यमा भने एकआध कविले मात्र यस्तो लेखेका छन् र यिनीहरूले पनि शायद पाश्चात्य साहित्यको झल्को पाएर! राम्ररी अध्ययन नगरी यो कुरा ठोकुवा गर्न मेरो अलि बढ़्ता होला तर पेट्रिओटिस्म (Patriotism) भन्ने अंग्रेजी लब्जको यथार्थ उल्था हामी गर्न सक्तैनौं। तसर्थ यस किसिमको कविताको कमी स्वाभाविकै संझनुपर्दछ। तर भानुभक्तमा भने हरेक ठाउँमा यो देशभक्तिको रस पाउन सक्तछौं। कवि मोतीरामले लेखेका जोड़ा पाई नसक्नु जीवनीमा यस्ता कविताको भरमार छ। जुन प्रेम र श्रद्धाले मोतीरामले खोजी गरे त्यस किसिमको भक्ति मेहनत नगरी भानुभक्तविषयक कुनै मौलिक अप्रकाशित कुरा वा उनले लेखेका कविता पाइन मुश्किल छ। त्यत्तिकै खोजी गरे पनि समयको गतिले गर्दा नयाँ कुरा पाइने उस्तो सम्भावना छैन। तसर्थ मोतीरामको जीवनीमा भएकै कविताको भर पर्नुपर्दछ।

'कान्तिपुरी नगरी' पढ़्ने कुन देशबन्धुको दिल आनन्दले नभरिएला? यसमा झल्केको भक्तिरस कुनै पाश्चात्य कवितासित दाँज्दा पनि शर्माउनुपर्दैन।

---

सदावर्ति गुठीको खेत, जमलह्वाक चलको दक्षिन ठुसागाल देवल, श्री उपाध्याको पनालि, वालमशान पश्चिम, उमदेको देवल फुलादेखि मासबलेलको उत्तर, असन पनालिमाथिको चौरको देवल श्री कान्तिपुर नगरको पुर्व यति भुमि मध्यम धर्नु राजा हात्मारु गर्नु आत्महत्या आदि कसैले केहि पाप यो पोषरि माहा गर्नो नाहि कसैले गऱ्या हुदा कोटि अगम्यागमन, कोटि अभक्ष्याभक्षन कोटि ब्रह्महथ्या कोटि गोहथ्या, कोटि गुरुहथ्या, कोटि बालहथ्या, कोटि स्त्रिहथ्या, कोटि शिवलिङ्ग ध्वंशन गरेको पाप, एति तिर्थमाहा पाप गऱ्याको, एति तिर्थमाहा बस्याको श्री श्रीश्री परमेश्वर परमेश्वरी नास्याको पाप स्यस्का सिर, कदाचित हठ गरि बस्याहुँदा र व्याहुदा विस्याई अकाल्या बांध्या दिएया प्राश्चित नाहि, कृष्णसाक्षि श्री आदित्य श्री चन्द्रमा अग्नि पृथ्वि, जल आकास बायु आत्मा यम दिन रात्रि संध्या धर्म श्री ब्राह्मण पांच प्रधान पांच॥ खस मगर पांच॥ श्री शाके १५९२ कार्तिक शुद्धि पूर्णिमा॥ थ्व साहासन सुनानं सेन करसा धिचिर धिचिर पातसा, गुप्त पातसा आखर छायर समर्सा मूलर्सा, पे ह्मास्य तवन हथ्या पापराकजुरो, सुनान थ्व साहासन निवान याङानं भिनकरसा थ्वं धाको पुण्य राक जुरो सम्वत् ७९० अश्विनमासे शुक्ल पक्षे पूर्णमास्यां तिथौ उत्तर भाद्र न क्षत्रे ध्रुव जोगे सोमवार थ्व कुन्हु लिखितं॥ श्रीकृष्णदेव मिश्र शुभमस्तु॥

/

Vedic Archives Digital Preservation Foundation, Chandigarh

रिस राग कपट् छल छैन जहाँ, तब धर्म कती छ कती छ यहाँ।
पशुका पति छन् रखवारि गरी, शिवकी पुरि कान्तिपुरी नगरी॥

यो भावना यी कविमा कसरी आयो भन्ने विचार बहुतै रोचक छ। तर सो गर्नुभन्दा अगाड़ि हामी उनको कविताको अर्को एक मौलिक विशेषताको विचार गरौं।

नेपाली साहित्यमा संस्कृत छन्दलाई ल्याई गाभिदिनु नै शायद भानुभक्तको भाषाप्रति सबभन्दा बढ़ता सेवा हो। भानुभक्तले लेख्नुभन्दा अगाड़ि नेपाली भाषामा पनि यति धेरै छन्दहरू यस्तो राम्रो हिसाबसित लेखिन सक्ता रहेछन् भन्ने प्रायः कसैले ठानेका थिएनन्। अहिले त उनले प्रयोग गरेका कति छन्द प्रायः नेपाली नै भैसकेका छन्। विशेष गरी शार्दूलविक्रीडित छन्दलाई त नेपाली नै भने पनि बढ़ता हुन्न। भानुभक्तले चलाएका छन्दबाट बाहिर जान सक्ने अर्थात् मौलिक छन्दमा लेख्न सक्ने व्यक्ति उनका मृत्युको अर्धशताब्दीतक कोही हुन सकेको छैन। आजकाल २।४ कविहरूले स्वतन्त्र छन्दमा लेख्ने प्रशंसनीय कोशिश गरेका छन् र तीमध्ये पनि हाम्रो साहित्यको सर्वश्रेष्ठ फुल्न लागेका कवि बालकृष्ण शम्शेरले भाषामा ब्लयाङ्क भर्स (blank verse) प्रयोग गरी साँच्चिकै नयाँ ढङ्ग भाषामा घुसाउनुभएको छ। कुनै व्यक्तिको प्रयत्न ५० वर्षसम्म पनि उल्लंघन हुन नसक्नु कत्तिको महत्वपूर्ण कुरा हो बिचार गर्न सकिन्छ।

कविको देशभक्ति विषय हामीले टुटाएको प्रसंग फेरि बिचार गरौं। सारा पूर्वीय साहित्यमा समेत कमी भएको यस्तो देशगौरव र प्रेमको भावना पहाड़को बीचमा बसेका पाश्चात्य साहित्यमा दखलसमेत नभएको कविमा उत्पन्न हुनु सामान्य कुरा होइन। यो कुराको सम्भावना कसरी भयो हो अड्कल गर्न कोशिश गरौं। भानुभक्तले पाइला सार्न थालेका बखत संवत् १८७३-७४ (सन् १८१५-१६) को कम्पनी सरकारसितको लड़ाइँ खतम भएको थियो। बाल्यावस्था र किशोरावस्थामा यिनले यो लड़ाइँको सबै हाल सुने होलान्। नेपालले सुलह गर्नुपरे तापनि यो लड़ाइँमा नेपालको हार भयो भन्नु ठीक हुँदैन। बहादुरी वा युद्ध कौशलको कमीले सुलह गर्नुपरेको होइन। पहाड़ी मुलुकमा जंगी माल समान ओसार्ने बेसुविस्ता र मुख्य त पूर्वीय मुलुकको श्राप—अरूको जय र भलाइ सहन नसक्ने डाहा—ले गर्दा आछु आछु परेको दुश्मनसित प्राकृतिक अवस्थाले ठगिएका हामीले सन्धि बाँध्नुपर्‍यो। कुँवर बलभद्र र जनरल अमरसिंह थापाको बहादुरी र

Vedic Archives Digital Preservation Foundation, Chandigarh

विजयको डाहाले सदरबाट पूरा मरमदत पठाइएन। खजानाको अभाव-पूर्ति गर्न उनीहरूले तात्कालिक आफ्नो टक मारी द्रव्याभाव छुटाउने युक्ति रचे। यसले शंका झन् बढ़ायो, थप मदत झन् रोकियो। वीरताको अभावभन्दा खै-खजानाको अभावले अमरसिंह थापाले काली-सम्मको जग्गा दुश्मनलाई छोड़ी फर्कनुपर्‍यो। तर हरुवा लत्रेर आएजस्तो गरी उनी फर्कनन्; आफ्नो बाँकी जंगी असबाब पूरा बोकी झण्डा फर्फराउँदै तमर बजाउँदै मर्यादाले प्रफुल्लित भएका दुश्मनको सामुन्नेबाट अवस्थाले कायम राख्न नसकेको जग्गा छोड़ी उनी फर्के! दुश्मनले आफ्नो शक्ति एकट्ठा गर्न पायो, औ यसको परिणामस्वरूप सुगौलीको सन्धि भयो। कुनै बेइमान अधमले चूरे घाँटी पार गर्न चोरबाटो अंग्रेजलाई नदेखाइदिएको भए यो सन्धिको समय पनि कति हट्थ्यो वा के हुन्थ्यो भन्ने शंका झिक्नु व्यर्थ छ। सन्धि भयो, अड्डमा सहीछाप पर्‍यो, तर नेपालीहरूको शूरता वीरता पराजित भएको थिएन। नेपाली-हरूको बहादुरी ज्यादै दिलमा गड़ी अंग्रेजहरूले आफ्नो फौजमा नेपाली पल्टन खड़ा गरे। सन्धि पछि दुश्मनको पल्टन आफ्नो फौजमा राख्नु यस्तो अलौकिक शर्त कुन सन्धिमा परेको होला! कस्तो गाढ़ा प्रशंसा-प्रेरित आदरले यो कुरा अंग्रेजलाई गरायो सो अनुमान गर्न सक्छौं। लड़ाइँबाद पनि सन्धिमा परेका कैयन् जग्गा वापस गरी वा अरू साधन-ले चतुर अंग्रेजसरकारले वीर नेपालीसरकारलाई कसरी मित्रतामा कायम राख्न खोज्यो त्यो विषय इतिहासलेखकको क्षेत्र हो। नेपाली फौजले लड़ाइँमा हार्‍यो होला, तर नेपाली हृदयले हारेको थिएन। नेपाली जमीन अंग्रेजले हरे, तर नेपाली वीरता हरिन सकेको थिएन। यो लड़ाइँको बदला लिन नेपाल तैयार थियो। उसले आँटेको थियो, तर अंग्रेजको राज-नीतिज्ञताले दुइ सरकार बीचको मित्रताको डोरी बलियो पार्दै लग्यो।

हाम्रा कविले मानिस र समाजको चर्चा गर्न थाल्ने बखत यी कुराहरू सबैको मुखमा जरूर झुण्डिएको होलान्। किशोरावस्थाको सजिलो-सित प्रभावित हुने दिलमा यी कुराहरूको के असर पर्‍यो होला? यो बहादुरीको कथाले कस्तो उत्तेजना उत्पन्न गरायो हो? मुलुकको अभागको हारले कुन किसिमको वीररसयुक्त भक्ति पैदा गर्‍यो हो? हाम्रो रामायण युद्धकाण्डको अध्ययन गर्दा सहज संझन सक्छौं।

फेरि, जस्तो अहिले हामीहरू बालककालमा दन्त्यकथा सुनी 'एका-देशका राजाको शूरता र वीरतामा जमजमाई हसनाको किस्सा, सुजेलीको ट्र्यान्चा (ट्रेन्च), तकियाको झोप र गाले तकियाको बमगोला पारी खेल्दछौं,

Vedic Archives Digital Preservation Foundation, Chandigarh

उस्तै कविजीले त अनेक हकीकतका कथा आँखाले देख्ने अनुभवले भोग्ने साक्षीहरूबाट सुनेका होलान्। ४०० जना पुरुष र कैयन् स्त्रीहरूसमेत भै ३५०० को फौजलाई ३२ दिनसम्म अड्याई दुश्मनको जनरल मारी अरू केही नपाई ढुङ्गाले समेत लड्ने आइमाई र तिनका बालबच्चा भोक र प्यासले मरेपछि नङ्गा तरवार लिएका ७० वीर पुरुषहरूका नेता भई विस्मित भएका विमूढ दुश्मनको घेरा काट्ने बलभद्र थिए। ७० वर्षको उमेरमा पुत्रशोकले विह्वल भएका भक्तिथापाले मलौनको रणक्षेत्रमा आई बेगिन्ती दुश्मनसित असम्भवको एकलो लड़ाईंमा कसरी प्राण समर्पण गरे, कसरी दुश्मनको बहादुरी देखी छक्क परेका विस्मयले भरिएका अंग्रेजले सो लाशलाई दोसल्लामा बेह्री सबै जंगी काइदा र आदर पुऱ्याई नेपाली किल्लामा गई समर्पण गरे, औ कसरी दिलचस्पीले गर्दा वैरीभाव बिर्सी दुवै पक्षले किल्ला बाहिर निःशस्त्र निस्केर मैदानको बीचमा सो मृत शरीरको साथमा निजकी स्त्री सती गई हिन्दू नारीको निडर पतिव्रताको उदाहरण दिएको हेरे—यो सबै कुरा भानुभक्तको उत्तेजित कानमा जरूर परिपूर्ण भई परेको होला। फेरि वत्सरारम्भको दिन मस्त भएका दुश्मनको सुराक लगाई रातमा छापा मारी पर्सा र समनपुरमा करीब १००० जना जति दुश्मनलाई टुक्रा टुक्रा पारी सारा सामान खजानासमेत लुटी दुश्मनको मनमा त्रास पसाली मुख्य जर्नेललाई दुम लुकाई सुइँकुच्चा ठोक्ने—बड़ालाठको नाता भएर मात्र कुरा गुपचुप नभएको भए जंगीकोरटले गोली ठोक्ने यस्तो कसूर सम्म आँट्ने—अत्यास कसरी वीर नेपाली फौजले पारे यो पनि भानुभक्तले प्रफुल्लित हृदयले जरूर सुनेका होलान्। यी सब कुराले कबिको हृदयमा कस्तो भावमा अंकुर जमाए होलान्? यसको जवाब हामी उनैको एक हरफमा दिन्छौं:—

मार्‍यौ यो अति चुक् भयो गरुँ कसो बाँच्थ्यौं त याहीं बसी,
रावण्लाइ कुलै समेत् सहजमा झिक्थ्यौं म पाता कसी।
लंकापूरि समेत् पनि म बलले झिक्थ्यौं सहज्मा यहीं,
पाजी रावणलाई मार्न तिमीले क्या जातु पर्‍यौ वहीं॥

—किष्किन्धा० ॥५०॥

# भानुभक्तप्रति

[ कविराज श्री दीननाथ सापकोटा, काव्यालङ्कार, कविशेखर, काशी । ]

शिवजिका अनुयायी तिमि शिवभक्त !
रामकथा लेखिदीने तिमि रामभक्त !
मूर्खदेश पढ़ाउने तिमि देशभक्त !
भानुसरि तिमि हुँदा तिमि भानुभक्त !
भानुकर हटाउँछ सब अन्धकार
लेख तिम्रो हटाउँछ अज्ञानान्धकार !

× × ×

भानु तनहुँका छोरा ! सब देशरत्न !
रामायण रचि भयौ तिमि कविरत्न !
तिम्रा पछि पछि लागि जन्मे कवि धेर
तर कविकुलगुरु तिमि एक हेर !
पञ्चभूतविषे मिल्यौ ! तर तिम्रो कीर्ति
सर्वदा छ अमर नै धन्य तिम्रो मूर्ति !

× × ×

जय जय देशरत्न ! जय नररत्न !
जय कविकुलगुरु ! जय द्विजरत्न !
जय जय रामभक्त ! जय शिवभक्त !
जय मातृभाषाभक्त ! जय भानुभक्त !
प्रतिवर्ष यसै गरि हामि तिम्रो गान
गाइ गाइ गराउँ है निजभाषाज्ञान ।

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# बन्ध

[ श्री पारस मणि प्रधान, दार्जीलिङ । ]



( अन्वेषक कवि मोतीराम भट्ट )

तनहुँतिर तमाम ग्रन्थको खोज गर्दै ।
घर घर घुमि सारा भानुका भक्त हिंड्थे ॥
असल कवि थिए ती देश - साहित्य भक्त ।
अहहह ! किन लामो आयु तिन्को भएन !!

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# बन्ध

[ श्री पारस मणि प्रधान, दार्जीलिङ । ]



हाम्रा यी अति मान्य **आदि** कवि हुन् थूना परेका थिए ।
लेख्थे धर्म र भावपूर्ण **कवि** ता भाषा बनाई दिए ॥
ने पा ली ह रु ला इ **भानु** सरि भै बाटो बताई दिए ।
भाषा, राष्ट्र र राम **भक्त** कवि यी साह्रै रसीला थिए ॥

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# धन्यवाद निवेदन

हाम्रा जातीय कवि भानुभक्तको मृत्यु भएको ७० वर्ष पुगेका उपलक्ष्यमा नेपाली साहित्य सम्मेलनद्वारा प्रकाशित यो स्मारक ग्रन्थमा लेख वा कविता प्रदान गरी यो कार्यमा सम्मेलनसँग सहयोग गर्ने विद्वान् लेखकहरूलाई हार्दिक धन्यवाद निवेदन गर्छु। सम्मेलनले भानुभक्तका स्मरणमा यो काम उठान गर्ने निश्चय गरेका समयदेखि नेपालका शिक्षा विभागका नियोजक श्री मेजर जेनरल मृगेन्द्र शम्शेर जङ्ग बहादुर राणा, एम्० ए० बाट सम्मेलनले अनेक प्रकारको सहायता पाएको छ। यसका निमित्ति सुयोग्य जेनरल साहेबप्रति विनम्रतापूर्वक कृतज्ञता निवेदन गर्छु। यो भानुभक्त-स्मारक ग्रन्थ प्रकाश गर्दा सम्मेलनलाई केही सफलता प्राप्त भएको भए त्यो यो कार्यसँग सहयोग गर्ने विद्वान् महानुभावहरूका प्रेमपूर्ण सहायताको परिणाम हो। यो स्मारक ग्रन्थले भानुभक्तका सेवातर्फ नेपालीहरूको दृष्टि आकर्षित गर्ला तथा हाम्रा जातीय जीवनमा उनको कुन स्थान रहेछ सो निर्णय गर्न हामीलाई किञ्चित् सहायता गर्ला भन्ने मेरो आशा छ।

मोतिचन्द प्रधान
सभापति,
नेपाली साहित्य सम्मेलन,
दार्जीलिङ्ग।

---

[ इति भानूभक्त-स्मारक ग्रन्थ (पूर्वार्ध)। ]

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# भानुभक्त-स्मारक ग्रन्थ

## ( उत्तरार्ध )

सम्पादकद्वय—
श्री तुलसी बहादुर छेत्री र श्री जगत छेत्री ।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

श्री तुलसी 'अपतन', दार्जीलिङ—

# भानुभक्त

छ भक्तिपूर्ण सम्झना सुभक्त भानुभक्तको ॥

समाज दीन हीन थ्यो अयोग्य अन्धकारमा ।
समस्त छिन्न-भिन्न थ्यो विलुप्त जीत हारमा ॥
सुशान्तिको नयाँ छटा नवीन भानु देखियो ।
र काट मार लूटको विचित्र चित्र पल्टियो ॥१॥

पढ़ेर गाउँदै सबै सुप्रेम राग मस्त भै ।
नवीन मार्गमा हिंड़े मिलाइ हात एक भै ॥
सुदीर्घ गीत-रामले पहाड़ खण्ड गुञ्जियो ।
महान शक्ति जाग्न गो सुनेर राम नाम त्यो ॥२॥

समूल काण्ड हौ तिमी सदैव उच्च आश ली ।
खपेर घाम औ झरी बढ़्यौ र आज हर्ष ली ॥
सुवृक्ष मौलियो यहाँ अनेक रंग फैलियो ।
नवीन पालुवाहरू बढ़ेर आज पुष्ट भो ॥३॥

हजार कोपिला फुले, अनेक पुष्प फक्रिए ।
सुवृक्ष एक पो थियो सहस्र राग गुञ्जिए ॥
स्वजाति धर्म कर्मको महत्व आज बढ्न गो ।
असार जन्म सार्थ भो स्वदेश प्रेम जाग्न गो ॥४॥

सुकर्म ऐक्य प्रेमको र शुद्ध मार्ग त्यागको ।
रहन्छ याद चित्तमा सुनेर शुद्ध नाम यो ॥
तसर्थ सम्झना सँधै रहन्छ भानुभक्तको ।
मनुष्य भै मनुष्यता कहाँ गुमिन्थ्यो बन्धु हो ॥५॥

छ भक्तिपूर्ण सम्झना
सुभक्त भानुभक्तको ॥

———

Vedic Archives Digital Preservation Foundation, Chandigarh



अन्वेषक कवि मोतीराम भट्ट

'भारती'-को सौजन्यले प्राप्त ब्लक ]

Vedic Archives Digital Preservation Foundation, Chandigarh

श्री सूर्य विक्रम ज्ञवाली, नयाँ दिल्ली—

# भानुभक्तका रामायणको नवीन पाठ
## बालकाण्ड

भानुभक्तको रामायण पढ्दा वा पछि प्रकाशित संस्करणहरूका आधारमा त्यसको सम्पादन गर्दा रामायणको शुद्ध पाठ अझ भेट्टाउन सकिएको छैन भन्ने मलाई लाग्थ्यो। रामायणको शुद्ध पाठ भन्नाले भानुभक्तले स्वयं लेखेको पाठ भन्ने मेरो अभिप्राय हो। यो कारणले रामायणका प्राचीन हस्तलिखित प्रतिहरूको म यथासम्भव खोजी गर्थें।

वीर लाइब्रेरीमा भानुभक्तका रामायणको एउटा सुन्दर हस्तलिखित प्रति छ। एउटा अर्को हस्तलिखित प्रति पनि मलाई देख्ने अवसर प्राप्त भएको थियो। वीर लाइब्रेरीका प्रतिको नकल म सँग छ तथा उपर्युक्त अर्को प्रतिका केही काण्डको नकल तथा बाँकी काण्ड पछि मैले लेखेका टिप्पणीहरू म सँग छन्। यो अर्को प्रति मलाई हाल रूसमा नेपालका महामहिम राजदूत श्री बालचन्द्र शर्माका सौजन्यले प्राप्त भएको थियो। यो अशुद्धतापूर्वक लेखिएको थियो।

उपर्युक्त रामायणका हस्तलिखित प्रतिहरूका आधारमा बालकाण्डको यो नवीन पाठ मैले तैयार पारेको हो। साथै संशोधित पाठ आफैंले राम्ररी बुझ्न तिनका विषयमा मैले केही टिप्पणी पनि लेखें। टिप्पणी स्वभावतः छोटकरी तथा टिपोटका रूपमा भए तापनि विज्ञ पाठकले तिनबाट सहजै मेरो अभिप्राय बुझ्नुहुनेछ भन्ने मेरो आशा छ।

यहाँ प्रस्तुत गरिएको पाठ जहाँ मैले सम्पादन गरेको रामायणका पाठसँग मिल्दैन वहाँ मैले सो पद वा पदहरूमुनि रेखा हालेको छ तथा टिप्पणीमा त्यो श्लोकको संख्यामुनि रेखाङ्कित पद वा पदहरूका विषयमा मैले प्रायः टिप्पणी प्रस्तुत गरेको छु। यति तीन कुरो अर्थात् मैले सम्पादन गरेको, भानुभक्तको रामायण, यहाँ प्रस्तुत गरिएको नबीन पाठ तथा टिप्पणी हेर्नुभए विज्ञ पाठकलाई तिनका विषयमा मत स्थिर गर्न सजिलो हुने थियो।

यो विषयको चर्चा भानुभक्तको रामायणका प्रेमीहरूमा भयो भने हाम्रा आदिकबिका रामायणको शुद्ध पाठ खोजी गर्ने कामले प्रगति प्राप्त गर्नेछ भन्ने मेरो आशा छ।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# भानुभक्तको रामायण

## वालकाण्डको नवीन पाठ

एक् दिन् नारद सत्यलोक् पुगिगया लोक्को गरूँ हित् भनी ।
ब्रह्मा ताहिं थिया पस्या चरणमा खूसी बनाया पनी ॥
पया सोध्छौ तिमि सोध भन्छु म भनी मर्जी भयो यो जसै ।
ब्रह्माको करुणा बुझेर ऋषिले बिन्ती गर्‍या यो तसै ॥१॥

हे ब्रह्मा! जति छन् शुभाशुभ सबै सूनी रह्याँछू कछू ।
बाँकी छैन तथापि सुन्न अहिले इच्छा म यो गर्दछू ॥
आऊला जब यो कली जस बखत् प्राणी दुराचार् भई ।
गर्न्या छन् सब पाप् अनेक् तरहका निच्का मतीमा गई ॥२॥

साँचो बात गरैन कोहि अरु कै गर्नन् ति निन्दा पनी ।
आर्काको धन खानलाइ अभिलाष् गर्नन् असल् हो भनी ॥
कोही जन त परस्त्रिमा रत हुनन् कोही त हिंसामहाँ ।
देहैलाइ त आत्म जानिरहनन् नास्तिक् पशू झैं तहाँ ॥३॥

काम्का चाकर झैं भयेर रहनन् स्त्रीलाई घौता सरी ।
मान्नन् पीतृ र मातृलाइ बुझि खुप् शत्रू सरीका गरी ॥
ब्राह्मण् भैकन वेद बेचिरहनन् कोही पढून् तापनी ।
धन् ठूलो छ पढ्यौं भन्या सहज धन् आर्जन् गरौंला भनी ॥४॥

जाती धर्म रहैन क्षत्रिहरुमा जो छन् इ नीचा अरू ।
शूद्रादि त तपस्वि होइरहनव ब्राह्मण् सरीका बरू ॥
स्त्री घेर् भ्रष्ट हुनन् पती र ससुराको द्रोह ठूलो गरी ।
यस्ता नष्ट कसोरि मुक्त त हुनन् संसार सागर् तरी ॥५॥

यो चिन्ता मनमा भयो र अहिले सोधूँ उपाई भनी ।
आयाको छु दयानिधान! कसरी तर्नन् सहज् ई पनी ॥
यस्तालाइ उपाय तर्न सजिलो कुन् हो उ आज्ञा गरी ।
मेरो चित्त बुझाइवक्सनुहवस् क्याले इ जान्छन् तरी ॥६॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

नारद्ले दुनियाँ उपर् गरि दया बिन्ती गऱ्या यो जसै ।
ब्रह्माजी पनि खुप् प्रसन्न हुनु भो मर्जी भयो यो तसै ॥
हे नारद् ! सब पाप हर्नकन ता रामायणैले सरी ।
आर्को मुख्य उपाय छैन सबको हित् यै छ अम्रित सरी ॥७॥

शम्भूदेखि सुनेर तत्व सब यो गान् पार्वती गर्दछिन् ।
राम्नाम्को महिमा अपार् बुझि बहुत् आनन्दमा पर्दछिन् ॥
जस्ले गान्कन गर्दछन् त ति सहज् संसार पार् तर्दछन् ।
कालैको पनि ताप् हुँदैन भय सब् तिन्का सहज् टर्दछन् ॥८॥

यो सब् शास्त्र विषे बड़ो छ रघुनाथ्को रूप् जनाई दिन्या ।
जो छन् सब् इ पुराण्हरु इ सबमा यै मुख्य जानी लिन्या ॥
गर्छन् कीर्तन सुन्दछन् पनि भन्या यो पाउँछन् फल् भनी ।
तिन्को पुण्य बखान गर्न त सबै सक्तीन मैले पनी ॥९॥

सून्याथ्यौं शिवदेखि यस्कि महिमा एक् श्लोक् पढुन् तापनी ।
भक्तीले यदि यो पढ्यो पनि भन्या पाप् छुट्दछन् सब् भनी ॥
जो एक् चित्त गरेर पाठ खुशि भै गर्छन् सदा यै भन्या ।
जीवन्मुक्त तिनै त हुन् नर भई ईश्वर् सरीका बनी ॥१०॥

पूजा पुस्तकको गऱ्या पनि त फल् एक् अश्वमेध्का सरी ।
पाऊँछन् सुनियो कहीं पनि भन्या पाप् छुट्दछन् तेस् घरी ॥
जो ता पुस्तकका नजिक् गइ नमस्कारै फगत् गर्दछन् ।
तेस्ता जन् सब देवता पुजि हुन्या फल् भोगमा पर्दछन् ॥११॥

चारै वेद पढ़ेर शास्त्रहरुको व्याख्यान् गऱ्याले पनी ।
पाइंदैन उ फल् त पाउँछ सहज् पुस्तक् दिनाले पनी ॥
भक्तीले कहिं भक्तका घर गई एकादशीमा कथा ।
चौबिस्पल्ट पुरश्चरण् गरिहुन्या गायत्रिका फल् भया ॥१२॥

जस्ले राम्नवमी उपासि खुशिले जागृत् समेतै गरी ।
यो रामायण पाठ् गरोस् कि त सुनोस् तन्मन् यसैमा धरी ॥
तेस्ले तीर्थ पिछे तुलापुरुष दान् सूर्यग्रहणमा गऱ्यो ।
यस्मा संशय छैन जान्नु सबले आनन्दमा त्यो पऱ्यो ॥१३॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

रामायणकन गाउन्या पुरुषको आज्ञा त इन्द्रै पनी ।
मान्छन् श्री रघुनाथका प्रिय इ हुन् मान्न्या इनै हुन् भनी ॥
रोज् रोज् यस्कन पाठ् गरेर जनले सत्कर्म गर्छन् जती ।
कोटी गुण् फल बढ्ति मिल्छ सबको घट्दैन तिन्का रती ॥१४॥

यस्मा रामहृदय छ पाप् हरि दिन्या क्वै ब्रह्मघाती पनी ।
शुद्धात्मा बनिजान्छ तिन् दिन पढ्या गर्छन् कृपा राम् धनी ॥
रोज् रोज् तीनपटक् अगाड़ि हनुमान् राखेर पाठ् गर्छ जो ।
जस्तो भोग्कन गर्न खोज्छ उहि भोग् सम्पूर्ण पाउँछ त्यो ॥१५॥

जो यो पाठ् तुलसी पिपल् बरिपरी गर्छन् प्रदक्षिण् गरी ।
तिन्का पाप् सब जन्मका जति त छन् छुट्छन् ति तेस घरी ॥
येस्मा रामगिता छ भन् अझ ठुलो जस्को महात्म्यै पनी ।
सब् जान्न्या शिव मात्र छन् अरु त को जान्न्या छ यस्तो भनी ॥१६॥

आधा पार्वति जान्दछिन् म त सबै चौथाइ पो जान्दछू ।
गीता पाठ गरेर नाश नहुन्या पाप् छैन यो मान्दछू ॥
रामले वेद मथन् गरीकन झिक्या गीता र अम्रित् सरी ।
लक्ष्मणलाइ दिया यही पढ़िलिया जाइजान्छ संसार् तरी ॥१७॥

मार्छू निश्चय कार्तवीर्य भनि खुप् ठूलो इरादा धरी ।
पढ्थ्या श्री शिव थ्यैं गई परशुराम् रोज् रोज् चरण्मा परी ॥
पढ्थिन् पार्बति राम्गिता तहिं सुनी पाठ् गर्न लागी गया ।
राम्गिता तहिंदेखि पाठ् गरिलिंदा नारायणै ती भया ॥१८॥

मैन्हा दिन् यहि राम्गिता पढ़िलिया सब् ब्रह्महत्याहरू ।
छुट्छन् ता अरु छुट्दछन् सकल पाप् भन्न्या बखान् क्या गरूँ ॥
शालग्राम् तुलसी पिपल् कि त बड़ा सन्न्यासि इन् थ्यैं गई ।
राम्गीताकन पाठ् गर्‍यो भनिभन्या ठूलो महात्मा भई ॥१९॥

जुन् फल् छन् मुखले भनी नसकिन्या सो फल् ति भोग् गर्दछन् ।
कोही श्राद्ध विषे पढुन् त तिनका पितृ सबै तर्दछन् ॥
पैल्हे खूप नियम् गरी दशमिमा एकादशीमा पनी ।
आसन् बाँधि अगस्ति वृक्षमनि पाठ् गर्छु म गीता भनी ॥२०॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

रामगीता उपवास् गरीकन बहुत् आदर् गरी पढ्छ जो ।
तेस्लाई त नभन्नु मानिस भनी रामै सरीको छ सो ॥
दान् ध्यान् तीर्थ कदापि केहि नगरी यै रामगीता पढी ।
बस्छन् जो ति अनन्तका पदविमा जान्छन् सहज् पार् तरी ॥२१॥

घेरै बात् गरि हुन्छ क्या र म भनु रामायणै हो जबर् ।
पाप् हर्नाकन छैन केहि बुझियो येसै सरीको अवर् ॥
जो छन् तन्त्रपुराण श्रुतिस्मृति इ ता सोह्रै कलाले पनी ।
पुग्दैनन् त बखान् कहाँतक गरूँ यो फेरि ठूलो भनी ॥२२॥

जो रामायणको महात्म्य विधिले नारद्जिलाई कह्या ।
जुन् सूनीकन चित्तले बुझिदिंदा नारद् पनी खुस् भया ॥
पाठ् गर्छन् कि त सुन्दछन् यति भन्या वी येत्ति सुन्या पनी ।
जान्छन् सब् उहिं बिष्णुका पुरिमहाँ खुप् पूज्य सब्का बनी ॥२३॥

कैलाश्मा भगवान् सदाशिव थिया ध्यान्मा बहुत् मन् दिई ।
वाम् काखमा बहुतै पियारि हितकी श्रीपार्वतीजी लिई ॥
एक् दिन् पार्वतिले तहीं शिबजी ध्यैं सोधिन् चरण्मा परी ।
आफू ता सब जान्दथिन् तर दया सम्पूर्ण लोक्मा गरी ॥२४॥

हे नाथ्! बिन्ति म गर्दछु हजुरमा राम् हुन् जगत्का पति ।
राम् देखी अरू छैन कोहि जनका संसार तर्न्या गति ॥
जस्मा भक्ति गर्‍यो भन्या अति गभिर संसार सागर् पनी ।
हेलैले तरि पार जान्छ दुनियाँ खोल्सै सरीको गनी ॥२५॥

यस्ता रामकन लोकमा जनहरू क्वै ईश्वरै मान्दछन् ।
कोही तत्व नपाइ मूर्खहरू ता मानिस् सरी जान्दछन् ॥
क्या भन्छन् ति कि राम ईश्वर भया शोक् क्यान तिन्ले गर्‍या ।
सीता रावणले हरी लगिदिंदा ठूले विपत्मा पर्‍या ॥२६॥

ईश्वर्लाइ त शोक् हुँदैन रतिभर हूँदैन अज्ञान् पनी ।
इन्मा दो सब देखियो त कसरी जान्नू इ ईश्वर् भनी ॥
लोक् येसो पनि भन्छ कोहि भगवान! यस्मा बिचार् खुप् गरी ।
जस्तो हो सब यो बताउनुहवस् सन्देह मेरो हरी ॥२७॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

यस्तो प्रश्न सुन्या र पार्वतिजिको खूसी पनी खुप् भया ।
राम् यस्ता प्रभु हुन् भनेर शिवले सब् तत्व ताहीं कह्या ॥
सून्यौ पार्वति ! राम् अनादि परमेश्वर् हुन् ति आकाश् सरी ।
सब् ढाकीकन बस्दछन् अघि विराट् सम्पूर्ण सृष्टी गरी ॥२८॥

जस्तै चुम्बकका नजिक् परिगया नाच्छन् इ लोहा पनी ।
तस्तै जस्कन पाइ नाच्दछ जगत् नाना प्रकार्को बनी ॥
यस्तो तत्व नजानि मानिस सरी राम्लाइ जो गर्दछन् ।
संसार्का इ अनन्त तापहरु तिनैलाई सदा पर्दछन् ॥२९॥

बादल्ले अरु ढाक्छ ढाक्छ कहिं क्या श्री सूर्यलाई पनी ।
लोक् ता भन्छ उठ्यो र बादल ठुलो सब् सूर्य ढाक्यो भनी ॥
यस्तै तत्व नजानि बोल्छ जन जो सो भन्छ मानिस् पनी ।
योगी ज्ञानि त चिन्दछन् इ रघुनाथ् त्रैलोक्यनाथ् हुन् भनी ॥३०॥

जस्लाई रिङटा छ भन्छ उ फगत् घुम्छन् उ पर्वत् भनी ।
घुम्दैनन् इ त घुम्छ तेहि रिङटा जान्दैन कोही पनी ॥
अज्ञान् रूप् रिङटा हुन्या जनहरू भन्छन् ति मानिस् पनी ।
राम् ता हुन् परमेश्वरै सकल यस् चौधै भुवनका धनी ॥३१॥

सूर्यैमा पनि अन्धकार् छ कहिं क्या तस्तै छ राम्मा पनी ।
शोक् अज्ञान् रति छैन जान्नु सबले आत्मा इनै हुन् भनी ॥
आर्को गोप्य रहस्य भन्छु सुन यो संवाद् सितारामको ।
भूभार् हर्न त काम् थियो जब हर्‍या छिनछान् भयो कामको ॥३२॥

भूमीको सब भार् हरेर रघुनाथ् राज् गर्न लाग्या जसै ।
देख्या श्री हनुमानलाइ र दया आयो प्रभूका तसै ॥
सीतालाइ तहीं हुकुम् दिनुभयो सीते ! हनुमान् बड़ा ।
हाम्रा भक्त भया इ तत्व लिनका खातिर् यहाँ छन् खड़ा ॥३३॥

इन्लाई तिमि तत्व देउ भनि यो हूकुम् दिनू भो जसै ।
सीताले हनुमानलाइ दिनुभो जुन् तत्व हो सो तसै ॥
आर्को तत्व त केहि छैन हनुमान् ! कुन् आज आर्को कहूँ ।
राम् हुन् ब्रह्म इनै कि शक्ति बलियी माया भन्याकी म हूँ ॥३४॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

रामको सन्निधि पाइ गर्छु सबको सृष्टी उ सृष्टी पनी ।
आरोप् राम विषे गरिन्छ सब यो गर्न्या इनै हुन् भनी ॥
निर्मल् यस रघुवंशमा प्रभुजिले जो जन्म अैल्हे लिया ।
विश्वामित्र निमित्त यज्ञहरुका जो यादमा मन् दिया ॥३५॥

जो पाप् गौतमपत्निका हरि लिया जो भाँचि दीया धनू ।
जो मैलाइ बिहा गर्न्या सब कुरा यस्ता कहाँ तक् भनूँ ॥
जो ता गर्व हरथ्या ति वीर् परशुरामको जो अयोध्या बस्या ।
बाह्रै वर्ष बिहा गरथ्या पछि बसी जो फेरि वनमा गया ॥३६॥

यस्ता काम् जति काम् भया ति सब काम् गर्न्या म हूँ ता पनी ।
भन्छन् लोक त रामलाइ सबका कर्ता इनै हुन् भनी ॥
अन्तर्यामि अनादि साक्षि त ति हुन् कर्ता कहाँ ती थिया ।
मेरा गूण लिंदा त लोकहरुले कर्तै बनाई दिया ॥३७॥

येती ताहिं सिताजिबाट उपदेश् पाई सक्याथ्या जसै ।
आफैं राम् प्रभुले पनी दिनुभयो फेर् तत्वको ज्ञान् तसै ॥
यस्तो हुन्छ परात्म आत्म यहि हो यो हो अनात्मा भनी ।
आत्मानात्म परात्म भेद् बुझिलिन्या गर्नू सदा काम् पनी ॥३८॥

आत्माको र परात्मको छ कति फेर् ती एक जानी लिनू ।
जुन् जुन् चीज अनात्म हुन् उ त झुटा जानेर छाड़ी दिनू ॥
आत्माको र परात्मको गरि विचार् एक् तत्व जान्यो जसै ।
अज्ञान् सब् छुटिजान्छ ती पुरुषको मै तुल्य हुन्छन् तसै ॥३९॥

यो मेरो हृदयै त हो प्रिय छ यो खुप् गुह्य राख्नू पनी ।
तत्वज्ञान् भनि यै कहिन्छ बुझ यो सून्यौ हनूमान्! भनी ॥
तत्वज्ञान् हनुमानलाइ रघुनाथले यै दिनू भो तहाँ ।
सोही ज्ञान् तिमि थ्यैं कहीकन सक्याँ सम्पूर्ण मैले यहाँ ॥४०॥

सून्यौ पार्वति! रामको हृदय यो जो जो त पाठ् गर्दछन् ।
जो छन् जन्म सहस्रका सकल पाप् तिन्का सबै टर्दछन ॥
जातीभ्रष्ट अधम् हवस् त पनि लौ यसलाइ खुप् पाठ् गरी ।
रामको ध्यान् पनि गर्छ पो भनि भन्या जाइ जान्छ संसार् तरी ॥४१॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

सूनिन् पार्वतिले अपार महिमा यो रामजीको जसै ।
फेर् विस्तार् गरि सुन्नलाई मन भो ती पार्वतीको तसै ॥
बिन्ती फेर् शिव थ्यैं गरिन् पनि तहाँ हे नाथ्! सबै रामको ।
लीला सुन्न मलाइ मन् हुन गयो येही बुझयाँ कामको ॥४२॥

सूनोस् रामलिला भनेर म उपर् माया बहूतै धरी ।
सब् लीलाहरु फेर् बताउनुहवस् जो छन ति विस्तार् गरी ॥
यो प्रेम् पार्वतिको बुझया र शिबले खुप् प्रेम राखिन् भनी ।
जो जो हुन् सब राम् चरित्र शिवले तहाँ बताया पनी ॥४३॥

ई भूमीकन रावणादि विरले भारी बनाई दिया ।
भारी भै ति रुँदै गइन् उहि जहाँ ब्रह्मा बस्याका थिया ॥
पापी घेर् भइ भार् भयो मकन ता यो भारि छूटोस् भनी ।
आयाँ आज दया निधान! चरणमा यो बिन्ति पारिन् पनी ॥४४॥

यस्तो बिन्ति सुनी दया पनि उठ्यो ती भूमि माथी तहाँ ।
दौड़ी क्षीर समुद्रका तिर गया विष्णू रहन्थ्या जहाँ ॥
इन्द्रादीहरु साथमा लिइ गई स्तूती गर्ख्याथ्या जसै ॥
सर्वात्मा भगवान् प्रसन्न हुनु भो दर्शन् दिनू भो तसै ॥४५॥

देख्या सुन्दर रुप् जसै प्रभुजिको ब्रह्मा चरण्मा पर्ख्या ।
भक्तीले स्तुति खुप् गरेर खुसि भै हात् जोरि बिन्ती गर्ख्या ॥
हे नाथ्! रावण दुष्ट भै सकल लोक्‌लाई विपत्ती दियो ।
इन्द्रादीहरुको त तेज् सहजमा खैंचेर जस्‌ले लियो ॥४६॥

यस्‌लाई अब मारिबक्सनुहवस् मानिस् सरीका बनी ।
मानिस्‌देखि मर्ख्यास् भनी त वरदान् दीई रह्यांछू पनी ॥
ब्रह्माको यति बिन्ति सूनि भगवान्‌को यो हुकुम् भो पनी ॥
रावण्‌लाइ म मारुँला सहजमा मानिस् सरीको बनी ॥४७॥

माया मेरि सिता भयेर रहनिन् पुत्री जनक्‌की भई ।
छोरो भैकन जन्मुँला म दशरथ्‌जीको अयोध्या गई ॥
सीतालाई लियेर पूर्ण गरुँला यो बिन्ति तिम्रो भनी ।
अन्तर्ध्यान् भगवान् तहीं हुनुभयो त्रैलोक्यका नाथ् पनी ॥४८॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

अन्तर्ध्यान् भगवान् जसै हुनुभयो इन्द्रादिलाई पनी ।
ब्रह्माले खुसि भै अह्राउनुभयो भूलोक जाऊ भनी ॥
मानिस् भैं भगवान् जती त रहनन् तेस् पृथ्विलोकमा गई ।
वानर् भैकन सब् तिमी पनि रह्या साहाय जस्ता भई ॥४६॥

ब्रह्माजी पनि सत्यलोक् गइगया येती अह्राई वरी ।
इन्द्रादी पनि वानरै भइरह्या सब् पृथ्विलोक्मा झरी ॥
यै बिच्मा दशरथ् बड़ा विर थिया राजा अयोध्यामहाँ ।
तिन्को वृद्ध उमेर् भयो त पनि एक् छोरा भयानन् तहाँ ॥५०॥

तापले पूर्ण भई गुरूसित गया सोध्या उपाई पनी ।
हे सर्वज्ञ मुने! कसो गरिहुनन् छोरा मलाई भनी ॥
यस् कामले फल मिल्छ यो भनि सबै जान्न्या वशिष्ठै थिया ।
यस्तो विन्ति सुनी वशिष्ठ गुरुले युक्ती बताई दिया ॥५१॥

हुन्छन् पुत्र अवश्य जल्दि महाराज्! एक् यज्ञ ऐले गर्न्या ।
शान्ताका पति ऋष्यश्रृङ्ग ऋषि छन् ती डाकन ऐले पर्न्या ॥
ती हामी बसि यज्ञ एक् हजुरका खातिर् गरौंला जसै ।
चार् छोरा अति विर् हुनन् हजुरका सब् ताप छुट्नन् तसै ॥५२॥

यस्तो अर्ति वशिष्ठको जब सुन्या राजा बहुत् खुस् भया ।
शान्ताका पतिलाइ डाकिकन खुप् याग् गर्न लागी गया ॥
ऋष्यश्रृङ्ग वशिष्ठ दुइ ऋषिले होम् गर्न लाग्या जसै ।
पायस्को थरिया लिईकन तहाँ आया ति अग्नी तसै ॥५३॥

यस् पायस्कन लेउ आज भगवान् छोरा हुन्याछन् भनी ।
राजालाइ दिया र पायस छप्पा ताहाँ ति अग्नी पनी ॥
राजा खूसि भई दुवै ति ऋषिका कोमल् चरण्मा परी ।
कौशल्या र ति केकयीकन दिया पायस् दुवै भाग् गरी ॥५४॥

खानू बाँकि थियो उसै बखतमा आइन् सुमित्रा पनी ।
कौशल्या र ति केकयीसित भनिन् रुवै भाग मेरो भनी ॥
दूबैले दुइ भागदेखि झिकि भाग् तिन्को पुऱ्याई दिया ।
तिनू रानी मिलि तेहि पायस तहाँ सम्पूर्ण खाई लिया ॥५५॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

तीनै रानि ति गर्भिणी पनि भया तेज् देवताका सरी।
देखीयो सब रानिको सकललोक खूसी भया तेस् घरी॥
कौशल्या जननी गराइ भगवान् श्री राम पैदा भया।
देखिन् श्री प्रभुको चतुर्भुज स्वरूप् सब् माइका ताप् गया॥५६॥

हात् जोरी बहुतै स्तुती पनि गरिन् जानिन् र ईश्वर भनी।
जान्याँ नाथ! हजूरलाइ सबका आत्मा स्वरूपी भनी॥
यो ब्रह्माण्ड पनी सहज् उदरमा लीन्या त आफैं थियौ।
मेरा आज उदर् विषे बसि यहाँ यो जन्म ऐले लियौ॥५७॥

देख्याँ भक्त उपर् दया हजुरको हे नाथ्! शरण्मा पऱ्याँ।
यो मूर्ति प्रभुको सदा मनमहाँ झल्कोस् पुकारा गऱ्याँ॥
यस्तो दिव्य शरिर् छपाइ कन वेस् बालक् स्वरूप्का बनी।
दर्शन् देउ मलाइ हेर्छु भगवान्! फेर् बाललीला पनी॥५८॥

तेही बालक मूर्तिलाइ म यहाँ आलिङ्गनादी गरी।
सब् पाप् नष्ट गराउँला र करुणा होला र जाँला तरी॥
यो बिन्ती महतारिको सुनि हुकुम् यो भो प्रभूको तहाँ।
मातर्! जुन् छ हजूरको हित कुरो होवस् सबै थोक् यहाँ॥५६॥

दूवै स्त्री पुरुषै भई अघि ठुलो मेरो तपस्या गऱ्यौ।
तीमीलाइ म पुत्र पाउँ भनि खुप् इच्छा यसैमा धऱ्यौ॥
हुम्ला पुत्र भनेर बर् पनि दियाँ सोही कुराले यहाँ।
तिम्रो पुत्र भयेर जन्मन गयाँ व्यर्थैं म झर्थ्याँ कहाँ॥६०॥

कौशल्यासित बात् यती तहिं गरी बालक्ख जस्ता बनी।
चेष्टा बालककै लिया प्रभुजिले खुप् रुन लाग्या पनी॥
थाहा भो दशरथ्जिलाइ र गई दर्शन् गऱ्याथ्या जसै।
देखदैमा परिपूर्ण मन् हुन गयो आनन्द पाया तसै॥६१॥

तत्क्षण्मा तहिं जातकर्म पनि भो सब् काम् गुरूले गऱ्या।
कैकेयीतिर ता भरत् हुनुभयो आनन्दमा सब् पऱ्याँ॥
जमल्याहा दुइ पुत्र पाउँदि भइन् त्यहाँ सुमित्रा पनी।
जेठा लक्ष्मणजी भया ति दुइमा शत्रुघ्न कान्छा बनी॥६२॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

तिन् रानीतिर चार पुत्र सुकुमार् जन्मी सफ्याथ्या जसै ।
भूमी रत्न सुवर्ण वस्त्रहरुका भारी भया दान् तसै ॥
कौशल्या सुतको वशिष्ठ गुरुले नाम् राम भन्नू भनी ।
राख्या केकयि पुत्रको भरत नाम् जमूल्याहको नाम् पनी ॥६३॥

जेठाको शुभ नाम लक्ष्मण गरी जुन् चाहिं कान्छा थिया ।
तिन्को नाम् पनि काम माफिक असल् शत्रुघ्न राखी दिया ॥
लक्ष्मण् राम्सित खेल्दछन् भरत थ्यैं शत्रुघ्न खेल्दा भया ।
पायस्कै अनुसारको हुन गयो प्रीती त बढ्दै गया ॥६४॥

बालक्काल् बिति गैगयो प्रभुजिको सब् बाललीला गरी ।
कौमार्मा व्रतबन्ध भो पढिसक्या सब् शास्त्र खुब् क्षोद् गरी ॥
खेल्या क्यै दिनमा सिकार बनमा साँचा सिकारी बनी ।
राज्काज् गर्नु जती थियो सकल त्यो राज्काज् चलाया पनी ॥६५॥

राम् हुन् परात्मा न त हुन् विकारी ।
यस् लोकमा यो नररूपधारी ॥
काम् गर्न लाग्या त नरै सरीका ।
लीला अपार् छन् भगवान् हरीका ॥६६॥

राम् नारायण हुन् भनेर मनले जान्या र भेट्छु भनी ।
विश्वामित्र ऋषी बहुत् खुसि हुँदै आया अयोध्या पनी ॥
देख्या श्री दशरथ्जिले र बहुतै आदर् ऋषीको गरी ।
सोध्या काम् किन आज आउनुभयो भन्दै बहुत् प्रेम् धरी ॥६७॥

आदर्पूर्वकका सुन्या प्रिय वचन् यस्ता ऋषिले जसै ।
आफ्नू दर्द जउन् थियो मनमहाँ सोही बताया तसै ॥
हे राजन्! सब पर्व पर्वहरुमा ईश्वर् विषे मन् धरी ।
गर्छू होम्हरु कर्म तेस् बखतमा आयेर होम् नाश् गरी ॥६८॥

मारिचले र सुबाहुले बहुत दिक् गर्छन् र पाप् हुन् भनी ।
दूवैलाई मराउनाकन उठ्यो रिस् आज मेरो पनी ॥
सोही बिन्ति गरूँ भनेर अहिले आयाँ हजुर्मा यहाँ ।
जेठा पुत्र मलाइ बक्सनुहवस् लैजान्छु ऐले तहाँ ॥६९॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

लक्ष्मण् साथ् गरि रामलाइ अधिराज्! ऐले हजुर्ले दिया।
मारिच्‌लाइ सुबाहुलाइ सहजै मार्न्या इनैले थिया॥
यस्मा अर्ति वशिष्ठको लिनुहवस् दीना नदीना महाँ।
भन्छन् दीनु त बक्सनू पनि हवस् यै काम आयाँ यहाँ॥७०॥

विश्वामित्रजिको सुन्या बिनति यो राजा सकस्मा पऱ्या।
दीन्या हो कि नदीउँ येहि मनमा चिन्ता बहूतै गऱ्या॥
सोध्या ताहिं वशिष्ठ ध्यैं पनि गुरो! यस्तो पस्यो क्या गरूँ।
कल्याण् हुन्छ कसो गरेर अहिले अर्ती मिलोस् एक् अरू॥७१॥

राम्‌लाई म नदेखि बांच्छु कसरी एक् यै कठिन् भो अनी।
इन्‌लाई नदिया सराप् पनि दिनन् की लाग्छ यस्तो पनी॥
यस्मा श्रेय यसो छ यो गर भनी पाऊँछु आज्ञा जसो।
सोही काम म गर्दछू हित हुन्या कुन् पाठ गर्नू कसो॥७२॥

यो बिन्ती दशरथ्‌जिको जब सुन्या तहाँ गुरूले पनी।
राम्‌को गुह्य कुरो सबै भनिदिया यस्ता इ राम् हुन् भनी॥
हे राजन्! तिमि रामलाइ अहिले हुन् पुत्र मेरा भनी।
भन्छौ पुत्र त हुन् तथापि इ त हुन् चौधै भुवन्‌का धनी॥७३॥

भूभार् हर्न निमित्त आज भगवान् यस् पृथ्विलोक्‌मा झऱ्या।
कौशल्यातिर जन्मनू पनि थियो सो सत्य ऐले गऱ्या॥
कौशल्या दशरथ् दुवै अघि तिमी कश्यप् अदीती थियौ।
ईश्वर्‌लाइ म पुत्र पाउँ भनि तप् गर्दै समाधी लियौ॥७४॥

खुसी भै वरदान् दिया प्रभुजिले छोरो म हूँला भनी।
सोही सत्य गराउनाकन यहाँ जन्म्या परात्मा पनी॥
शेष् हुन् लक्ष्मण शङ्ख हुन् भरतजी शत्रुघ्न चक्रावतार्।
हुन् को जान्दछ तत्व यो बुझ तिमी लीला प्रभूका अपार्॥७५॥

मूल् शक्ती प्रभुको अनन्त गुणकी सो दिव्य मूर्ती बनी।
छोरी भै ति बस्या कि छन् जनककी सीता छ नाऊँ पनी॥
सीताराम् दुइको विवाह विधिले संयोग् गराऊँ भनी।
विश्वामित्रजिका भयो र मनमा आई रह्याछन् पनी॥७६॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

दीन्यै योग्य म मान्दछू भनि गुरूछे अति दीया जसै ।
खूसी भै दशरथ्जिले पनि दिया लक्ष्मण् सहित् राम् तसै ॥
राम् लक्ष्मण्कन पाउँदा ऋृषि पनी अत्यन्त खूसी भया ।
आशीर्बाद् दशरथ्जिलाइ दिइ राम् लक्ष्मण् लिई ती गया ॥७७॥

केही दुर् गइ रामलाइ ऋृषिले हित् दूइ बिद्या दिये ।
जुन् विद्या पढ़ि भोक् थकाइ कहिलै लाग्दैन यस्ता थिये ॥
गङ्गाका तिरमा बड़ो वन थियो पौंच्या जसै ता त्यहाँ ।
विश्वामित्रजिले कह्या प्रभुजि थ्यैं राम्! ताड़का छे यहाँ ॥७८॥

हों त्यो राक्षसि कामरूपि छ बहुत् लोकूलाइ बाधा पनी ।
गर्छे यस्कन मारिबक्सनुहवस् यो पापिनी हो भनी ॥
विश्वामित्र्जिका वचन् यति सुनी श्रीरामजीले पनी ।
टङ्कार् खुप् धनुको गर्‍या सुनि यहाँ त्यो जल्दि आवस् भनी ॥७९॥

त्यो टङ्कार् सुनि ताड़का पनि त्यहाँ दौड़ेर आई जसै ।
हान्या बाण् प्रभुले गड़्यो हृदयमा त्यो बाण् मरी त्यो तसै ॥
यक्षी थी अधिको सराप् परि तहाँ तेस्ती भयाकी थिई ।
राम्ले मारिदिंदा सराप् पनि टर्‍यो फेर् यक्षिकै रूप् लिई ॥८०॥

श्री राम्चन्द्रजिका वरीपरि घुमी प्रेम्ले नमस्कार् गरी ।
स्वर्गैमा गइ रामका वचनले बेस् एक् विमान्मा चढ़ी ॥
विश्वामित्र ऋृषी बहुत् खुसि भया यो कार्य देख्ता जसै ।
जो सब् शास्त्र रहस्य हो सब दिया श्री रामलाई तसै ॥८१॥

कामाश्रम् रमणीय एक् तहिं थियो एक् रात् तहाँ बास् गरी ।
फेर् सिद्धाश्रममा गया रघुपती सबूलाइ मङ्गल् गरी ॥
तेस् सिद्धाश्रममा अनेक् ऋृषि थिया पूजा सबैले गर्‍या ।
मारिच् फेय्न सुबाहु मार्नकन राम् ताहीं अगाड़ी सर्‍या ॥८२॥

विश्वामित्रजिलाइ भन्नु पनि भो मारिच् सुबाहु कहाँ ।
बस्छन् यज्ञ ठुलो गरी लिनुभया ती आउँथ्या की यहाँ ॥
भेटै आज भयेन मार्नु कसरी यो मर्जि सून्या जसै ।
विश्वामित्र ऋृषी ऋृषीहरु लिई होम् गर्न लाग्या तसै ॥८३॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

दिन् मध्याह्न भयो तसै बखतमा आया ति राक्षस् पनी ।
मिर्न्या कालकन चाल् नपाइ अघि मैं होम् नाश् गरौंला भनी ॥
काहीं हाड़ खसाउँछन् कहिं रगत् यस्तै प्रकारले गरी ।
आयाथ्या जब यज्ञमा प्रभुजिले हान्या अगाड़ी सरी ॥८४॥

मारिच्लाइ त बाणले जलधिका तिर्मा पुर्‍याई दिया ।
सूबाहूकन अग्नि बाण् धरि तहीं भस्मै गराई दिया ॥
तिन्को फौज् पनि ताहिं लक्ष्मणजिले मारी सक्याथ्या जसै ।
खूसी भैकन पुष्पवृष्टि गरिया सब् देवताले तसै ॥८५॥

विश्वामित्र बहुत् प्रसन्न हुन गै रामलाई काखमा लिया ।
भोजन् गर्न निमित्त रामकन तहाँ मीठा फलादी दिया ॥
तिन् दिन् ताहिं मुकाम् गर्‍या प्रभुजिको वार्ता कथाका गरी ।
चौथा दिन् ऋषिले गर्‍या विनति एक् रामका अगाड़ी सरी ॥८६॥

हे राम्! जाउँ जनकजिका पुरिमहाँ राजा जनक् छन् बड़ा ।
गर्नन् आदर भक्तिले हजुरका साम्ने हुन्याछन् खड़ा ॥
ताहाँ एक् शिवको धनू पनि छ बेस् देखीयला त्यो पनी ।
यो बिन्ती ऋषिको सुनेर रघुनाथ् खूसी भया बेस् भनी ॥८७॥

विश्वामित्र र भाई लक्ष्मण लिई श्रीराम् हिंड्याथ्या जसै ।
आश्रम् गौतमको पर्‍यो नजरमा गङ्गा किनारको तसै ॥
आश्रमका नजिकै असल् फल सहित् फुल्को बगैंचा थियो ।
जन्तू नाम् त थियेन कोहि त पनी संभार् बिनै त्यो जियो ॥८८॥

मालुम् रामकन क्या कहीं कमि थियो जो ता जगत्‌का धनी ।
सोध्या तैपनि यो असल् छ किन यो रित्तो बगैंचा भनी ॥
विश्वामित्र थिया सबै गुण निपुण् विस्तार् सुनाया पनी ।
गौतमको अघि बस्ति हो अब भन्या छैनन् यहाँ क्वै पनी ॥८९॥

भार्या गौतमकी समान गुणकी भक्ती अहल्या थिइन् ।
ब्रह्माकी ति त पुत्रि हुन् गुणि हुँदा सब् खुस् गराई लिइन् ॥
गौतम् कार्य निमित्त दुर् जब गया रूप् गौतमैको सरी ।
धारी गौतम पत्निका नजिकमा इन्द्रै अगाड़ी सरी ॥९०॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

आई भोग विलास् गरेर खुसिभै फर्की गयाथ्या जसै।
देख्या गौतमलाई गौतमजिले तिन्लाइ देख्या तसै॥
आफ्नू रूप दुरुस्त देखिकन खुप् गौतम् रिसाया पनी।
सोध्या होस् तँ कउन् बता नतर ता हेर् भस्म गर्छू भनी॥६१॥

ब्राह्मण्! इन्द्र म हूँ भनेर डरले बिन्ती गर्‍याथ्या जसै।
गौतम्ले पनि खुप् रिसायर दिया यस्तो सराप् पो तसै॥
योनीमा अति लुब्ध आज भइछस् यत्री बड़ो भै पनी।
तेरा येहि शरीरमा अब बनुन् हजार योनी भनी॥६२॥

दीया येति सराप् र इन्द्र कन फेर् ति पत्नीलाई पनी।
दीया येति सराप् परीछ छलमा आखिर् तरोस् यो भनी॥
जन्तू क्वै नरहुन् यहाँ अब उपर् पत्थर् भई तैं रह्यास्।
जैले ता रघुनाथ् चरण्धरि दिनन् तैले तँ मुक्तै भयास्॥६३॥

यस्तो सत्य सराप् पर्‍यो र पतिको ताहीँ अहल्या पनी।
पृथ्वीमा गिरि गै गइन् अचल एक् पत्थर् स्वरूप्की बनी॥
पादस्पर्श ति खोज्दथिन् हजुरको पाप् मुक्त होला भनी।
तिन्लाई करुणा गरी हजुरले कुल्ची दिन्या हो पनी॥६४॥

यस्तो बिन्ति सुन्या जसै ति ऋषिका श्रीराम् तुरुन्तै गया।
देख्या पत्थर एक् ठुलो र रघुनाथूले कुलिच दींदा भया॥
सुन्दर् मूर्ति धरी खड़ा भइगइन् ताहीँ अहल्या पनी।
श्रीराम्चन्द्रजिले प्रणाम् पनि गर्‍या ई ब्राह्मणी हुन् भनी॥६५॥

देखिन् श्रीरघुनाथलाई र तहाँ खूसी अहल्या भइन्।
पूजा स्तूति गरेर राम्सित बिदा भै फेर् पती थ्यैं गइन्॥
ताहीँदेखि चल्या र जल्दि रघुनाथ् गङ्गाजिका तिर् झर्‍या।
तर्नाको प्रभुले जसै मन गर्‍या मल्हा चरण्मा पर्‍या॥६६॥

स्वामित्! ई दुइ पाउको अति असल् धूलो जसै ता पर्‍यो।
पत्थर् हो त पनी मनुष्य सरिको सुन्दर् स्वरूपै धर्‍यो॥
तस्तै पाठ यहाँ भयो पुनि भन्या नावै स्वरूप् धर्दछन्।
नावैले पनि रूप् धर्‍या यदि भन्या हाम्रा जहान् मर्दछन्॥६७॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

तस्मात् पाउ पखालि वारि तिरमा हाम्रा शिरोपर् धरौं।
येती काम यहाँ गरेर रघुनाथ्! गङ्गाजिका पार् तरौं॥
यस्तो बिन्ति सुनी तहाँ प्रभुजिले पाऊ अगाड़ी दिया।
मल्हाले जलले पखालि उहि जल् आफ्ना शिरोपर् लिया॥९८॥

यस्ता रितूसित नाउमा चढ़ि सहज् गङ्गाजिका पार् गया।
श्याम् सुन्दर् रघुनाथ् बहुत् खुसि हुँदै दाखिल् जनकपुर् भया॥
विश्वामित्र ऋषी बहुत् खुसि हुँदै दूई कुमार् साथ् गरी।
आया यस् पुरिमा भनी जब सुन्या दौड़या जनक् तेस् घरी॥९९॥

पौंची प्रश्न गऱ्या सबै कुशलको पावै महाँ शिर् धरी।
देख्या सुन्दर राज्कुमार् जनकले मानू रमानाथ् सरी॥
पक्का गर्न निमित्त फेर् जनकले सोध्या ऋषी ध्यैं पनी।
जान्याँ जान्न त चित्तले त भगवान् विष्णू इनै हुन् भनी॥१००॥

ब्रह्मन्! पुत्र इ हुन् कउन् पुरुषका विस्तार् हवस् बेस् गरी।
क्लेश्को लेश् नराखि यस् बखतमा मेरो लग्या मन् हरी॥
बिश्वामित्रजिले सुन्या विनति यो राजा जनक्को जसै।
यस्ता हुन् इ भनेर सब् ति ऋषिले विस्तार् बताया तसै॥१०१॥

हे राजन्! दशरथ्जिका इ सुत हुन् नाम् राम लक्ष्मण् भनी।
भन्छन् मानिसले गरी नसकिन्या गर्छन् पराक्रम पनी॥
मारिच्लाइ सुबाहुलाइ अरु ता को जित्न सक्न्या थिया।
रामले मारिचलाइ फेंकि सहजै सूबाहु मारी दिया॥१०२॥

पत्थर् भै कति बर्षसम्म रहँदी गौतम्कि पत्नी पनी।
पाऊले तहिं कुल्चँदा उठिगइन् जस्ता कि तस्ती बनी॥
ताहाँ एक् शिवको धनू छ भनि यो सूनेर आया यहाँ।
देख्नाको मतलब् छ आज महाराज्! राखी रह्याछौ कहाँ॥१०३॥

चाँड़ो आज नजर् गराउ भनि यो विस्तार् गऱ्याथ्या जसै।
मन्त्रीलाइ हुकुम् दिया जनकले लौ ल्याउ भन्न्या तसै॥
यै बिच्मा ऋषि ध्यैं भन्या जनकले रामले उचालुन् धनू।
सीता छोरि म दिन्छु रामकन गरुन् बीहा बहुत् क्या भनूँ॥१०४॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

साँचा वाणि सुन्या र सोहि रितका बात्चित् गऱ्याथ्या जसै ।
पाँच् हज्जार् विरले उचालि बलले ल्याया धनूषै तसै ॥
ताहाँ श्री रघुनाथ् उठेर नजिकै बाहीं धनू थ्यैं गया ।
वाम् हात्मा सहजै उचालि धनु त्यो रामूले त लींदा भया ॥१०५॥

ताँदो जल्दि चढ़ाइ खैंचनु भयो ताहाँ धनू कै जसै ।
दूई टुक् भइ पो गिऱ्यो र धनु ता खूसी भया सब् तसै ।
हर्षै हर्ष भयो तसै बखतमा सारा जनक्पुर् भरी ।
आदर् खुप् प्रभुको गऱ्या जनकले आलिङ्गनादी गरी ॥१०६॥

सीताजी पनि रामका शिर उपर् माला कनक्को धरी ।
छम्छम् पाउ गरी फिरिन् घरमहाँ मङ्गल् भयो तेस् घरी ॥
मालिक् हुन् दशरथ् खबर् दिनुपऱ्यो ती छन् अयोध्यामहाँ ।
जाउन् पत्र लियेर मानिसहरू चाँड़ो ति आउन् यहाँ ॥१०७॥

यस्तो बिन्ति जनक्जिले पनि गऱ्या पत्रा तयारि भया ।
विस्तार् पत्र लियेर दुत्हरू पनी जल्दी अयोध्या गया ॥
यो विस्तार सबै सुन्या र दशरथ् आनन्द सागर् पऱ्या ।
सबूले जानुपऱ्यो जनक्पुरमहाँ भन्न्या हुकुम् यो गऱ्या ॥१०८॥

जम्मा लस्कर भै गयो क्षणमहाँ जल्दी जनक्पुर् गयो ।
क्या वर्णन् भिड़को गरूँ त्यस बखत् खाली अयोध्या भयो ॥
लस्कर्का भिड़ले उड़ीकन धुलो आकाशमा गै गयो ।
सबूको चित्तमहाँ अलिक् छिन भन्या मेघ्को झलक् भै गयो ॥१०९॥

यस्ता रित्सित सब् गया जति थिया सेना जनक्पुर्महाँ ।
दाखिल् भो दशरथ्जिका हुकुमले हर्षै बढ्यो खुप् तहाँ ॥
ताहाँ श्री दशरथ्जिको जनकले आदर् बहूतै गऱ्या ।
लक्ष्मण्ले सँग राम् पनी तहिं पिताजीका चरण्मा पऱ्या ॥११०॥

बस्नालाइ हवेलि सुन्दर जनक्जीले खटाया जहाँ ।
खूसी भै दशरथ् पनी गइबस्या तेसै हवेलीमहाँ ॥
सुन्दर् लग्न खटम् गऱ्या जनकले मङ्गल् सहरमा चल्या ।
नाच कीर्तन्सितका प्रकाशकन हुन्या रात्मा चिराक् खुब् बल्या ॥१११॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

जो मण्डप् छ विवाहको तस उपर् झुम्का हिराका झुल्या ।
मूँगा मोति त और् जनक्पुरमहाँ घर् घर् सबैका झुल्या ॥
यस्तै रित् गरि सब् विवाह विधि भो चारै जना भाइको ॥
हर्षैले परिपूर्ण मन् हुन गयो सीताजिका माइको ॥११२॥

राम् लक्ष्मण् दुइलाइ ता जनकले आफ्ना ति छोरी दिया ।
भाईका त भरत्जिलाई र ति विर् शत्रुघ्नलाई दिया ॥
जस्तै आफु थिया अनन्त गुणका चौधै भुवन्का धनी ।
आभ्यन्तर् मनले विचार गरदा तस्तै ति पत्नी पनी ॥११३॥

विश्वामित्र वशिष्ठ दुइ ऋषि थ्यैं यस्ती सीता हुन् भनी ।
उत्पत्ती अघिको सबै जनकले विस्तार् सुनाया पनी ॥
जोत्यौं भूमि पवित्र गर्न भनि एक् पर्व यज्ञ गर्दामहाँ ।
जोत्तामा त सिताजि निस्कन गइन् आश्चर्य मान्यौं तहाँ ॥११४॥

पाल्यौं छोरि भनेर नाम् पनि असल् सीताजि राखी दियौं ।
गर्थिन् बालकमा अनेक् तरहका लीला म खुसी थियौं ॥
राम् नाम्ले दशरथ्जिका सुत भई खेल्छन् अयोध्यामहाँ ।
तिम्री पुत्रि सिता उनै प्रभु कि हुन् माया ति आइन् यहाँ ॥११५॥

यो लीला छ बुझी सिताकन तिनै रामलाइ दीया भनी ।
नारद्जी उठि गैगया उहि सुनी याद् भो मलाई पनी ॥
कुन् पाठ्ले अब रामलाइ म सिता पारूँ विचार् यो गर्‍यौं ।
थीयो यो शिवको धनू यहि यसैमा यो प्रतिज्ञा गर्‍यौं ॥११६॥

तोंदो यस् धनुको चढ़ाउन जउन् विर्ले त सक्ला यहाँ ।
सीता छोरि दिन्याछु तेस्कन फिका होवैन यस् बात्महाँ ॥
जानुन् सब् विरले भनीकन गर्‍यौं यस्तो प्रतिज्ञा जसै ।
यो सूनीकन देशका विरहरू आया तुरुन्तै तसै ॥११७॥

को सक्थ्यो धनु त्यो उठाउन विना श्रीराम् अगाड़ी सरी ।
हिक्मत् हारि सबै घरै फिरिगया दर्शन् धनूको गरी ॥
रामले पूर्ण गराइबक्सनुभयो मेरो प्रतिज्ञा पनी ।
यो त्रीन्ह्यां पनि सब् प्रसाद् चरणले गर्दा भयाको भनी ॥११८॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

विश्वामित्रजि थ्यैं यती जनकले बिन्ती अगाड़ी गरी ।
सीतानाथ् रघुनाथको स्तुति गऱ्या आनन्द सागर् परी ॥
दाईजो सय कोटि दौलत सहित् बेस् बेस् अयुत् रथ् दिया ।
घोड़ा ता दस लाख् दिया छ सय ता खुप् मत्त हात्ती थिया ॥११९॥

पैदल् लस्कर एक लाख् र सय तिन् केटी दियाथ्या जसै ।
पूजा फेरि वशिष्ठको पनि गऱ्या भारी डबल्ले तसै ॥
पूजा ताहिं भरत्जिको तहिं भयो लक्ष्मणहरूको पनी ।
इच्छा भो रघुनाथको अब फिरौं जाऔं अयोध्या भनी ॥१२०॥

जानाको मतलब् बुझी जनकजी रामका चरणमा पऱ्या ।
खूसी मन् बहुतै गराइ सबको बीदा जनकले गऱ्या ॥
सीताजी महतारिका अघि गई आलिङ्गनादी गरी ।
लागिन् रून र सोहि सूनि सबका आंसू खस्या बर्बरी ॥१२१॥

सीताजीकन अर्ति यो पनि दिया सासू ससूरा सरी ।
अर्को छैन बड़ो यहि बुझिगऱ्या तिन्को टहल् बेस् गरी ॥
स्त्रीको धर्म पतिव्रता हुनु ठुलो जानेर हूनू भनी ।
अर्ती येति दिया र तेस् बखतमा बीदा भया ती पनी ॥१२२॥

यै बिच्मा नगरा बज्या प्रभुजिका भेरी मृदङ्गा पनी ।
स्वर्गैमा पनि हर्ष भो प्रभु गया फेरी अयोध्या भनी ॥
रामको लस्कर बाह्र कोस् जनकपुर् देखी जसै ता गयो ।
सबका चित्तमहाँ बड़ो भय दिन्या उल्का बहूतै भयो ॥१२३॥

जो जो पृथ्विमहाँ त क्षत्रिहरू छन् तिन्को विनाशै गरी ।
आया तेस् बिचमा तहीं परशुराम् उल्का भयो जुन् वरी ॥
पृथ्वी कम्प भइन् तसै बखतमा हा हा मबैका परी ।
राजाका मनमा विचार् यहि पऱ्यो छोरा बचुन् क्या गरी ॥१२४॥

यस्तो चञ्चल चित्तले परशुरामका पाउतलमा पऱ्या ।
मेरा पुत्र बचुन् प्रभो परशुराम्! भन्न्या त बिन्ती गऱ्या ॥
यस्तो बिन्ति पनी अनादर गरी कालाग्नि जस्ता भया ।
रामको गर्व हरूँ भनी परशुराम् रामकै अगाड़ी गया ॥१२५॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

कसको पुत्र तँ होस् बता मकन रे जाबो पुरानू धनू ।
भाँच्दैमा अति गर्व भो तँकन ता धेरै कुरा क्या भनूँ ॥
यो ता हो हरिको धनू विर भया ताँदो यसैमा चढ़ा ।
भन्दै खुब् रिसले रह्या परशुराम् रामका अगाड़ी खड़ा ॥१२६॥

ताँदो आज चढ़ाउँछस् त यसमा संग्राम् तँ थ्यैं गर्दछु ।
सक्तैनस् तँ त है म रात्रिदिन सबैको प्राण् सहज् हर्दछु ॥
यस्ता क्रूर वचन् गरी परशुराम् कालाग्नि भैं रूप् धन्या ।
पृथ्वी कम्प गराइ लोकहरूको सम्पूर्ण सातो हन्या ॥१२७॥

यस्ता क्रूर वचन् सुनेर रघुनाथ् क्रोधले अगाड़ी सरी ।
खोसी लीनु भयो धनू परशुराम्को त्यो बलैले गरी ॥
ताँदो जल्दि चढ़ाई बाण् पनि तहाँ लीनु भयेथ्यो जसै ।
ठूलो बल् रघुनाथको बुझि सबै खूसी भया लोक् तसै ॥१२८॥

हूकुम् श्री रघुनाथको परशुराम्लाई भयो यो तहाँ ।
तारो आज बताउ हान्छु अहिले ब्रह्मन्! म हानूँ कहाँ ॥
चोड़ो उत्तर देउ यस् बखतमा यस्लाइ लौ हान् भनी ।
तारो क्यै नदिया त काट्छु अहिले तिम्रै इ गोड़ा पनी १२६॥

हूकुम् येति गरेर तेज् परशुराम्को खैंचनू भो जसै ।
चीन्ह्या श्री रघुनाथलाइ अघिको वृत्तान्त सम्झ्या तसै ॥
बिन्ती येति तहाँ गर्‍या पनि हरे! चीन्ह्याँ जगन्नाथ् भनी ।
जस्को अंश मिल्यो र केहि भगवान्! यस्तो भयाँ मै पनी ॥१३०॥

पापी भो अति कार्तवीर्य अब ता यस्लाई मार्छू भनी ।
बालख्खै म थियाँ गर्‍याँ हजुरको ठूलो तपस्या पनी ॥
यस्तो वर् खुसि भै मलाइ दिनुभो शक्ती समेत् क्यै दिई ।
इच्छा पूर्ण हुन्याछ जाउ अब ता क्यै शक्ति मेरो लिई ॥१३१॥

पैले मार र कार्तवीर्यकन फेर् सब् क्षत्रिको नाश् पनी ।
एक्काईस बखत् गर्‍या प्रभुजिको हूकुम् छ यस्तै भनी ॥
क्षत्री शून्य भया कि पृथ्वि तिमिले कश्यप्जिलाई दिया ।
येती कर्म गरी सकेर अघिको सेखी पुर्‍याई लिया ॥१३२॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

त्रेतामा अवतार् लिन्याछु नरमा राम् राम् जगत्‌मा धरी ।
भेट् होला तिमि ध्यैं उहीं म लिउँला यो शक्ति फेरी हटी ॥
ताहाँदेखि तपै गरेर रहनू ब्रह्मैजिका दिन् भरी ।
येती अर्ति मलाइ दीकन गया बैकुण्ठधाम्‌मा हटी ॥१३३॥

मैले काम् पनि सो सबै गरिसक्याँ राम्‌लाइ भेट्याँ पनी ।
मेरो शक्ति हजूरले हरि लिंदा चीन्ह्याँ प्रभु हुन् भनी ॥
मेरो जन्म सफल् भयो सहजमा पायाँ परात्मा पनी ।
बूझ्या तत्व पनी सबै हजुरको पात्रै कृपाको बनी ॥१३४॥

जो छन् भक्त हजूरका ति सँगको सत्सङ्ग मेरो हवस् ।
यो भक्ती दृढ भै प्रभू! हजुरका येही चरण्‌मा रहोस् ॥
येती बिन्ति गरी तहाँ सकल पाप् पुण्यै समर्पण् गऱ्या ।
इच्छित वर् प्रभुले दिंदा परशुराम् आनन्द सागर् पऱ्या ॥१३५॥

ताहीं श्री रघुनाथका वरिपरी घूमी नमस्कार् गरी ।
मर्जीले ति गया महेन्द्र गिरिमा मन राम् चरण्‌मा धरी ॥
देख्या तेज् दशरथ्‌जिले र सुतको हर्षाश्रुधारा धरी ।
प्रेम्‌का सागरमा तहीं डुबिगया आलिङ्गनादी गरी ॥१३६॥

येती काम् गरि राम् गया सहजमा पौंच्या अयोध्यामहाँ ।
सीतालाइ लियेर राज्य सुख भोग् राम्‌ले गऱ्या क्यै तहाँ ॥
क्यै दिन् भानिज हुन् भरत्‌कन यहीं ल्याऊँ घरैमा भनी ।
भानिज्‌लाइ लिना निमित्त खुसिले आया युधाजित् पनी ॥१३७॥

बीदा श्री दशरथ्‌जिले पनि दिया बीदा मिलेथ्यो जसै ।
एक् शत्रुघ्न लिई भरत्‌जि त गया मामाकहाँ पो तसै ॥
सीताराम् पनि लोकमा सकलको आनन्दमङ्गल् गरी ।
चेष्टा मानिसकै गरीकन रह्या त्रैलोक्यका नाथ् हरी ॥१३८॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

## बालकाण्डको नवीन पाठ सम्बन्धी टिप्पणी

### श्लोक संख्या—१

१. बनाया—आधुनिक नेपालीका दृष्टिले 'बनाया' तथा 'गराया' दुवै प्रयोग चिन्त्य छन्।

२. भयो यो—'भयेथ्यो' पाठ भन्दा यो बढ़िया लाग्छ। 'यो'-ले वक्ताद्वारा बोलिएको वाक्यलाई बुझाउंछ।

### श्लोक संख्या—२

३. छन्—'हुन्' भन्दा यो पाठ राम्रो छ किनभने यसले संसारका वर्तमान शुभाशुभ कर्मलाई बुझाउँछ।

४. जस बखत्—'कली बखत्मा' भन्ने पाठमा 'बखत'-को अर्थ युग लाउनुपर्छ जो उति राम्रो छैन। वर्तमान पाठमा त्यो दोष छैन।

### श्लोक संख्या—३

५. ति—मूलसित अनुकूल यो पाठ छ। मूलमा 'नराः' भनी सबै कुरा भनिएको छ।

### श्लोक संख्या—४

६. पढ़्यौं—मूलसित अनुकूल यो पाठ छ। मूलमा 'विप्रा......धनार्जनार्थमभ्यस्त विद्या' भनेको छ।

### श्लोक संख्या—५

७. अरू—द्वितीय पादको 'शूद्रावि' अनुकूल यो पाठ छ।

### श्लोक संख्या—६

८. उपाई—'उपायै' यो विशेष रूपको यहाँ आवश्यकता छैन। अतः 'उपाई' विकृत भए तापनि 'उपाय'-को साधारण अर्थ द्योतन गर्छ।

### श्लोक संख्या—८

९. राम् नाम्......पर्दछिन्—यो दुवै पाठ तुल्य मूल्यका छन्। प्राचीन लेखोटमा पाइएको पाठ यहाँ ग्रहण गरियो।

### श्लोक संख्या—१२

१०. गऱ्याले—प्राचीन लेखोटहरूमा यही पाठ छ तर यो चिन्त्य छ।

### श्लोक संख्या—१३

११. जागृत्—प्राचीन लेखोटहरूमा यही पाठ छ। यो समसामयिक स्थानीय प्रयोग हुनु पनि सम्भव छ।

१२. सूर्यग्रहण—सूर्यै नभनी सूर्य भन्नु नै राम्रो छ।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

श्लोक संख्या—१५

१३. दिन्या—यो पाठ लिन्या भन्दा अधिक नेपाली भाषामा प्रयुक्त छ।

१४. उहि—'जस्तो' पछि 'उहि' नै अनुकूल छ।

श्लोक संख्या—१६

१५. येस्मा—'तेस्मा' भन्दा यो पाठ बढ़िया छ।

१६. अझ—'झन' पछि भन्दा 'अझ' नै राम्रो छ। 'अझ' भन्नाले 'ठूलो' बुझिन्छ।

श्लोक संख्या—१७

१७. जाइजान्छ—नेपाली कविहरू इकारलाई हल् गर्ने तथा भानुभक्तले पनि यत्रतत्र गरेको परीपाटी अनुसार यो पाठ राम्रै छ।

श्लोक संख्या—१८

१८. धरी—प्राचीन लेखोटहरूमा यही पाठ छ।

१९. रोज् रोज्—पत्रहरूमा अद्यापि प्रयोग गरिनै यो पाठ राम्रो छ। हेर्नु श्लोक १४, १५।

२०. लिंदा—यो पाठ व्याकरण सम्मत तथा राम्रो छ।

श्लोक संख्या—१९

२१. इन् थ्यें—यस्तो प्रयोगका निम्ति हेर्नु संख्या ४। समसामयिक प्रयोग नै यस्तो भएको बुझिन्छ।

२२. भनि—यस्तो भनाइ प्रचलित छ।

श्लोक संख्या—२१

२३. सो—यो पाठ राम्रो छ।

श्लोक संख्या—२२

२४. गरि......भनु—यो पाठ नेपाली भनाइको सुन्दर उदाहरण हो।

श्लोक संख्या—२३

२५. तो......सुन्या—यो पाठले बुझ्नेलाई बुझाउँछ औ श्लोकमा सुन्दरतापूर्वक रहेको हुनाले अर्थ स्पष्ट भएको छ।

श्लोक संख्या—२५

२६. छैन कोहि—क्रियापद अघि राखी कर्ता पछि राख्ने विशेषण अघि राखी विशेष्य पछि राख्ने प्रयोग तल अरू अनेक पाइएका छन्।

२७. पनी—यो पाठ चतुर्थ पादको 'गनी' अनुकूल छ।

२८. हेलेले......गनी—यो प्राचीन लेखोटमा भएको पाठ अत्यन्त सुन्दर तथा हृदयग्राही छ। पहाड़ी जीवन अनुकूल खोल्साको उपमा स्वाभाविक छ।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

## श्लोक संख्या—२६

२९. थवं—यो पाठ मूलसित अनुकूल तथा सार्थक छ।

३०. हरी लगिदिंदा—यो पाठ व्याकरण सम्मत तथा राम्रो छ।

## श्लोक संख्या—२७

३१. रतिभर्—यो पाठ भावपूर्ण हुनाले राम्रो छ।

३२. येसो—यो पाठ नै उपयुक्त छ।

## श्लोक संख्या—३०

३३. कहिं—'अरू' पाठ प्रायः निरर्थक छ।

३४. यस्तै—ऐजन।

३५. त्रैलोक्यनाथ्—त्रैलोक्यनाथ भन्नु नै राम्रो छ। अन्यत्र पनि यस्ता विकृत पाठ छन्।

## श्लोक संख्या—३२

३६. त काम्—'त को' निरर्थक छ।

## श्लोक संख्या—३३

३७. नहीं हुकुम—हेर्नु २६ ।

## श्लोक संख्या—३४

३८. विनू भो—यो प्रयोग 'भयेथ्यो' भन्दा राम्रो छ।

## श्लोक संख्या—३५

३९. उ सृष्टी—मूल अनुकूल यो पाठ छ। पालनको यहाँ उपयुक्तता छैन। तस्य सन्निधि मात्रेण सृजामी दमतन्द्रिता। तत्सान्निध्यान्मया सृष्टं तास्मिन्नरियते ऽबुधैः॥

४०. निर्मल् यस्—हेर्नु २६, ३७।

४१. अैल्हे लिया—यसले समयलाई बुझाउँछ।

४२. यज्ञहरूका जो यादमा मन् दिया—यहाँ 'याद' को अर्थ 'संझना' वा 'हेरचाह' हो।

## श्लोक संख्या—३६

४३. लिया—यो पाठ नै उपयुक्त छ। अर्काको दुःखहरण गरेको थियो।

४४. यसो जो फेरि वन्मा पस्या—यो पाठ अत्यन्त उपयुक्त छ। 'फेरि' ले रामचन्द्र बाल्यावस्यामा एकचोटि विश्वामित्रसँग वन गएको कुरा सम्झाउँछ।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

### श्लोक संख्या—३७

४५. कर्ता बनाई दिया—भन्नुभन्दा बनाउनु धेरै उपयुक्त छ।

### श्लोक संख्या—३८

४६. आत्मा...पनी—अनात्माको उल्लेख माथि भएको छ अतः यहाँ पनि तीनै कुराको उल्लेख हुनु उचित छ। यो पछिको श्लोकमा पनि 'अनात्म'-को उल्लेख छ।

### श्लोक संख्या—४०

४७. गुह्य—नेपालीमा यसको प्रयोग अधिक छ तथा धार्मिक अर्थमा यसले रहस्यमय बुझाउँछ। 'गुप्त' मा त्यो भाव छैन।

४८. 'बुझ्यो'—'बुझिल्यो' भन्दा राम्रो छ।

### श्लोक संख्या—४१

४९. भनि भन्या—हेर्नु २२।
जाइ जान्छ—हेर्नु १७।

### श्लोक संख्या—४३

५०. बुझ्यार—प्रेम बुझ्ने कुरा हो, सुन्ने कुरा होइन।

### श्लोक संख्या—४४

५१. भारि—संस्कृत भारको नेपाली रूप।

### श्लोक संख्या—४५

५२. लिइ गई स्तुती—गएर स्तुति गरे भन्नु बढ्ता युक्तिसङ्गत छ।

५३. भो—भै भन्दा यो सरल छ।

### श्लोक संख्या—४६

५४ जस्ले—यही पाठ उपयुक्त प्रतीत हुन्छ।

### श्लोक संख्या—४८

५५. पुत्री—संस्कृत शब्द।

५६. को अयोध्या—घरैमा भन्दा अयोध्या उपयुक्त छ। मूलमा पृथ्वी छ। कविले त्यसका सट्टा अयोध्या लेखी झन् निश्चयात्मक प्रयोग गरेको छ।

५७. यै बिन्ति तिम्रो—निश्चयात्मक अतः सुन्दर छ।

५८. पनी—अनुप्रास मिल्छ।

### श्लोक संख्या—४९

५९. पृथ्विलोक्—अन्यत्र पनि 'तल' नभनी लोक भनेको छ।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

श्लोक संख्या—५०

६०. भयानन्—प्राचीन रूप।

श्लोक संख्या—५१

६१. उपाई—हेर्नु ८।

श्लोक संख्या—५२

६२. डाक्न—

श्लोक संख्या—५३

६३. ऋष्यशृङ्ग—यसरी लेखे पनि छन्दभङ्ग हुँदैन।

६४. थरिया—र तथा ल को अभेद छ।

श्लोक संख्या—५४

६५. लेउ आज—हेर्नु २६, ३७, ४०।

६६. छप्या......पनी—छप्पा—हिन्दी छिपना—पहाड़तिर यो प्रयोग थियो कि ?

श्लोक संख्या—५५

६७. उसै—बढ़ता उपयुक्त।

श्लोक संख्या—५७

६८. जानिन्......भनी—अधिक उपयुक्त पाठ।

श्लोक संख्या—५८

६९. यों—

७०. छपाइ—हेर्नु ६६।

श्लोक संख्या—६०

७१. हुम्ला—हुँलाको पूर्व रूप हो कि ?

७२. झर्‍या—यसबाट माथिबाट तल झरेको, आएको बोध हुन्छ। हेर्नु श्लोक ५०, ७४।

श्लोक संख्या—६१

७३. यती तहिं गरी—स्थान निर्देश हुन्छ।

७४. बालख जस्ता बनी—अत्यन्त प्रचलित तथा स्वाभाविक यस्तो पाठ अन्यत्र पनि छ।

७५. गई—

श्लोक संख्या—६२

७६. हुनुभयो—छन्दानुरोधले आदरार्थी क्रिया प्रयोग गर्न बाधा पर्दैन भने गर्नामा विशेष हानि छैन।

७७. जो—ता पाठ अर्थयुक्त छैन।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

श्लोक संख्या—६४

७८. अनुसारको—'अनुसारले' अन्वय नमिल्नें पाठ हो।

श्लोक संख्या—६५

७९. कौमार्‌मा—मूल अनुकूल यो पाठ छ।

अथ कालेन ते सर्वे कौमारं प्रतिपेदिरे।
उपनीता वशिष्ठेन सर्वविद्याविशारदः॥

श्लोक संख्या—६६

८०. न त हुन्—यो पाठ राम्रो छ।

८१. यो—रूपलाई प्राधान्य प्रदान गर्छ।

८२. त—यो पाठ अधिक मिठो छ।

श्लोक संख्या—७१

८३. विनति—राजासितका व्यवहारमा यसको वा यसका विकृत रूपको प्रशस्त व्यवहार छ।

८४. दीन्या हो कि नदीउं—यो पाठ सरल छ।

श्लोक संख्या—७२

८५. कुन पाठ गर्नू कसो—बड़ो सुन्दर पाठ छ। 'कुन पाठ को' क्रिया पनि गर्नू हो अर्थात् 'कुन पाठ कसो गर्नू' भन्नाले अन्वय व्याकरण अनुकूल हुन्छ।

८६. ताहीं—ताहाँ भन्दा राम्रो पाठ छ।

श्लोक संख्या—७३

८७. रामलाइ अहिले—बढ़िया पाठ छ।

८८. इ त—अधिक निश्चयात्मक पाठ छ।

श्लोक संख्या—७४

८९. पृथ्विलोक्‌मा—हेर्नु ५९।

९०. अघि तिमी—हेर्नु २६, ३७, ४०, ६५।

श्लोक संख्या—७५

९१. प्रभूका—लीला बहुवचन माने हुन्छ।

श्लोक संख्या—७८

९२. हित् दूइ विद्या दिये—हित गर्ने भन्ने अर्थ हो। मूलमा दुइ विद्या दिएको कुरा छ। ददौ बलां चातिबलां विद्ये द्वे देवनिर्मिते।

९३. कहिलै—यो पाठ कहिले भन्दा अधिक उपयुक्त छ।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

श्लोक संख्या—७८

९४. पोँच्या—यो प्रयोग स्थानीय हुन सक्छ।

९५. ता—यो पाठले व्यक्तिलाई बुझाउँदैन।

श्लोक संख्या—७९

९६. हो त्यो—हेर्नु २६, ३७, ४०, ६५, ९०।

९७. यति—अन्यत्र पनि यस्तो प्रयोग छ।

श्लोक संख्या—८०

९८. सराप्—विशुद्ध नेपाली रूप।

९९. यक्षिकै—सरल पाठ छ।

श्लोक संख्या—८१

१००. श्री—यो पाठ सुन्दर छ।

श्लोक संख्या—८२

१०१. एक्—एक रमणीय काम (नामक) आश्रय भन्ने अन्वय हुन्छ।

१०२. ताहीँ—ताहाँ भन्दा अधिक उपयुक्त पाठ छ।

श्लोक संख्या—८३

१०३. ऋषीहरू—विस्रवित होइन। पहिलो ऋषिको अन्वय विश्वामित्रसित हुन्छ।

श्लोक संख्या—८४

१०४. आयाथ्या—यो पाठ नै अधिक उपयुक्त प्रतीत हुन्छ।

श्लोक संख्या—८५

१०५. सूबाहुकन......तहीँ—हेर्नु २६, ३७, ४०, ६५, ९०, ९६।

१०६. गरिया—स्थानीय प्राचीन प्रयोग जस्तो छ।

श्लोक संख्या—८६

१०७. हुन गै—प्राचीन प्रयोग यस्तै थियो कि?

१०८. प्रभुजिको—यो पाठ बढ़िया छ किनभने रामका यो यात्राको प्रबन्ध विश्वामित्रका हातमा थियो।

१०९. कथाका—बहुवचन।

श्लोक संख्या—८७

११०. धनू—नेपालीमा प्रचलित यो रूप छ।

श्लोक संख्या—८८

१११. किनरिको—अधिक उपयुक्त तथा शुद्ध छ।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

श्लोक संख्या—८९

११२. रित्तो—साधारण विशेषण।

श्लोक संख्या—९०

११३. भक्ती—भक्तको अर्थमा भक्तिको प्रयोग अचेल पनि भएको सुनिन्छ।

श्लोक संख्या—९१

११४. तिन्लाइ देख्या तसै—यो पाठ मूल अनुकूल छ। मूलमा दृष्टा मात्र छ, आश्चर्य हुने कुरा छैन।

श्लोक संख्या—९२

११५. ब्रह्मन्—हे ब्रह्मन !

११६. खुप......दिया—अघि पनि यस्तो प्रयोग भएको छ।

११७. बनुन्—निर्माण हुन् भन्ने अर्थ हो।

श्लोक संख्या—९३

११८. कन् पनी—मूलमा इन्द्र आफ्ना ठाउँमा गएको कुरा छैन।

११९. दीया......भनी—पत्थर हुने स्राप ता तल भनेको छ। अतः यहाँ भन्ने प्रयोजन छैन। भने दोष हुन्छ।

१२०. क्वै नरहुन्—यो पाठ अधिक युक्ति सङ्गत छ।

श्लोक संख्या—९४

१२१. पनी—आग्रह बुझाउने यो प्रयोग राम्रो छ।

श्लोक संख्या—९५

१२२. धरी—धारणा गरी।

श्लोक संख्या—९६

१२३. भै फेर—उपयुक्त पाठ।

१२४. मल्हा—नाउँ चलाउने वृत्ति भएका मानिस।

श्लोक संख्या—९७

१२५. नादै—नेपालीमा यो शब्द प्रयुक्त छ। डुंगा ता सानो नाउँलाई भन्दछन्।

श्लोक संख्या—९८

१२६. धरौं—ह्हामी राखौं।

१२७. येतो......रघुनाथ्—विनयपूर्ण युक्ति।

१२८. मल्हा—हेर्नु १२४।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

श्लोक संख्या—१००

१२९. पौंची—हेर्नु ९४।

१३०. पावै—

१३१. मानू रमानाथ् सरी—विष्णु भन्दा यो पाठ अधिक काव्यात्मक छ।

श्लोक संख्या—१०३

१३२. पत्नि पनी—निश्चित रूपले बढ़िया पाठ।

१३३. बनी—'भै'-का प्रयुक्त।

१३४. ताहाँ—

१३५. महाराज—हे महाराज! यो पाठ मूल अनुकूल छ। अतो दर्शय राजेन्द्र शैव चापमनुत्तमम्।

श्लोक संख्या—१०५

१३६. वाहीं—धनु राखेका ठाउँमा।

श्लोक संख्या—१०६

१३७. धनू—हेर्नु ११०।

१३८. दुइ......भिन्यो—स्वाभाविक तथा सुन्दर वर्णन।

श्लोक संख्या—१०८

१३९. पत्रा तयारि गऱ्या—पत्रा=पत्र।

१४०. यो...पऱ्या—मूलमा हर्षेण महताल्युतः भनेको हुँदा आनन्द सागर भनिएको छ।

श्लोक संख्या—१०९

१४१. गयो—लस्कर जम्मा भएर गयो, पुग्ने काम बाँकी नै छ।

१४२. तृतीय तथा चतुर्थ पादको पाठ प्राचीन प्रतिमा छ। वर्तमान रामायणमा भएका तृतीय तथा चतुर्थ पादको अर्थ पछिका श्लोकसित खाप खाँदैन।

श्लोक संख्या—१११

१४३. त औंर्—

श्लोक संख्या—११२

१४४. सो—यो पाठ उपयुक्त तथा सुन्दर छ।

श्लोक संख्या—११३

१४५. अशुद्ध नाम भएका प्रथम दुइ पाद क्षेपक हुन्। अघि पछिका श्लोकको अर्थ विचार गर्दा तिनको यहाँ आवश्यकता पनि देखिदैन।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

श्लोक संख्या—११४

१४६. सुनाया—अधिक उपयुक्त पाठ।

१४७. जोत्यौं—भूमि जोत्ने नै त्यो यज्ञ हो अत: यो पाठ शुद्ध तथा मूल अनुकूल छ। यज्ञ भूमि विशुद्धयर्थं कर्षतो लाङ्गलेन मे।

श्लोक संख्या—११५

१४८. कि हुन्—

श्लोक संख्या—११६

१४९. धन—हेर्नु ११०।

श्लोक संख्या—११८

१५०. प्रसाद्—अनेर अर्थमा बाधा पर्दैन।

श्लोक संख्या—११९

१५१. यती—

१५२. गरी—

१५३. आनन्द सागर्—

१५४. वस—अश्वानां नियुतं प्रादाद्।

१५५. दिया—

श्लोक संख्या १२०

१५६. तहिं—

श्लोक संख्या—१२१

१५७. बहुतै गराइ सबको—हेर्नु २६, ३७, ४०, ६५, ९०, ९६, १०५।

श्लोक संख्या—१२३

१५८. सब्का—शङ्का निरर्थक छ। भय भए पछि पुगी गयो।

श्लोक संख्या—१२४

१५९. जो जो.....गरी—परशुरामले पृथ्वी निस्क्षत्रिय गरेका कुराको अनुकूल यो पाद छ।

१६०. सबैका—

श्लोक संख्या—१२५

१६१. त—

श्लोक संख्या—१२६

१६२. का—

Vedic Archives Digital Preservation Foundation, Chandigarh

श्लोक संख्या—१२७

१६३. सकृतैनस्......रात्दिन—अत्यन्त स्वाभाविक उचित।

श्लोक संख्या—१२८

१६४. धनू—हेर्नु ११०, १३७।

१६५. भया—लोक बहुवचन माने हुन्छ।

श्लोक संख्या—१२९

१६६. तिन्नै—यही उचित छ।

श्लोक संख्या—१३१

१६७. बालख्खै—हेर्नु ७४।

१६८. वर्यं विई—अन्तिम पादको लिई संग राम्ररी अनुप्रास मिल्छ।

श्लोक संख्या—१३३

१६९. म लिउँला—

श्लोक संख्या—१३४

१७०. तत्व पनी सबै—हेर्नु २६, ३७, ४०, ६५, ९०, ९६, १०५, १५७।

१७१. पनी—

श्लोक संख्या—१३५

१७२. गरी तहाँ—हेर्नु २६, ३७, ४०, ६५, ९०, ९६, १०५, १५७, १७०।

१७३. आनन्द सागर—सप्तमीको चिह्न लोप गरेको विशुद्ध प्रयोग।

श्लोक संख्या—१३७

१७४. पौंच्या—हेर्नु ९४।

श्लोक संख्या—१३८

१७५. आया...अबर—अन्तिम दुइ पाद प्राचीन प्रतिमा छैनन्।

श्लोक संख्या—१३९

१७६. सीतारान्...गया—इ दुइ पाद क्षेपक हुन्। इनको यहाँ केही आवश्यकता छैनन्

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

श्री लक्ष्मी प्रसाद देवकोटा—

# घाँसी

सुन्दर युवक सुतेका रूखमनि थकित शिलाको तकियामा,
यौटा घाँसी धारलगाई बसी रहेको हँसियामा।
बनको मीठो गीत घुसेको यौटाको मृदु सपनामा
यौटाको दिल स्वर्ग उड़ेको निर्मल जीवन, विपनामा ॥

बिउँझी सोध्छन् युवक उज्याला, "के गर्छौं तिमि हे घाँसी!"
बोल्दछ घाँसी, "साँबल केही बटुलिरहेछु', मृदु हाँसी।
"कस्तो साँबल!" "बाटो लाग्नुछ एक अकेला दुनियाँमा
केही छैनन् दिलमा झल्क्यो, हात खियाई हँसियामा
बेचि सङ्गाल्दछु दुइ-तिन पैसा—धारा, पाटी राख्न छ मन।
यहाँ नरोपे कसरी फल्दछ! खेल्नु खिलौना कति दिन?"
चरचर चमचम हँसिया नाच्दछ अड़ि-अड़ि बोल्दछ घाँसी,
छिन छिनलाई रत्न उज्याला तुल्य सँगाली, नमासी—

इश्वरको यो जंगल बिर्ता, घाँस फलेको खेत मलाई,
बालि उठाउँछु तल्सिङलाई भारा तिर्दछु पृथिवीलाई।
रामछाया दुइदिनको यो सच्चा काम गरे छ इनाम॥
बाहुन नानी, यदि मन आयो, भेटि यही भो हरिको नाम!"

चुम्बक लाग्यो, बिजुली झल्क्यो, टोल्हाई ती चकित बसे,
प्रात चलेको मधुर तराना चिड़िया बनका भित्र घुसे।
लयमा बहँदा भाव अनेकन थाले चल्न मनोहर चाल
"अहो!" मसीनो ध्वनिले भन्थ्यो, "यो घाँसीको जीवन ह्वाल!"

Vedic Archives Digital Preservation Foundation, Chandigarh

बिउँझायो अब बिउँझायो अब बनको सुतुवालाइ विचेत
लोचन युगल रसाई आए फुलिफुलि आयो छाति समेत,
थोपा दुइटा गुड़िकन—टप्के शान्त शिलामा अभिराम,
रेखा सुन्दर पर्नगएछन् देखे दुइटा अक्षर राम।

"को हो! को हो!!" कोयलि बोली, अस्ताचलमा रवि धप्के
भावुक दिलका अरुअरु थोपा टपटप सुन्दर टप्के।
बनको रङ्ग बनाई स्याही लेखे सरल प्रभाव पवित्र,
चिड़िया झैं ती गाए सुन्दर बनमा, घरमा, पिंजड़ाभित्र।
अमृत पिए सब भाई डाँड़ा काँड़ा गूँजि उठे,
शीतल धारा, सुखद छहारी धूप र तिर्खा आज मिटे।
गाइरहेछन् आज उतातिर राम र सीता पाउनिर,
घाँसी मल्दछ पाउ कमल झैं नेपाली दुइ गादिनिर।

शुक्रतारा! सुन्दर हाम्रा! नेपाली हे प्रथम ध्वनि!
यस्ता घाँसी युवक भरी हुन् नेपाली यो गगन मनि!
भाषाको त्यो शैशव सुन्दर! तोतेबोली मधुर सुधा!
बालकपनको मृदुल मसीनो, सरल उज्यालो निर्मलता!
तिमिले बोल्यौ, बाहिर भन्दा भित्र मिठास विशेष,
वर्लन फेरी, धेरै दिन भो, प्यासी भो अति देश!
जुन भाषाको जन्मोत्सवको निर्मल सुन्दर यो इतिहास,
अहो, उज्याली पृथिवि नहोलिन्? मधुर नहोला मधुमास?

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

श्री बालकृष्ण सम, काठमाडौं—

# भानुभक्तको शैली

'भिन्नरुचिर्हि लोकः' कुनै विषयलाई पनि प्रत्येक व्यक्ति व्यक्तिगत दृष्टिकोणले हेर्दो रहेछ। 'तत्वं निहितं गुहायाम्' भने जस्तै सत्य वस्तु वा यथार्थ वस्तु एकातिर कुनामा रहन्छ, प्रायः असत्य वस्तु प्रकाशित हुन्छन्, किनभने स्वार्थी मानिस कुनै कुरा लिएर आफ्नो स्वार्थ पटाउन खोज्दछ। भानुभक्तलाई लिऊँ: उनी ठूलो कवि होइनन्, उनी आदिकवि पनि होइनन्, तर उनी जुन कुरामा सर्वश्रेष्ठ छन् त्यस कुरालाई राम्ररी औंल्याइएको छैन भन्ने मलाई लाग्दछ। हामी भानुभक्तको सुवर्ण प्रतिमा ठड्याउन सक्छौं, त्यसको वरिपरि करोड़ौं रुपियाँको पार्क बनाएर अनेक प्रोपग्यान्डा गर्न सक्छौं, तर उनी त्यति ठूला हुन् भन्नालाई परदेशीलाई देखाउनलाई हामीसित के साधन छ? के अध्यात्म रामायणको 'समरि' कसेको पुस्तक रामायण? त्यसमा उनको देन के छ? उनकै समयमा उनीभन्दा धेरै ठूला कवि र विद्वान् नेपालमा थिए, ती कुलचन्द्रभन्दा मूक भएर मरे। अर्को? के भानुभक्तले उही थोत्रो धर्म प्रचार गरे—'शूद्रादी त तपस्वि होइरहनन् ब्राह्मण् सरीका बरू' अनि 'ठूलो नरक नारी नै हुन्' भन्ने अप्रगतिशील कट्टरपन्थी भावना लिएर उनी हाम्रो पूज्य बनेका हुन्? अथवा हामीले नेपाली भाषाका वीर पूजा गर्न पाएनौं भनेर थपना गरिएका मूर्ति हुन्? उनले नेपाली भाषा प्रचार गरे भनूँ भने पनि त्यो जस मोतीराममलाई जान्छ—यी सब कुरा छन्।

तर उनी मेरो दृष्टिमा एकै विषयमा सर्वश्रेष्ठ छन्—'शैली'-मा,—'भाषाशैली'-मा। जब विदेशीहरू मसित भानुभक्तको महत्व सोद्धछन् मैले यही भन्ने गरेको छु—नेपाली भाषामा त्यति मीठो अधिकार आजसम्म कसैको भएन, लेखनाथले संस्कृतको शरण परेर पनि, शम्भुप्रसादले फारसी-को भर परेर पनि भानुभक्तको स्थान लिन सकेनन्। हामी सब लेखनाथीय शैलीका अनुयायीले पण्डितको भाषामा नेपालीलाई ढाल्दै गयौं। देवकोटाले 'शाकुन्तल'-मा भाषा-प्रदर्शिनी गरे, तर 'भानुभक्त ध्रुवतारा झैं अचल रहे'; त्यसैले म भन्छु भानुभक्त केही होइनन्—नेपाली भाषाका परमात्मा हुन्। कवि होमरको विषयमा भनिन्छ त्यो अनुवाद हुन सक्तैन। तैपनि होमर ग्रीकशैली र भाषा छोडेर पनि महान् कवि हुन्। उनका कथा र भाव

Vedic Archives Digital Preservation Foundation, Chandigarh

अनुवाद गरिएकैबाट पनि हामी उनीलाई ठूला भन्न सक्तछौं। तर अनुवाद हुनै असम्भव कुनै एक कवि छन् भने—'भानुभक्त'; उनको अनुवाद गर्नु उनको हत्या गर्नु हो। 'एक् दिन् नारद'-देखि 'सब सहज् पार तर्छन्'-सम्म कविले कसरी लेखे त्यो आश्चर्यको छ। उनी सँधै नयाँ छन्, उनी हाम्रा मन हुन्—तर केवल भाषाशैलीमा। त्यसैले जो नेपाली भाषा बुझ्दैन उसलाई हामी केवल यति भन्न सक्तछौं कि भानु अत्यन्त मीठा छन्, तर तिमीलाई चखाउन सक्तैनौं जहाँसम्म तिमी हाम्रो भाषाको आत्मा संझन सक्तैनौ। हामी कसरी अनुवाद गरेर संझाउन सक्तछौं:

- 'प्रातः काल् भो जसै ता उठिकन ति सबै दश्‌दिशा लागी जान्छन्,
  बन्धूको सङ्ग यस्तो बुझिकन गुणिले दुःख सुख् एक मान्छन्।'
- 'वचन् सुन्दा मुर्छा परिकन उठ्याकी छँदि तहाँ……।'
- 'संसारी म थियाँ बड़ो हुन गयाँ दर्शन् मिलेथ्यो जसै।'
- 'चोरी मारिलिंदा न यश् हुनगयो मासू न खानू भयो।
  धर्मात्मा तिमि पापि झैं हुनगयौ ज्यान् व्यर्थ मेरो गयो॥'
- 'स्वामित् हजुर्को म त दास पो हूँ,
  यो राज्य गर्नाकिन योग्य को हूँ?'
- 'वाण् वज्रचो जब बालिका हृदयमा सर्वाङ्ग वाधा गरी।
  पृथ्वी कम्प गराइ झट् तहि गिरचा बाली त मूर्छा परी॥'
- 'साम्ने भैकन वाण छोड़ि तिमिले माथ्यौं त खुब् यश् थियो,
  सुग्रिव् हो कति साख् मढुँ कति कुसाख् हा दैव क्या मन् दियो।'
- 'मारीदेउ मलाई जान्छु म पनी मेरा पतीका सँगै।'
- 'म नित्यै आत्मा हूँ शरीरहरू हुन् चार घड़िका
  विचार्मा रिक्तैनन् विषय पनि छन् स्वप्न सरिका।
  भनी जान्या जन्ले दृढ़ गरिलिया भक्तिरसले
  न बिर्स्या ई मैले यति कहि दियाँ प्रीतिवशले॥'
- 'हे सीते कसरी मदेखि पर बस्छचौ तिमी छौ कहाँ।'
- 'मारी हाल्न त योग्य छैन तर खुब् चेताइ आऊ यहाँ।'
- 'मर्नू आज निको भनेर तिरमा बानर् बस्या सब् तहीं।'
- 'पृथ्वीमा नमिलिन् सिता न जलमा जान्या छ बाटो कतै।'
- 'जहाँ देह छ तहिं दुःख छ चिन्ह्या साँचा कुरा हुन् भनी।'
- 'तर्छू क्षार समुद्र आज सहजै भन्न्या इरादा धरी।'
- 'फेर् दूई सय कोस् मुखै जब गरिन् अंगुष्ट झैं मै पस्या।'

Vedic Archives Digital Preservation Foundation, Chandigarh

- '........निन्याउरी न त कपाल् कोरचाकि सब् केश् उसै।
  लट्टा मात्र गरचाकि खालि भुमिमा रूँदै बस्याकी यसै।'
- 'भ्रम् हो भनूँ पनि भन्या सब चेत् छ मेरा
  स्वप्ना कसोगरि भनूँ निद छैन मेरा।'
- 'जेन् केन् शरीर महिना दुइ ता म धर्छू
  ताहाँ पछी त तिमि निश्चय जान मर्छू।'
- 'मैमाथी त दया कसो हुन गयो......भयो यो पनी।'
- 'रामलाई वनवास् भरत्कन रजाई माग्छू म चाँड़ो गई।'
- 'तर्कारी भुटुवा बनाउनु असल् मीठा मसाला धरी।'
- 'घर पनि सुनकै छन् गल्लि जो छन् सुनैका।'
- 'अति असल बघैंचा क्यान मैदान् बनायो।'
- 'रिस् फेर्छन् भुसुना भनेर हनुमान् चुप्चाप लागी गया।'
- 'एक चोट् हान् तँ पनी मलाइ म पनी फेर् हान्छु छाती महाँ।'
- बाँचुन्ज्याल् रिस हुन्छ शत्रुसितको ऐल्हे मरी यो गयो।'

**यसरी उद्धृत गर्न लागे त समस्त रामायणै उतार्नुपर्छ। यिनको अनुवादले हामी भानुभक्तलाई कसरी चिन्हाउन सक्छौं। उनीप्रति मेरो व्यक्तिगत विचार छ।**

**[टिप्पणी—यो लेख वास्तवमा श्री बालकृष्ण समले ता: १६ भाद्र (शुक्रबार) २०१८ मा श्री जगत छेत्रीलाई लेख्नुभएका पत्रको केही अंश हुन्। पत्र अत्यन्त चाख लाग्दो भएकोले यो यहाँ राख्ने काम भएको हो।**

**—सम्पादक मण्डली।]**

---

'......भानु जयन्ती दार्जीलिङ्मा धूमधामले मनाएको सुन्दा यहाँका साहित्यिक लज्जित भए, किनभने हामीले मनाएको जयन्तीमा यसपाला धेरै थोरै साहित्यिक जम्मा भए। एउटाको आँखा दुख्यो होला, एउटाको खुट्टा, तर त्यही दिन धेरैको एकैचोटि किन कान दुख्यो आश्चर्य छ। यो त मैले उहिलेदेखि भन्दै आएको हुँ—भानुको प्रतिमा दार्जीलिङ्मा नबनेको भए काठमाडौंमा कुनि...।'

**बालकृष्ण सम,**

**२०१८, भाद्र १६**

**[श्री जगत छेत्रीलाई लेख्नुभएको पत्रबाट उद्धृत —स० म०।]**

Vedic Archives Digital Preservation Foundation, Chandigarh

श्री पारसमणि प्रधान, कालिम्पोंग—

# आदिकवि भानुभक्त आचार्य

मोतीराम भट्टले लेखेको 'कवि भानुभक्त आचार्यको जीवन चरित्र' का दुइ किसिमको संस्करण प्रकाशित रूपमा देखिएका छन। एउटा भारत जीवनले छापेको मौलिक संस्करण र अर्को नेपाली साहित्य सम्मेलन, दार्जीलिङले छापी प्रकाश गरेको श्री सूर्य विक्रम ज्ञवाली सम्पादित संस्करण। मौलिक संस्करण अप्राप्य छ अनि यो सम्पादित संस्करणमा धेरै कुरा थपघट भएका छन्। अरू कुरामा हेरफेर भएको भए तापनि खास जीवनीका बारेमा केही तलमाथि गरिएको छैन। तर कविराज पं० नरनाथ शर्मा आचार्यले लेखी संवत् २०१७ सालमा प्रकाशित गर्नुभएको आदिकवि भानुभक्त आचार्यको 'सच्चा जीवन चरित्र'-मा भने खास जीवनीका बारेमा धेरै कुरा बाझेका छन्। यसरी नमिलेका कुरामा निम्नलिखित विषय विशेष उल्लेखनीय छन्—

(१) भानुभक्तको शिक्षा-दीक्षा, (२) भानुभक्तको पहिलो कविता,
(३) भानुभक्तको नोकरी, (४) भानुभक्त र कुमारीचोक,
(५) भानुभक्तको निधनतिथि र (६) भानुभक्त सम्बन्धी फुटकर कुरा।

## (१) भानुभक्तको शिक्षा—दीक्षा

भानुभक्तका जीवनीकार कवि मोतीराम भट्टले आफ्ना चरित्र नायकको बाल्यकाल र शिक्षा-दीक्षाका बारेमा यस्तो लेखेका छन्—

"धनञ्जयका एकै पुत्र हुनाले बड़ा यत्नसाथ पालन पोषण गरी यी छोरा भानुभक्तलाई जब पढ्न सक्ने उमेरका भए श्रीकृष्णका तालीममा राखिदिए। १८ वर्षको अवस्थामा लेखपढ्मा होशियार भए। विद्यामा रस पाई मग्न भयाका भानुभक्तको चित्तको प्रसन्नताको बयान को गरोस्?"

मोतीरामजीको पुस्तकमा भानुभक्त आचार्यले काशीमा बसी विद्या अध्ययन गरे भन्ने कुरा लेखिएको छैन। श्रीकृष्ण आचार्य भानुभक्तका जीबा अर्थात् बाजे विद्वान् थिए, धुरन्धर पण्डित थिए। यो कुरा भानुभक्तले लेखेका निम्नलिखित श्लोकबाट स्पष्ट हुन्छ—

Vedic Archives Digital Preservation Foundation, Chandigarh

"विद्यामा पनि जो धुरन्धर भई
शिक्षा मलाई दिया !
तिन्को नाति म भानुभक्त भनि हूँ
यो जानि चिन्ही लिया !!"

यसैको आधारमा मोतीरामजीले 'श्रीकृष्णका तालीममा राखिदिए' भनेको बुझिन्छ तर नरनाथजीले 'कवि भानुभक्त काशीमा बसी पढ्थे' भनी स्पष्ट लेखेका छन्। यो बाहेक नरनाथजीले लेखेका निम्नलिखित श्लोकले अरू कुरा स्पष्ट गराउँछ—

"वृद्धा पत्नि लिएर काशिपुरिमा
बस्थ्या मुमुक्षू भई।
जो विद्या कविले पढ्या उहिं पढ्या
जीबाबुका साथ् गई॥
रुद्री, वेद र मध्यकौमुदि पनी
चूरादिगण् तक् यहीं।
वर्षै चौधमहाँ सकेर जिजुसाथ्
काशी गयाका उहीं॥१२॥

अभ्यास् अक्षरको गणीतहरुको
ज्योतिष् समेत्को पनी।
श्रीकृष्णैसँग लेख पढ् अलिअली
शिक्षा मिल्याको पनी॥
पाठ्शाला गइ पढ्दथ्या दिउँसमा
साँझ् ब्यान् जिबाबूसँगै।
हुन्थ्यो काशिमहाँ बखत्बखतमा
विद्वत् सभा ताहिँ गै॥१३॥

सूनी छल्फल शास्त्रहेरु सबको
सिद्धान्त पक्ड़ी लिया।
आत्मज्ञान विषे यसै तरहले
पूरा भयाका थिया॥
स्नान् सन्ध्या शुचिशौच काशिपुरिको
भानू चलाक् बुद्धिमान्।
विद्वान्का सहवासले अति छिटो
संसारको तत्वज्ञान॥१४॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

पाई सत्र-अठार वर्ष तिरमै
विद्वान् पुरा ती थिया।
काशीमै दुइ चार शिलोक कविले
जो भक्तमाला भनी॥
प्रश्नोत्तर् थिनिमध्य केही त रच्या
विद्यार्थि काल्मा पनी॥१५॥

वृद्धा पत्नी लिएर काशीवास गर्न गएका श्रीकृष्ण आचार्य कम बूढ़ा थिएनन्। नाती भानुभक्त बूढ़ा बाजेसित काशीमा बस्थे तर पाठशाला भने धाउँथे औ घरमा विद्वान् बाजेबाट नबुझेका कुरा बुझ्थे। तिनको पढ़ाइ पुरानो पाराको थियो, अचेलको पढ़ाइ जस्तो वैज्ञानिक पद्धतिको थिएन। ती रुद्री पाठ गर्थे, बेद पढ़्थे औ कौमूदीका सूत्र रट्थे। यति काम तिनले आफ्नो पहाड़को घरमै गरेका थिए। चौध बर्षको उमेरमा जीबासँग काशी गएपछि तिनले तर्क-शास्त्र र वेदान्तका पुस्तक अध्ययन गरेको बुझिन्छ। यसो हुँदा ती आत्मज्ञानका जटिल प्रश्नोत्तरमा लहसिए र तिनले भक्तमाला लेखे। यो तिनको मौलिक रचना थियो। यसको संस्कृत अनुवाद पनि तिनले गरे। मनोरञ्जनका निम्ति केही श्लोक तल उद्धृत गरिन्छ—

मूल—

प्रतिज्ञा मैले यो यमसित गर्‍याँ जन्मि अब ता।
सिताराम् भजन्या छू विषयहरुमा छाड़ि ममता॥
प्रतिज्ञा सो बिर्सीकन जन धनै खोजि डुलियो।
सिताराम् भजन्या हो शिव शिव उसै आज भुलियो॥१॥

अनुवाद—

प्रतिज्ञा कालाग्रे जननमपरं प्राप्य च मया।
रमेशं सेविष्ये सकलविषये प्रोह्य ममताम्॥
तदेतां विस्मृत्य द्रविणमृगयायां समटित
मिदानीं तत्सेवा शिव शिव वृथा विस्मृतिमगात्॥१॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

**मूल—**

सिताराम् भज्न्या छु भनिकन प्रतिज्ञा अघि गरी।
गयाको होस् आइस् कति दिन भजिस् भन् अघि सरी॥
यसो भन्नन् स्वामित् मकन यमराज् तेस् बखतमा।
कसो भन्नू मैले भुलिकन रह्याँ यस् बखतमा॥२॥

**अनुवाद—**

प्रतिज्ञा कृत्वा श्रीरमणपदसेवासु च पुरा।
वदा प्यग्रे प्राप्तः कति च दिवसास्त्वत्सफलिता॥
वदा प्यग्रे याहि त्वमिति वचने भास्करभुव।
प्रभो किं भाषिष्ये तव चरणसेवासु विमुखः॥२॥

**मूल—**

गयो बालक्कालको वय पनि उसै बालरसले।
यसै रित्‌ले यौवन् पनि बितिगयो मोहवशले॥
भयो वृद्धावस्था अझ पनि भजींदैन मनले।
कसो गर्नन् स्वामित् मकन यमका दूतहरूले॥३॥

**अनुवाद—**

गता बाल्यावस्था तदनु सखिभिः खेलनरसै।
वर्यस्तारुण्यं तत् तरुणरमणीमोहनरसैः॥
इदानीं वार्द्धक्ये समयमनसा नैव भजनं।
कृतं किं कर्तारो द्युमणिजभटा मां रघुपते* ॥३॥

इत्यादि।

बुढ़ेस्कालमा भानुभक्तका जीबा श्रीकृष्ण आचार्य शंकराचार्यका 'प्रश्नोत्तरी' नित्य पाठ गर्थे। यो पाठको असर नाती भानुभक्तमा नपरी छोड़ेन। फल स्वरूप तिनले यसको नेपाली भाषामा उल्था गरे। यसका केही अंश तल उद्धृत गरिन्छ—

---

* बाँकी श्लोकका निम्ति 'पुराना कवि र कविता' हेर्नोस्।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

## प्रश्नोत्तर–माला

अपार संसार समुद्रमाहाँ ।
डुब्याँ शरण् कुन् छ मलाइ याहाँ ॥
चाँड़ो कृपाले अहिले बताऊ ।
श्रीकृष्णको पाउ छ मुख्य नाऊ ॥१॥

कुन् हो सदा बन्धनमा पर्‍याको ?
जस्ले त यो मन् सुखमा धर्‍याको ॥
मुक्ती भन्याको त पदार्थ कुन् हो ?
वैराग्य भन्नू चिज जान्नु जुन् हो ॥२॥

ठूलो नरक् कुन् छ भनेर मान्नु ?
एही शरीरै छ भनेर जान्नू ॥
कस्तो स्वभाव् स्वर्ग भनेर जान्नू ?
तृष्णा छुट्यो स्वर्ग भनेर मान्नू ॥३॥

कुन् ज्ञान् छ ठूलो भनि लीनु पर्न्या ?
वेदान्तको ज्ञान छ दुःख हर्न्या ॥
कुन् हो सहज् मोक्ष गराइ दीन्या ?
ज्ञान् हो अरूको किन नाम लीन्या ॥४॥

कुन् मूल ढोका छ नरक् कि नारी ?
लान्छे नरक् मोह ठुलो फिँजारी ॥
कुन धर्म्म हो स्वर्ग पुर्‍याइ दीन्या ?
त्यस्तो अहिंसा छ बुझेर लीन्या ॥५॥

× × ×

प्रश्नोत्तरै छ बढ़िया गुरुले भन्याको ।
सत्कर्म जान्नकन आप्तसरी बन्याको ॥
यस्को निरन्तर विचार जतिले त गर्छन् ।
संसार् समुद्र सहजै त तिनै त तर्छन् ॥४७॥

प्रश्नोत्तरै हो मणिरत्नमाला ।
यस्लाइ पैह्रेर जहाँ त जाला ॥
तेस्का यसैले सब पाप टर्ला ।
फेर् अन्त्यमा मुक्त गराइ छोड्ला* ॥४८॥

* बाँकी श्लोकका निम्ति 'पुराना कवि र कविता' हेर्नोस् ।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

"यो प्रश्नोत्तर बुझ्नलाई सजिलो भाषा बनाई दिया" कवि भानुभक्त आचार्यले। हुनत तिनले कुनै दिन कुनै पाठशालामा नेपाली भाषा पढ़ेनन्। तिनताक नेपाली भाषा बनिसकेको थिएन औ अचेल जस्तो नेपाली भाषा पाठशालामा पढ़ाउने चलन थिएन। भानुभक्तले संस्कृत भाषा पढ़ेका थिए तर त्यसमा पनि तिनको पूर्ण दखल भएको थिएन। यो कुरा इतिहास शिरोमणि बाबुराम आचार्यका निम्नलिखित वाक्यले स्पष्ट गराउँछ—

"भानुभक्त वि० सं० १८७१ का आषाढ़मा पैदा भए। धनञ्जय खरदार भई अरू जिल्लामा रहन्थे। यसकारणले बालक भानुभक्त बाजे श्रीकृष्णका साथ रहेका हुनाले बाजेका ऊपर विशेष भक्ति भएको देखिन्छ। बाजेबाट बालककालमा भानुभक्तले शिक्षा पाएका थिए। यिनले आफ्ना बाजेलाई धुरन्धर पण्डित बताएका छन्। ठूला पण्डित होला पनि तर भानुभक्तलाई तिनले व्याकरण साहित्य राम्रो शिक्षा दिन सकेको देखिंदैन। किनभने भानुभक्तको जो हस्तलिपि यिनका जीवन चरित्रका दोस्रो संस्करणमा प्रकाशित भएको छ त्यसमा यिनका हातबाट "राधादामोदर प्रीयताम्" र "सम्वत्" यी अशुद्ध पद लेखिएका छन्। संस्कृत भाषामा लेखपढ़ गर्न नसके पनि साधारण संस्कृत भाषामा लेखेका गद्य-पद्यको अर्थ निकाल्न सक्ने योग्यता यिनमा पैदा भएको थियो। यसो नभए रामायण र प्रश्नोत्तरमालाको अनुवाद गर्न सक्तैनथे।

यी बाह्र वर्षका भइसकेपछि एक ज्योतिषीका घरमा गई ज्योतिष पढ़्न थाले। शायद यस समयमा श्रीकृष्ण परलोक भएका हुनाले व्याकरण साहित्यलाई अधकल्चै छोड़ेर ज्योतिष तर्फ लाग्नुपरेको थियो। यिनले आफ्ना जन्मपत्रिकाको सारांश नेपाली भाषाका साँढ़े तीन पद्यमा लेखी पहिला कविता रचना गरेथे भन्ने अनुश्रुति अधिक प्रसिद्ध छ। यसबाट फलित ज्योतिषमा यिनको ज्ञान राम्रो भएको देखिन्छ। ती पद्यहरू यी हुन्—

श्रि शालीवाहन्‌का समय षडत्रिंशत् भइकन।
अनी आषाढ् मास्‌को दिन पनि उनन्तिस् गइकन॥
घटी एक्‌तिस्‌माहाँ विपटि पनि बत्तिस् परिकन।
नवांशक् कंठीरव् धनुष परि जो बेस लगन॥१॥

Vedic Archives Digital Preservation Foundation, Chandigarh

मिथुन्मा सूर्यै छन् जिवनिलय मीन्का विधु अनी ।
महीसुत् बुध् राहू शशिसदनका ई तिन पनी ॥
गुरू भाग्यस्थान्का रवि भवनमा गैकन बस्या ।
भृगूजी ता आफ्नै सदन वृषमा गैकन पस्या ॥२॥
मकर्मा सौरी छन् ध्वजसहितका स्वगृहि यहाँ ।
बतायाका क्रम्ले ग्रहहरु बस्या कुण्डलि महाँ ॥

यो पद्य बाटाका वर-पीपलका छाहारीमा बसी बाँसका पातमा लेखेर आफ्ना पिता धनञ्जयका हातमा विद्यार्थी भानुभक्तले चढ़ाएका थिए भन्ने अनुश्रुति छ। यिनताक जन्तमा "सिलोक" भन्ने प्रथा चलेको थियो। ब्राह्मणकुमारहरूलाई रुद्रीका साथ शिवमहिम्नस्तोत्र पढ़ाउने चलन पनि थियो। यसै स्तोत्रका शिखरिणी छन्दमा पद्य लेख्न यिनलाई सजिलो हुन्छ। पद्यका आरम्भका 'श्रि' अशुद्ध रूपमा लेखिएको छ। बाँकी भाग भद्दा छ। शुरूको कविता हुनाले यस्तो हुनु स्वाभाविक छ।"

## (२) भानुभक्तको पहिलो कविता

"भानुभक्तले आफ्ना जन्मपत्रिकाको सारांश नेपाली भाषाका साढ़े तीन पद्यमा लेखी पहिला कविता रचना गरेथे" भनी लेखेका छन् इतिहास शिरोमणि बाबुराम आचार्यले। तर मोतीराम भट्टले लेखेका छन् "भानुभक्तलाई कविता गरूँ भन्ने यस्तो लहड चली त्यसै ढुंगामा कोरीकन यी आदि श्लोक बनाए—

भर् जन्म घाँसतिर मन् दिइ धन् कमायो ।
नाम् क्यै रहोस् पछि भनेर कुवा खनायो ॥
घाँसी दरिद्र घरको तर बुद्धि कस्तो ।
मों भानुभक्त धनि भैकन आज यस्तो ॥
मेरा इनार न त सत्तल पाटि क्यै छन् ।
जे धन् र चीजहरु छन् घर भित्र नै छन् ॥
तेस् घाँसिले कसरि आज दिएछ अर्ती ।
धिक्कार हो मकन बस्नु नराखि कीर्ति ॥"

यहाँनिर कुरा बाझेको छ। भट्टजीले भानुभक्तका जीवन चरित्रको मुख्य घटना- घाँसीसँगको संवाद बताएका छन्। सिद्धार्थले गाइनेबाट

Vedic Archives Digital Preservation Foundation, Chandigarh

वीणाको दृष्टान्तद्वारा उपदेश पाई बुद्ध बने झैं भट्टजीको लेखाइअनुसार भानुभक्तले घाँसीबाट कूवाको दृष्टान्तद्वारा उपदेश पाई कवि बनेका थिए। यस उपदेशबाट तुरन्त कवि बनेर यो पहिला कविता बनाए भन्ने भट्टजीको लेखाइ छ।

यस ठाउँमा कलम चलाउँदा भट्टजीले शुरूदेखि नै कल्पनाको दौड़ यसरी चलाएका छन्—'भानुभक्त एकदिन तेसै डुल्दा डुल्दै यौटा नदीका किनारमा पुगेछन्। तहाँ पहाड़को खोंच परेको हुनाले र भानुभक्त पनि घाममा हिंड़ेर तहाँ शीतल ठाउँमा पुगेका हुनाले नदीका किनारामा यौटा ठूलो ढुंगो देखी तेस माथी पल्टेछन्। हिंड्दा साह्रै थकाई लागेको हुनाले, तहाँ मलयाचलको बायु समान मन्द मन्द हावा चलेको हुनाले र मनोहर चराहरूको मधुर बोली सुन्नाले ठूलो आनन्दमा परी भानुभक्तका आँखा लागेछन्।' यी जागा भएपछि घाँसी देखा पर्छ। दिनको दुइ तीन आनाको घाँस बिक्री गरी जीवनवृत्ति चलाएर बचेका धनले कूवा खनाएको बयान गर्छ। आखिरमा काटेको घाँस र खुर्पी बोकेर जान्छ। यसैबाट भानुभक्तलाई ज्ञान हुन्छ।

परन्तु तनहूँमा घाँस काटी पैसा लिएर बेच्ने चलन न अघि थियो न अचेल छ। यो कुराको पहिचान लमजुंगका बासिन्दा पण्डित टुकराज मिश्र, पद्म राज मिश्रहरूले गरेर यस घटनाका उपर शंका प्रकट गरेका छन्! हुनता यिनीहरूलाई यस घटनाका उपर बिलकुल पत्यार होवैन तैपनि भट्टजीको विरुद्ध लेख्न डराएर यिनीहरूले शंका सम्म प्रकट गरेका होलान्। भट्टजीले यो घटनाका विषयमा प्रयोग गरेका शब्दावलीहरूबाट पनि विचार गर्न उचित छ। घाँसीका मुखबाट कूवा र इनार शब्द एउटै अर्थमा प्रयोग गरेका छन्। भानुभक्तले लेखेका भनी माथि लेखिएका पद्यमा पनि यी दुइ शब्द एउटै अर्थमा व्यवहार गराएका छन्। काशीमा जसलाई कूवा भनिन्छ, उसैलाई काठमाडौंमा इनार कहिन्छ। तर लमजुंग तनहूँतिर इनारलाई कूवा भन्दैनन्। साना पनेरालाई कूवा भन्दछन्। यो कूवा दुइ-तीन हातभन्दा गहिरो हुँदैन। यसमा ईंटको व्यवहार पनि हुँदैन। ढुंगाले मात्र बनाएको हुन्छ। यसकारणले घाँसी वा भानुभक्त, कूवा र इनार शब्द एउटै अर्थमा व्यवहार गर्न कदापि सक्तैनथे।

घाँसीको हतियार भट्टजीले खुर्पी बताएका छन्, पक्की घरमा कौसी वा पेटीको घाँस खुर्कने खुर्पी काठमाडौंमा अवश्य हुन्छ। तनहूँमा यो

Vedic Archives Digital Preservation Foundation, Chandigarh

खुर्पी कदापि हुँदैन। उहाँ खुर्पाको चलन छ। रूखका स्याउला काट्दा यसैको व्यवहार हुन्छ। कहिलेकाहीं घाँस काट्दा पनि यो हतियार चलन हुन्छ। तर ज्यादा गरी हँसियाले नै घाँस काटिन्छ। भट्टजीलाई "तनहूँतिर तमाम ग्रन्थको खोज गर्दै घर घर घुमी सारा भानुका भक्त हिंड्थे" श्रीयुक्त पारस मणि प्रधानको कथन छ। तर भट्टजी तनहूँमा गएका भए इनार र कूवामा तथा खुर्पी र खुर्पामा यस्तो भूल कदापि गर्दैनथे।"*

यसै सन्दर्भमा मैले भट्टजीका बारेमा लेखेको कथन लिएर बाबुरामज्यूले जुन आलोचना गरेका छन् त्यसका जवाबमा केही लेखी स्पष्टीकरण दिन आवश्यक छ। मैले भट्टजी तनहुँतिर गएको कुरा भट्टजीकै निम्नलिखित पंक्तिको आधारमा लेखेको थिएँ—

"जाहाँ जे जति पाइयो उ उति ह्वाँ
गै गै सबै सोद्धथ्याँ।
पक्का हाल् कविराजको यसरि मो
एक् एक् गरी जोर्दथ्याँ॥"

जहाँ जे जति पाइएका कुरा उहाँ गई सोधपूछ गरी पक्का गर्ने बानी कवि मोतीराम भट्टको थियो भन्ने संकेत माथिका उक्तिबाट स्पष्ट हुन्छ। मैले मोतीको माला तयार गर्दा खुर्पा र खुर्पीको आवश्यकताको महसूस गरिनँ। यो मेरो भूल हुनसक्छ तर मोतीका मालाको उद्देश्य खुर्पा भिर्ने थिएन नकि इनार वा कूवा खन्नेनै थियो।

## (३) भानुभक्तको नोकरी

"कवि भानुभक्त आचार्यजी स्वस्ति श्रीमद्राजकुमार कुमारात्मज श्री३ कमाण्डर-इन्-चीफ् जनरल कृष्णबहादुर जंग राणाको चाकरी गर्दथे र विक्रमीय सम्बत् १९०७ सालको बैशाख मासमा मदेश 'तराई'-को जागीर पाई गए तर भानुभक्त कवि यही सम्बत् १९०९ मा खोसिए र कागतपत्र बुझाउन भनी नेपाल कुमारीचोकमा आई कागतपत्र आफूले दुइ वर्ष काम गरेको खर्च आम्दानी समेतको स्याहा बुझाउँदा केही बाँकी सरकारिया लागेछ र पाँच महीनासम्म कुमारीचोकमा थुनिएछन्।

* पुराना कवि र कविता, पृष्ठ २२९—३००

Vedic Archives Digital Preservation Foundation, Chandigarh

प्रायः यस संसारमा जहाँ जति प्रसिद्ध कवि हुन्छन् यिनीहरूका जीवन कथामा एक न एक कलंक नलागी रहँदैन। फेरि ईश्वरका सृष्टिमा जो असल हुन्छन् उनीहरूमा पनि एक न एक कलंक लागिरहेकै हुन्छ, जस्तो—चन्द्रमाको कलंक, साक्षात् ईश्वरांश रूपधारी विष्णुका छातीको भृगुलाञ्छन, सदाशिव महादेवको नीलकण्ठ, ब्रह्माको पूजा नहुनु, लक्ष्मीको चंचला हुनु।"

भनी मोतीराम भट्टजीले कवि भानुभक्तको जीवन चरित्रमा लेखेका छन तर कविराज नरनाथ शर्माले आफ्नो पुस्तकमा भानुभक्त आचार्यले नोकरी गरेको कुरा कहीं लेखेका छैनन्। नोकरीनै नगरेपछि सरकारी तहवील मास्ने कुरा आउँदैन। यसर्थ भट्टजीले 'कलंक'-का बारेमा जुन विद्वता छाँटेका छन् सो कविको कपोल कल्पित रचना बुझिन्छ।

वास्तवमा नोकरी गरेका थिए कवि भानुभक्तका पिता खर्दार धनञ्जय आचार्यले। यस बारेमा कविराज नरनाथ आचार्यले आफ्नो पुस्तकमा स्पष्ट लेखिदिएका छन—"यस्तैमा पाल्पा मालमा बाबु धनञ्जयले खर्दारी काम गर्दा सरकारी बाँकी लागेको भनी उस मौकाका ऐन सवाल बमोजिम बाबुलाई लागेको बाँकी छोराहरूले पनि तिर्ने, फर्स्याउन पर्ने हुँदा कुमारीचोकले कविलाई सरकारी बाँकी घेरैमा पक्र्यो।"

"हाँसो गर्ने सरल उदार स्वभावका पण्डित देखेकाले इनचीफले पनि हाँसो जस्तो गरेर जागीर खान मन पर्छ कि? भन्दा कविले जागीरको फल यही त हो सरकार! छोरा, नातीले समेत थुनिनुपर्ने, छुट्न मात्र पाएको पनि ठूलो सौभाग्य सम्झनुपर्ने भनी हाँसे।"

## (४) भानुभक्त र कुमारीचोक

कवि भानुभक्त 'पाँच महीनासम्म कुमारीचोकमा थुनिएछन्' भनी मोतीराम भट्टले आफ्नो पुस्तकमा लेखेका छन्। 'आखिर कुमारीचोकले कविलाई नथुनी नहुने ऐन सवाल छ भनी खर्दार धनञ्जयलाई लागेको बाँकीमा थुन्यो' भनी कविराज नरनाथ आचार्यले लेखेका छन्।

यो 'थुन्यो' वा 'थुनिएछन्' भन्ने प्रसंग लिएर नेपाली विद्वान्-हरूले निकै विद्वता छाँटेका छन्। निकट भविष्यमा अरू छाँट्लान् वा छाँट्नेछन्, हुन पनि यस्ता विवादग्रस्त कुराका बारेमा जति बढ्ता मन्थन गर्न सक्यो उति बढ्ता नौनी निस्कन सक्छ।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

यस बारेमा स्वर्गीय रूपनारायण सिंहले लेखे—

"कुमारीचोकका खोरमा एउटा मध्यवयस्क सुपुरुष थुनिएका छन्। कोठाका दलिन ती एकाग्रपूर्वक निरीक्षण गरिरहेका छन्। दृष्टिमा अपूर्व ज्योति छ। दाहिने हातले ती आफ्नो चिउँड़ो बेला बेलामा मुसार्दैछन्।

खोरमा ती थुनिएका छन्, तर खोरका प्राचीर नाघेर, त्यसको धूलो मैलोदेखि अनेक टाढ़ामा छ तिनको मन औ प्राण।

खोरमा ता तिनको शरीर मात्र थियो, मन कविको आफ्नै थियो, स्वतन्त्र थियो, मुक्त थियो। यही कारण थुनुवा कविको हास्यरसप्रियता कुमारीचोकका कालकोठरीमा पनि उस्तै रह्यो जस्तो तनहूँका सुरम्य अति वेस पहाड़को देशमा कविले हाँस्न बिर्सेनन्, हँसाउन छोड़ेनन्। लाम्खुट्टे-को गीत औ उपियाँको नाचले असल कवि, सुकवि औ महाकविलाई मात्रै आमोद गराउँछ।

कवि भानुभक्त कल्पनामा विभोर रहन्थे, सपना देख्थे। संसार एकचोटि तिनले हराए। संसारदेखि पृथक् खोरमा तिनलाई बस्नुपर्‍यो।

तर तिनले के गरे? संसारदेखि पृथक् खोरमा बसेर तिनले नेपाली साहित्य तथा जातिलाई हल्लाइदिए—रचना गरे।"

यस्तो थियो उपन्यासकार रूपनारायणजीको कल्पना, यसरी उड़ेको थियो तिनको भावना कल्पनाकाशमा। कविलाई वा भावुक उपन्यासकार-लाई लहराको एक छेउ पक्रन दिनुहोस्, कसरी अँठ्याएर पहरा तानिदिन्छन् र गुन्जायमान गराइदिन्छन्। वास्तवमा कवि भानुभक्त कुनै खोरमा थुनिएकै थिएनन्। यस सम्बन्धमा इतिहासकार शिरोमणि बाबुराम आचार्यज्यू-को 'भानुभक्त भ्यालखानामा?' शीर्षक लेख पठनीय छ। उनको निष्कर्ष "यस हिसाबले भानुभक्त आचार्य कुमारीचोकमा निगरानीमा रहेका थिए, भ्यालखानामा कदापि परेका थिएनन् भन्न सकिन्छ" सत्य ठहर्छ।

## (५) भानुभक्तको निधन-तिथि

कवि भानुभक्तको मृत्यु तिथि मोतीराम भट्टले कहीं उल्लेख गरेका छैनन्, जीवन चरित्रको शेष प्रकरणमा "आज भानुभक्त स्वर्गवासी भयाका २२ वर्ष भयो" भनी लेखेका छन्। सम्भवतः उनले 'आज' भनेका मिति

Vedic Archives Digital Preservation Foundation, Chandigarh

संवत् १९४८ विक्रमी भाद्रपद कृष्ण ८ हो, जुन दिन उनले भानुभक्तको जीवन चरित्रको 'विज्ञप्तिपत्रम्' लेखेका थिए। यस हिसाबले १९४८—२२ बराबर १९२६ हुन्छ।

कविराज नरनाथ आचार्य भानुभक्त आचार्यको सच्चा जीवन चरित्रको पृष्ठ ३७ मा लेख्छन् "भानुभक्तको देहान्त भयो १९२५ सालमा।" फेरि पृष्ठ २०३ मा यस्तो लेखिएको छ—

"सोह्र श्राद्धमा पिता धनञ्जयको श्राद्ध गरेका दिन रात्रिदेखि ज्वरो बढ्यो, औषधि पार्दा शान्त भएन। कवि गलित हुँदै जानुभयो। त्यही व्यथाबाट देहान्त हुने शंका सबैलाई भयो, कृष्णा जान दशौंको अवस्था हुनाले मदतको चाँजो मिलेन। आखिर आश्विन शुक्ल पञ्चमीका दिन बिहान संसारका सकल बन्धन तोड़ी देह छोड़ी भानुभक्त कवि परमधाम भई राममा मिले।"

## (६) भानुभक्त सम्बन्धी फुटकर कुरा

भानुभक्त 'आदिकवि' हुन् कि होइनन् भन्ने कुरामा समेत मतभेद भएको सुनिन्छ। कोही 'हुन्' का पक्षमा छन् औ कोही 'होइनन्' भन्ने-मा छन्। यसरी मत बाझेको छ।

उसैगरी भानुभक्तको जन्मजयन्ती कोही केही मनाउँछन् कोही केही। यसो गर्नु उचित देखिंदैन औ होइन पनि।

आदिकवि भानुभक्त आचार्य नेपालीहरूका राष्ट्रिय कवि हुन्, यसमा दुइ मत छैन। उसैगरी उनको जन्मजयन्तीमा, जन्म र मरणको तिथि औ उनका कृति र कीर्तिमा नेपालीहरूका बीचमा दुइ मत हुनु वा मतभेद हुनु अनुचित मात्र होइन तर हास्यस्पद पनि हो। यस कुरामा नेपाली भाषा-भाषीले विशेष गरी जातीय संस्थाहरूले होश राख्नुपर्दछ।

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

श्री कमल पराजुली, इलाम—

# भानुभक्तप्रति श्रद्धाञ्जलि

रामैमा भक्ति लाई तन मन सब दी श्लोक राम्रो रचेर ।
नेपाली शैलि हाली सुमधुर लयमा पढ्न पाऊन् भनेर ॥१॥
लेख्यौ त्यो काव्य मीठो पद पद मधुले, पूर्ण पारी भरेर ।
"नेपाली वीर जाती, पथसुगम तिरै लम्किऊन् लौ उठेर ॥२॥
खोलून् आँखा पढून् यो, सुमधुर लयमा रामगीता बुझेर ।
तर्नै छन् पार सारा भव जल सहजै, निश्चयै जान हेर" ॥३॥
भन्ने यस्तो उदायो मन बिच कविमा प्रेरणा उठ्न आयो ।
लेखे रामायणै त्यो, अमर रस छरी प्रेरणा फुल्न पायो ॥४॥
होशै पाई तिमीले अलि अलि गरदै सात काण्डै बनायौ ।
रामैको नाम गाई अमर पनि भयौ राममा मिल्न पायौ ॥५॥
धन्ये ! हे वीर आत्मा तिमिकन सबले पूज्दछन् भक्ति मानी ।
तिम्रै ठूलो दयाको रसमधुर पिई पढ्दछौं काव्य हामी ॥६॥
नेपाली दाजुभाई सकल जन अहा ! पढ्दछन् राम-लीला ।
छैनन् कोही नपढ्ने घरघर रसिला भानुका ग्रन्थ-माला ॥७॥
नेपाली दाजुभाई सुमधुर लयमा पढ्दछन् स्वर तानी ।
नेपाली आदि हाम्रा कवि भनि तिमीध्यैं पूज्दछौं गर्व मानी ॥८॥
तिम्रो जन्म दिन् हो सकल जन यहाँ छन् खचाखच् बसेका ।
श्रद्धाले पुष्पमाला अरपण तिमिमा गर्नलाई कुरेका ॥९॥
फोटो शालीक तिम्रो सजिकन बहुतै हेर्न लायक् बनाए ।
श्रद्धाले भक्ति गर्दै तिमि उपर कवि ! लोकले भक्ति लाए ॥१०॥
श्रद्धाले गान गर्छन् सरल हृदयको प्रेम उद्गार पोख्छन् ।
सारा माला र लावा अबिर फुल छरी भानुको भक्ति गर्छन् ॥११॥
धन्ये ! हे स्वर्गवासी कविवर गुरुजी हेर यो दृश्य आई ।
नेपाली दाजुभाई मिलिमिलि कसरी भक्ति गर्छन् रमाई ॥१२॥

[ 'बिमालो' हाँगो ७ बाट । ]

Vedic Archives Digital Preservation Foundation, Chandigarh

श्री जगत छेत्री, दार्जीलिङ—

# नेपाली भाषा र भानुभक्त

भानुभक्त आचार्यको नाम आउन साथ पृथ्वीनारायण शाहको नाम पनि आइहाल्छ। गोरखाको राजा पृथ्वीनारायण शाहले नेपाल खाल्डो जिते। उनको अधिकांश जीवन संग्राम गरेर बित्यो। नेपाल खाल्डोका नेबारी राज्यहरू जितेर अझ पूर्वका किरात र लिम्बुवानसम्म जिती आफ्नो राज्यको सिमाना दार्जीलिङसम्म बढ़ाए। राज्य विकाशको साथ साथै जातिको पनि विकाश भयो। गोरखाली जातिसँग नेबारी र किराती मिलन आए। "गोरखालीसँग बहादुरी थियो, नेवारसँग कला त किरातीसँग प्राचीन गौरब।" यी तीनको संगमले नै एउटा नयाँ जातिले बिकाश पायो, जो नेपाली नामले प्रचलित भयो।

गोरखाली, किराती र नेवारीको सम्मिश्रण भएपछि सबैले बोल्न र बुझ्न सक्ने एउटा नयाँ भाषा र साहित्य चाहियो। नेवारले नेबारी-मात्र बोलेर संकुचित बन्नु नपर्ने औ किरातीले आफ्ना आफ्नै भाषा बोलेर अलग रहनु नपर्ने एउटा भाषा चाहियो। त्यो कमी नेपाली भाषाले पूर्त्ति गरिदियो।

पृथ्वीनारायणको विशाल नेपालको कल्पना भानु बिना अधुरै रहने थियो। जातिको विकाशको निम्ति वीरता मात्र भएर हुँदैन, न कौशल र राज्य भएरै मात्र हुन्छ। पृथक् साहित्य, भाषा र संस्कृतिको गौरवले नै पृथक् जातिको गौरबको पृष्ठभूमि तयार गर्छ। भानुले पृथ्वीनारायणको त्यो नयाँ नेपाल र त्यहाँका नेपालीहरूलाई भाषा दिए, विशिष्ट साहित्य दिए औ एउटा पृथक् संस्कृतिको जगेरा गरिदिए। फलतः पृथ्वीनारायणको सपना बिपनामा परिणत भयो। आज त्यही गौरबले हामी आफ्नो शिर उच्च उठाउँछौं औ आफ्नो जाति र भाषाको निम्ति संग्राम गर्छौं औ बलि हुन सम्म तम्सन्छौं।

हुन ता भानुले पृथ्वीनारायणका वीर सैनिकहरूलाई भाषा दिएर भावुक बनाई शिथिल तुल्याए भन्ने आरोप पनि लगाइन्छ। त्यसो त महान् अशोकको महत्तामा पनि यस्तै आरोप लगाइएको छ। तर यहाँ ता पृथ्वीनारायणको अस्त्र-शस्त्रभन्दा भानुको कलम धेरै बलियो र तेजिलो प्रमाणित बनेको छ।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

हाल आदिकवि भानुभक्त आचार्य सम्बन्धी अनेक खोजी भइरहेछ। यस्तो खोजी र जाँच हुनु असल हो। तर यी सबको उद्देश्य कविजीको अनादर हुनु ता हुँदैन। कुत्सित भावना लिएर पक्षपातपूर्ण तर्क गर्नाले हाम्रो एकता भङ्ग होला। जातिको एउटै चम्किलो हीरालाई बोतलको टुक्रा बनाउन कदापि असल जँच्दैन। हाम्रा छिमेकका अरू जातिहरूबाट हामीले धेरै कुरा सिक्नुछ। उनीहरू स्वजाति र भाषाको निम्ति कसरी हाँसी हाँसी फाँसीको तख्तामा चढ्न तयार हुन्छन्—त्यो हामीले बुझ्नुपरेको छ। अब ता हाम्रो सतत प्रयासले हाम्रो पुरानो, धुलिएको बस्तुलाई टलकाउनुपर्नेछ। व्यक्तिगत वैमनस्यताले कुनै महापुरुषको महानतामा कलङ्क लाउनु मूर्खता हो।

× × ×

साँच्चै नै एकपल्ट ठेस लागेपछि मात्र मानिसको आँखा खुल्छ। बीस वर्षको उमेर हुँदा एकदिन जङ्गलमा घाँसीसित भएको वार्तालापपछि भानुले जुन ठेस पाए, त्यसले उसको चेतना ढकढकायो। तब नै कविजी अघि बढ़े औ केही गरेर मरे। यद्यपि भानुको घाँसीसँगको भेट र वार्तालापमा बाबुराम आचार्यज्यू र बालचन्द्र शर्माज्यूले शङ्का प्रकट गर्नुभएका छन्। भानुभक्तले कहिल्यै 'म' लाई 'मो' नलेख्ने हुनाले औ मोतीराम भट्टको चाहिं 'म' को सट्टा सँधै 'मो' हुने हुनाले औ भानुको प्रथम कविता—"भर्जन्म घाँस-तिर मन् दिइ......" इत्यादि मा 'मो' को प्रयोग भएकोले भानुको भक्त मोतीले आफ्नो जातीय कविको प्रशंसा गर्नाको निम्ति, त्यो आफैले लेखेर भानुको नाम दिएका हुन्। उहाँहरूका यो विचार तर्कपूर्ण छ। फेरि संसारमा प्रायः सबै ठूलो घटना सानैबाट शुरू भएकोले यहाँ पनि त्यस उक्तिकै प्रयोग भएको मात्र हो। न्यूटनले आइफल खसेको देख्नु, फ्रेंक्लिन-लाई चङ्गा उड़ाउँदा 'कारेन्ट' आउनु, जेम्सवाटले कितलीको ढकनी वाफले उचालिएको देख्नु, तुलसीलाई स्वास्नीले बहिष्कार गर्नु औ वाल्मीकिलाई क्रौञ्चको भालेको वियोगमा विचलित पार्नु—यी सब घटना झैं भानुको पनि घाँसीसँग भेट हुनु त्यस्तै एउटा तुक्का जोड़िनुमात्र हो। यी सबै तुक्का मात्र हुन्; कारण सिध भने कुरो स्पष्ट हुँदैन, बुझ्न गाह्रो पर्छ इत्यादि विचार उहाँहरूले प्रकट गर्नुभएका छन्। तर यी खोजमा सत्यता होस् वा नहोस्, हाम्रो निम्ति घाँसी र भानुको सम्बन्ध अक्षुण्ण छ। फेरि त्यस उक्तिले हामीलाई कुनै हानि पनि गरेको छैन। तब त्यस कुरोलाई मान्नमा के को खति?

× × ×

Vedic Archives Digital Preservation Foundation, Chandigarh

वास्तवमा कवि र लेखक मात्रै भएर पनि साहित्यलाई केही नाफा छैन; चाहिन्छ त उच्चकोटिको साहित्य नै। भानु उदय हुनुभन्दा अघि नेपाली जगत्‌मा कविहरू नभएका होइनन्। इन्दिरस, विद्यारण्यकेसरी, वसन्त शर्मा, यदुनाथ पोखर्‍याल, गुमानी, वीरशाली पन्त, परमानन्द आदि कविहरू भानुभन्दा अघि नै देखा परेका हुन्। तर यी कविहरूले नेपाली जातिको एकता र भाषाको एकीकरणमा त्यत्ति महत्वपूर्ण काम गर्न सकेनन्। सबै पद्य नै कविता हुँदैन। उनीहरूले लेखेका पद्यलाई कविता भन्न पनि सकिँदैनथ्यो। त्यसमा पनि घेरजसो हिन्दी र संस्कृतकै सम्मिश्रण भएको हुन्थ्यो। उनीहरूबाट विशेष मौलिक साहित्य उत्पन्न हुन सकेन। अनुवाद नै भए तापनि उच्च कोटिको भएर त्यहाँ आफ्नोपन झल्केको भए, त्यसलाई मौलिक नै गन्न सकिन्थ्यो। तर उनीहरूको ता अनुवाद पनि अप्ठेरो, नसुहाउँदो वा जस्ताको तस्तै हुन्थ्यो। यसैले यी कविहरू नै भए तापनि उनीहरूलाई आदिकवि भन्न सकिँदैन। यी कविहरू पछि रघुनाथ आएका हुन्। तर कत्ति समालोचकहरू रघुनाथलाई भानुभक्त भन्दा कान्छा सम्झन्छन्। त्यसो भए ता रघुनाथलाई आदिकवि मान्नुपर्छ भन्ने तर्कै परेन। यदि रघुनाथ नै जेठो भए तापनि उसको कविताले नेपालीत्व झल्काएको छैन, जाति र भाषामा एकता ल्याएको छैन। विभिन्न जात र संस्थामा विभाजित नेपाली जातिलाई एकताको ध्वनि सुनाउने भानुभक्त नै हुन्। नेपालीत्वको प्रदर्शन गर्ने यिनी नै प्रथम कवि भएकोले भानुभक्तलाई आदिकवि मान्नु सर्वमान्य र तर्कपूर्ण जँचिन्छ।

भानुभक्तको भाषाको सम्बन्धमा स्व० हृदयचन्द्रसिंह प्रधानज्यू पनि लेख्नुहुन्छ,—"भानुभक्तको भाषा, शैली, छन्द आदि नेपालीपनले पूर्ण भएर पर्याप्त मात्रामा परिमार्जित छ। छन्दमा लालित्य चढेर भाव सरल भाषा ज्यादै माझिएको हुनाले उनका रचनामा खूबै मोहक शक्ति छ र मिठास भरेको उनको कृति मानिसहरू गाई-गाई हिँड्दछन्।" (भानुभक्त—एक समीक्षा)

यद्यपि भानुभक्तले अनेक अरू कृतिहरू छाड़िराखेका छन्, तापनि रामायणले नै भानुलाई आदिकवि बनायो। भानुको रामायण पनि साँच्चै उच्चकोटिको छ। धार्मिक पुस्तक मात्रै भएर यो उच्च गनिएको होइन। तर रामायणले नेपाली भाषा, जाति र साहित्यलाई एकता दियो, निरक्षर बीच अक्षर ज्ञानको प्रचार गर्‍यो, राष्ट्रीय भावना जगायो, जागृति दियो, धार्मिक झुकाव दियो र पवित्रता दियो। यसरी जातीय उत्थानमा

Vedic Archives Digital Preservation Foundation, Chandigarh

रामायणले महत्वपूर्ण कार्य गरेको छ। भानुको रामायण अनुवाद मात्रै भए तापनि त्यो भानुको आफ्नो ढङ्गको छ, त्यहाँ घरिघरि मौलिक भावना दगुरेको देखिन्छ र भानुको राम नेपाली राम र सीता गुन्यू-चोलो लगाएकी नै हाम्रो आँखा अगाड़ि आउँछ। यसैले कविजीले रामायणलाई "नेपाली महाकाव्य"—बनाइदिए।

नेपाली साहित्य सम्मेलन, दार्जीलिङद्वारा प्रकाशित भानुभक्तको रामायणको प्रस्तावनामा के० एम० मुन्शीजी पनि लेख्नुहुन्छ—"संस्कृतबाट अनुवाद गरेको भए तापनि यो ग्रन्थ पाठ गर्दा मौलिक ग्रन्थ पढ़े जस्तो अनुभव हुन्छ भन्ने मानिसको भनाइ छ। मूल रामायणको घटना तथा विषय-व्यवस्थाको यो अनुवादमा अनुसरण गरिएको छ तथा रामको चरित्रमा तथा रामायणका अरू घटनाको वर्णनमा आदि मौतिक तत्वको पनि रक्षा गरिएको छ। यसमा लामा स्तुतिहरू प्रायः छोड़िएका छन् औ कथाहरू छोट्याइएका छन्। ठाउँ ठाउँमा नेपाली ढाँचाको समावेश गरी वा केही कुरा आफूले थपी कविले यसलाई स्थानीय मानिसलाई अधिक रूचिकर तुल्याउने चेष्टा गरेका छन् इत्यादि।"

भानुले कत्ति परिश्रम गरी सम्हालेको त्यो साहित्यिक बीज बढ़दै गयो। त्यसलाई स्याहार्ने यथेष्ट मालीहरू निस्के। फलतः आज हाम्रो नेपाली साहित्यले बिश्व-साहित्यमा एक स्थान ओगटेको पाउँछौं।

साहित्य जातिको अमूल्य धन हो। यो प्रत्येक जातिको गौरव हो। यही भाषा र साहित्यलाई उच्च उठाउन महान् साहित्यिकहरू जीवन-भर प्रचेष्टा गर्छन्। स्वसाहित्यलाई अघि बढ़ाउनु नै प्रत्येक साहित्यप्रेमीको कर्त्तव्य हो। यही साहित्यलाई जातिको गौरव सम्झी यसको विकाश गराउने प्रयत्नमा जातिको प्रत्येक मानिस अग्रसर हुनुपर्छ।

भानुभक्तको जन्म सम्वत् १८६६ भनी कत्तिले भने तापनि उनको जन्मकुण्डली अनुसार १८७१ आषाढ़ २९ गते (कृष्ण अष्टमी) नै बिश्वसनीय मानिएको छ। जति जति समय बित्दै जाँदैछ, भानु उत्ति उत्ति अमिट हुँदै जाँदैछन्। भानुले रामायण मात्र लेखेनन्, अरू पनि अनेक सरल र सरस कृतिहरू छाड़ेका छन्। आज पनि मानिसहरू यी रचनाहरू मुग्ध भई पढ़छन्, सुन्छन्। भानुभन्दा अघि शिशु अवस्थामा भएको नेपाली भाषालाई भानुले स्याहार-सुसार गरी वयस्क नारी बनाए। यी

Vedic Archives Digital Preservation Foundation, Chandigarh

सम्झेर न कविप्रति हाम्रो शिर श्रद्धाले निहुरन्छ र हामी उनलाई कृतज्ञता प्रकट नगरी सक्तैनौं।

भानुभक्तमा अद्भूत काव्य-शक्ति थियो। उनी जहाँ पनि जत्ति बेला पनि जस्तो कविता पनि लेख्न सक्थे। मित्र तारापतिको घरमा एक रात बास बस्नुपर्दा, त्यहाँ सासू-बुहारीको दन्तबझान देखी रातभरीमा भानुभक्तले बधुशिक्षा लेखे (वि० सं० १९१९)। तिनको कवितामा देश-प्रेम र जाति-प्रेमको पूर्ण झलक देखिन्छ। करुणरसमा कविजी सिद्धहस्त नै थिए; शृंगार-रसमा पनि कविजी सफल थिए। बालाजीको दर्शनपछि लेखिएको कविजीको निम्नलिखित कविता पढ्दा हामी उनको प्रतिभामा मक्ख पर्छौं। यही कविता लिएर स्व० प्रधानज्यूले भानुमाथि एउटा शङ्का प्रकट गरेका छन् (भानुभक्त—एक समीक्षा)—

"यहाँ बसेर कविता यदि गर्न पाऊँ।
यसूदेखि सोख अरू थोक म के चिताऊँ॥
यसमाथि झन् असल सुन्दरि एक नचाऊँ।
खैंचेर इन्द्रकन स्वर्ग यहीं बनाऊँ॥"

सुन्दरी नचाउन चाहने भानुभक्तमा उन्माद—वासनाको गन्ध पाइन्छ। यसैले तरुणी बुहारी भएको घरमा गजाधर सोतीकी घरबूढीले भानुलाई बास नदिएको होला। स्व० प्रधानज्यूको यो शङ्का विचारनीय छ। तर पनि यो सत्य होस् वा असत्य, त्यसले हाम्रो कविजीमाथिको श्रद्धामा किञ्चित् धक्का पर्दैन। वास्तवमा महापुरुषहरूमा यस्तो आरोप लाग्दा उनीहरूको महानता झन् स्पष्ट हुन्छ। ब्रह्मचारी कृष्णलाई गोपीहरू भुलयाउने आरोप लागेको छ। गाँधीजी पनि आश्रमका नारीहरूको काँध समाई घुम्न निस्कँदा कत्तिले उहाँलाई लम्पट सम्म भने। तर यी सबले केही हुने होइन। यस उसले हाम्रा सोझा भानुमाथि पनि यस्तै शङ्का प्रकट हुनु अस्वाभाविक होइन। यद्यपि प्रधानजीले भानुलाई नीच तुल्याउन चाहेको होइनन तर पनि यी सब चर्चाले साधारण मानिसहरूका कुप्रभाव नपारी त नछोड्ला! यसैले प्रधानजीको तर्क सीमित राखेकै असल होला।

भानुको तीव्र बुद्धि थियो। यसैले १८ वर्षको उमेरमै उनले लेखापढ़ी समाप्त गरे। भानुभक्त रसिक कवि पनि थिए। त्यसको कैयौं

Vedic Archives Digital Preservation Foundation, Chandigarh

उदाहरणहरू छन्। १६२० विक्रममा एउटा सज्जनबाट बन्दूक खुस्काएको कुरोले कविजीको रसिकता, विद्वता र चाटुकारिताको प्रमाण गर्छ। फेरि एकदिन कविजी तनहूँकै एक ब्राह्मणको घरमा गएका रहेछन्। त्यहाँ कविजीलाई मकै भुटेर ल्याइदिएछन्। स्वादे जिब्रो भएका कविजीलाई मकै मात्र त्यस्तो थाममा बसेर खान खस्रो लागेर चलाकीसाथ निम्न-लिखित कविता तत्कालै तयार गरेछन्—

असल् मुग्रे केरा कि त महि हवस् वेस अमिलो।
कि ता सेता मूला कि त बरु हवस् साग उसको॥
असल् हुन्थ्यो धुप्मा नतर कसरी खानु यसरी?
भुटी ल्यायौ थाल्मा मकइ तिमिले क्यान यसरी?

कविजीको जीवनमा यस्ता रसिकता कति भयो होला। उक्त कविताले कविजीको विद्वता र आशुकविमा हुनुपर्ने प्रतिभाको परिचय गराउँछ।

भानुको समयमा नेपाली बोलीलाई लौकिक बोली सम्झी तिरष्कार गरिएको ता प्रत्यक्ष प्रमाणहरू छन्। यसैले नै पण्डितहरू संस्कृत नै रुचाएर संस्कृतमै बरू कविता कोर्थे। यस्तो समयमा ब्राह्मणकुलमा जन्मेर पनि लौकिक बोलीलाई उच्चता दिनु औ त्यही बोलीमा कविता लेख्नु कविजीको कत्ति ठूलो त्याग र आँट! यसैले भानुलाई क्रान्तिकारी भानु भक्त नसुहाउने होइन। उनी बागी थिए। त्यस समयको संकुचित जातीय र धार्मिक परिधिलाई नाघेर बागी बनी उनी घेरै अघि बढ़े औ अरूलाई पनि बढ़ाए। उनी भन्थे—"देववाणी संस्कृत नै रहोस् तर जनवाणी नेपाली भए के बिग्रला?" नेपाली भाषाप्रति उनको प्रेमको यो ज्वलन्त उदाहरण हो।

× × ×

कार्लमार्क्स एन्जेल्स (Engels) बिना कदापि कार्लमार्क्स बन्न सक्ने थिएनन्। यसैले कार्लमार्क्सको सफलता र महान्ताको श्रेय हामी एन्जेल्सलाई दिन्छौं। त्यसरी कवि मोतीराम भट्ट बिना भानुभक्त अस्पष्ट र धमिलो नै रहन्थे। हुन सक्छ हामी उनको विषयमा केही जान्न सक्ने

Vedic Archives Digital Preservation Foundation, Chandigarh

न थिएनौं। यसैले कालमार्क्सको एन्जेल्स झैं भानुको श्रेष्ठताको श्रेय पनि हामी मोतीराम भट्टजीलाई दिन्छौं। साँच्चै भट्टजीको खोज सहरानीय छ। उनले हाम्रा हीरा खोजिनिकाले, सकभर टल्काउने कोशिश गरे। यसैले भानुको चर्चा जहाँ पनि हुन्छ, त्यहाँ मोतीको चर्चा नभए त्यो अधुरै रहन्छ।

वि० १९२५ मा कविजी नेपालबाट तनहूँ फर्के। कालज्वरले उनी गलित थिए। तर पनि मृत्यु-शैय्यामा त्राणहीन उनले पुत्र रमानाथलाई 'रामगीता' सार्न लगाए। यसैसाल ५४ वर्षको उमेरमा हाम्रा भानु एउटा अमिट रङ्ग छाड़ी अस्ताए। अस्ताएर पनि आज पर्यन्त यो संसार रञ्जित नै राखेका छन्, यो सदा यस्त रहनेछ, अझ चम्किलो बनेर।

"त्यो कालो तमको विनाश-पटुता, त्यो जागृति-प्रेरणा
त्यो प्रत्येक पदार्थ-विम्बित घना आलोक वा रञ्जना।
त्यो कर्तव्य-पथप्रदर्शन-कला जो जो थियो भानुमा
त्यो अद्यापि छँदैछ यो चहकिलो शैलेन्द्रको सानुमा॥"

—पं० लेखनाथ।

['दियालो' हाँगो ७ बाट।]

---

"स्व० भानुभक्त
नेपाल तथा नेपालीहरूका मात्र कवि होइनन्
तर
भारत तथा भारतीका पनि कवि हुन्।"

—डा० कैलासनाथ काटजू।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

श्री डिल्लीराम तिमसिना, दार्जीलिङ—

# भानुभक्तका छन्दको प्रभाव

संसारको सर्वप्रथम साहित्य वैदिक साहित्य हो र ऋग्वेद विश्वको प्राचीनतम ग्रन्थ हो जसका अनेक ऋचाहरू विभिन्न छन्दमा लेखिएका छन—यो कुरो बुझकहरूले मानिलिएको छ। भारतीय काव्यसंसारमा आदिकवि वाल्मीकिका भावुक हृदयबाट सर्वप्रथम लौकिक छन्दमा प्रस्फुटित भएको रामायणका संस्कृत कविताको ऐतिहासिक महत्व ज्यादै ठूलो छ। यसरी नै नेपाली साहित्यले पनि सर्वप्रथम कविताकै रूपमा पाइलो चालेको हो। नेपालीमा संस्कृत छन्दमा कविता लेखेर जनजीवनका हृदयमा व्यापकरूपले सहजै प्रभाव पार्ने व्यक्ति हुन् स्वनामधन्य आचार्य भानुभक्त अनि नेपाली जातीय भयाउरे छन्दमा नयाँ भावना र नेपालीत्व झल्काउँदै नेपाली साहित्य संसारमा आलोक थप्ने अर्का महान् व्यक्ति हुन् महाकवि लक्ष्मीप्रसाद देवकोटा।

नेपाली साहित्यका ठूला ठूला कुनै दुइ जना व्यक्तिको नाउँ अघिसार्नु परेमा आचार्य भानुभक्त र महाकवि लक्ष्मीप्रसाद देवकोटाको नाउँ नै सबैजसोका मुखबाट पहिले बाहिरिन्छ। यसो घोरिँदा यसमा अन्याय भए जस्तो पनि मलाई लाग्दैन। किनभने यी दुइ जना नै अहिलेसम्मका सबभन्दा ज्यादा लोकप्रिय कवि हुन्। भानुभक्तको रामायण, बधूशिक्षा र भक्तमालाको एकाध श्लोक मुखस्थ नहुने र देवकोटाका मुनामदनका एकाध टुक्रा नगुन्गुनाउने नेपाली पाउन हम्मे नै पर्छ। शिक्षित, अशिक्षित; साक्षर, निरक्षर; गोठाला, खेताला प्रायः सबैले नै हृदयको कुतकुत्याइ मेटाउन मनमा परेका पीरका सुस्केरा वा सुखका समयका मधुर कल्पना पोख्छन् भानुभक्तका सिलोकमा लय हालेर वा भानुभक्तीय लयमा आफ्नै कल्पित सिलोक गुन्गुनाएर। साथै आधुनिक युवक-युवतीहरू आफ्नू रसिक भावना मुनामदनका शैलीमा सललल बगाउँछन्। मुनामदनका भयाउरे—जातीय लयमा संगीत घन्काउँछन्; त्यहाँका घतलाग्दा गीतका सुमधुर छन्दले लय, भाव र भावनामा समेत क्रान्ति ल्याएको छ। यसरी हेर्दा नेपाली साहित्यका ज्यादै लोकप्रिय दुइटा ग्रन्थ छान्नुपरेमा भानुभक्तको रामायण र देवकोटाको मुनामदन-लाई नै सबैजसोले औँल्याउलान्। अनि नेपाली साहित्यको अहिलेसम्मको

Vedic Archives Digital Preservation Foundation, Chandigarh

सर्वश्रेष्ठ व्यक्ति छान्तुपरेमा भानुभक्त आदिकवि भए पनि दुइ तीनवटा महाकाव्य र साहित्यका विभिन्न अरू उपादान सामग्री श्री सम्पत्ति दिएर नेपाली साहित्यको सर्वाङ्गीण विकास गराउने सर्वश्रेष्ठ व्यक्ति स्वर्गीय महाकवि लक्ष्मीप्रसाद देवकोटा नै हुन् भनी औंल्याउनुपर्ला जस्तो मलाई लाग्छ।

भानुभक्तले संस्कृत र हिन्दीका शब्द प्रयोगमा नलोभिएर सर्वप्रथम सरल तरिकाले विशुद्ध नेपाली शैलीको प्रयोग गरे; देवकोटाले भाव, भाषा, छन्द र शैली आदिमा नवीनता ल्याए। यसरी नेपाली साहित्यमा यी दुइ महान् व्यक्तिको जति ठूलो प्रभाव छ त्यति अरूको छैन।

आदिकवि भानुभक्त आचार्यले आफ्ना 'रामायण' र 'प्रश्नोत्तर-माला'-मा तथा आफ्ना मौलिक रचना 'बधूशिक्षा' र 'भक्तमाला'-मा समेत संस्कृतकै छन्द प्रयोग गरेका छन्। तर उनले रामायणमा प्रयोग गरेका इन्द्रवज्रा, उपजाति, द्रुतविलम्बित, वसन्ततिलका, मालिनी, मन्दाक्रान्ता, शिखरिणी, शार्दूलविक्रीडित र स्रग्धरा यी नौ छन्दहरूमध्ये शार्दूलविक्रीडित चाहिँ नेपाली समाजमा औधिनै नामी र प्रचलित भएको छ। अझ यो ता संस्कृत छन्द नरहेर नेपाली जातीय छन्द नै भएको छ भने पनि हुन्छ। भानुभक्तले संस्कृत छन्द प्रयोग गरे तापनि ती छन्दको प्रयोग गराइ र उनका सरल नेपालीय लेखनशैलीले नेपाली मात्रका हृदयमा गहिरो छाप बसाएको छ। उनका सरल तथा सरस सिलोकहरू दरबार-देखि झुप्रासम्म र शिक्षितदेखि अशिक्षितसम्मका मुखमा झुण्डिएका हुन्छन्। प्रसाद गुणले सम्पन्न भानुभक्तका रामायणका कविताले सबैलाई एकोहोऱ्याए। बाल्यकालका मनोहर वर्णनले बालक-बालिकाहरूलाई लोभ्यायो, विवाह कालको रोमाण्टिक वर्णन र युद्धका वीर रसपूर्ण वर्णनले तरुनी-तन्नेरीहरू-लाई घतपाऱ्यो, ऋषिमुनिहरूका आश्रमवर्णनले र वैराग्य रसले ओतप्रोत भएका भक्तमालाका कविताले बूढा-बूढीहरूको चित्त बुझायो अनि सीताको करुणावस्थाको सजीव यथार्थ वर्णनले स्त्री जातिको कोमल हृदय सजिलै पगाल्यो। पितृभक्ति, देशप्रेम र भ्रातृप्रेमका ज्वलन्त उदाहरणले नेपाली जातिलाई सहज प्रेरणा दियो।

यसरी भानुभक्तका घतलाग्दा सिलोकहरूले पढ्नमा रुचि ता बढ़ाए बढ़ाए तर यसबाहेक प्रायः निरक्षर र अशिक्षितहरूलाई पनि कवि बनाए। पहाड़िया घरका अशिक्षित, पीड़ित छोरी-बुहारी र गोठाला-खेताला आदि साधारण व्यक्तिहरूले पनि भानुभक्तका सिलोकको अनुकरण गरी आफ्ना

Vedic Archives Digital Preservation Foundation, Chandigarh

मनमा उब्जेका तात्कालिक तीता पीरा भावनाहरू र हास्य रसका उक्तिहरू त्यसै लयमा गुन्गुनाएर तुकान्त अनुप्रास र लय मिलेका सिलोक सिर्जना गरे। अझ पनि यो चलन पहाड़ पर्वतका कुनाकन्तरमा बस्ने जनतामा पाइन्छ। ती प्राकृतिक वा स्वाभाविक कवि-कवियत्रीहरूले छन्दका नियम र गण, मात्रा जान्दैनन् अनि दीर्घ ह्रस्व पनि उति ख्याल गर्दैनन् तर लयका भरमा भानुभक्तीय शैलीमा कविता रचना गर्छन् कलम, मसी, कागत बिनै। उनीहरू मेलापात गर्दा, बिहाबारीमा र केही उत्सव चाड़ पर्वमा जुवारी खेल्छन्, सिलोक सिलोकमै सवाल-जवाफ गर्छन्। यस्ता प्रचलित श्लोकहरू प्रशस्त पाइन्छन्, तर यी कसले कहिले बनाएका हुन् भन्ने अनुसन्धान कहिल्यै टुंगिदैन किनभने यस्ता श्लोक खालि मौखिक रूपमा चलिआएका परम्पराको थेगो जस्तै भएका छन् र यसरीनै नयाँ नयाँ थपिइँदै पनि जान्छन्। उदाहरणका निम्ति शार्दूलविक्रीडित छन्दका केही प्रचलित श्लोक यहाँ दिइन्छ—

चम्पा फूल फुल्यो मधूरि वनमा बासन् चल्यो लंकामा।
सोही फूल टिपी चढ़ाउ भगवती बाजा बजे नौमती॥

× × ×

"एक् दिन् नारद सत्य लोक् पुगि गया......" को प्रभाव परेका सिलोक जो बिहावारीमा भनिन्छन्—

एक् दिन् जन्त गएँ जुनै केटासँग जग्यै दिया आङ्नमा।
ब्यौली हुन लागी अनेक् तरहले लैजान आँटयो कहाँ॥
लुगा छन् उनका गहना सुनका रङ् रङ् बिरङ्का अनि।
ब्यौली हुन लागी अनेक् तरहले लैजान आँटयौ भनी॥

× × ×

सासूका कच्कचले माया पीर्तिमा केही कमी हुन आउँदा र लोग्ने चाहिं परदेश गएका बेलामा घरको पीर खप्न नसकी विरक्तिएर एक्लै गुन्गुनाउँदा बनेका श्लोक—

एक् रानी पोखरी जोरै छन् पुतली सुनै सरीको कपाल्।
म जान्छू शिवजी मरन्का घाटमा चिठी पुऱ्याइद्यौ नेपाल्॥

× × ×

Vedic Archives Digital Preservation Foundation, Chandigarh

गर्नू काम पनी सबै मिलिजुली भन्छन् ससूरा पनि।
सासू पेटमा दया टुटिगयो कत्ती रिझाउँदा पनि॥

× × ×

काग् क्वेली वनमा ढुकूर जुरेली रानी चरी धोबिनी।
यस्ता दुक्ख हुंदा त नारि जनले बरू हुनू जोगिनी॥

× × ×

बिहाबारीमा भन्ने चल्ती छ—

भात्खाने तसला तिहुन् त मसला खोर्सानी खानू जिरे।
हे राम् राम् शिवका ति जन्ति हिजोका ब्यौली लिएरै फिरे॥

× × ×

श्रृंगार अथवा ठट्टामा प्रयोग गरिएका सिलोक—

हे नानी तिमि त पहेंली पातली दन्तैमा लाउने बिरी।
आफना जिवको सम्मार गरनू आवैन जोवान् फिरी॥

× × ×

हे नानी तिमि ता पहेंली पातली निधार्मा छाप टाँसेकी।
चुल्ठो छोटो भयो भनेर तिमिले लाछा समेत गाँसेकी॥

× × ×

बूढ़ाबूढ़ीले बालबच्चालाई शिक्षाबारे उपदेश दिंदा र त्यस अनुसार नगरेकाले पछि पश्चात्ताप गर्दा भनिएका वा भनिने चल्ती सिलोक—

बर्खे पाँच हुंदा अच्छेर पढ़नू सुपात्र हौंला भनी।
..........................................................

× × ×

पिताका यि वचन् कुनै समयमा बैरी समान्का हुन्या।
पछी चेत भएर अन्त्य समयमा सम्पूर्ण ती सम्झिन्या॥

× × ×

बालक छोरालाई काखमा राखेर हर्ष र आशामा बूढ़ा बाबुले गुन्गुनाउँदा चनेको श्लोक—

यो छोरो बढ़ला कमाइ गरला दुध् भात देला मलाइ।

× × ×

Vedic Archives Digital Preservation Foundation, Chandigarh

गोठालाले आफ्ना गाई गन्ती गर्दा सिलोकमै बोलेको—

काली, कोइलि, कलाँखु, गोठु, भँगेरी,
आर्सी त माली, पुँड़ी ।
दर्माली, रचनी, तिलौरी, वेलौरी,
रुप्सी, रुपाङ्गी, चिवू ॥

× × ×

यसरी नेपालीका सामाजिक जीवनमा भानुभक्तका छन्दोबद्ध कविताले व्यापकरूपले प्रभाव पारेको छ। भक्तिमार्गमा, ज्ञानमार्गमा साहित्यलेखनशैली र अलंकारादिमा पनि सुललित लयले गाइने भानुभक्तीय रामायणका छन्दको प्रभाव नपरी रहन सकेको छैन। कविशिरोमणि लेखनाथ, महाकवि लक्ष्मीप्रसाद देवकोटाहरूलाई पनि भानुभक्तका छन्दले प्रभावित पारेको होइन भन्न सकिँदैन। भानुभक्तले प्रयोग गरेका छन्दहरूले नै उनीहरूलाई मुहुनी लगायो र भानुका मिर्मिरे उज्यालामा उनीहरूले पनि आफ्नू कविता साहित्यको गीतिमय माल्योपहार चढ़ाएर नेपाली साहित्यलाई सिंगारे, अघि बढ़ाए भन्दा अघेलो नहोला। यसरी भानुभक्तका छन्दले नेपाली जनजीवनका साहित्यमा व्यापकरूपले प्रभाव पारेको छ।

[ 'दियालो' हाँगो ११ बाट। ]

Vedic Archives Digital Preservation Foundation, Chandigarh

डा० कमला सांकृत्यायन, दार्जीलिङ—

# कवि भानुभक्तको रामायणमा अद्वैतवाद

सबै आस्तिक दर्शनमा सत् अर्थात् सत्ताको खोजी गरिन्छ। यसै सत्लाई नै तत्त्व अथवा पदार्थ पनि भनिन्छ, फेरि यसैलाई अन्तिम सत्ता अथवा परमतत्व पनि भनिएको छ। यो सत् हो वा होइन, यो भाव हो वा अभाव? यो एक छ वा अनेक? इत्यादि प्रश्नहरूमाथि प्रचीनकालदेखि नै विचार हुँदै आएको छ जसको फलस्वरूप दर्शनको क्षेत्रमा अनेक "वाद"-हरू उत्पन्न भएका हुन्। जसले यो सत्लाई एक मान्दछन् तिनीहरू एकत्त्ववादी र जसले अनेक मान्दछन् तिनीहरू अनेकत्ववादी या वैपुल्यवादीमा गनिएका छन्। यिनैलाई द्वैतवादी पनि भन्दछन्। अद्वैतवादी यी भन्दा भिन्न हुन्। यिनीहरू सत्लाई न एक भन्छन् न अनेक। यिनीहरू यसलाई अगम, अगोचर, अचिन्त्य, अलक्षण र अनिर्वचनीय मान्दछन्। दर्शनको दृष्टिमा अद्वैतवादले एकत्त्ववाद र द्वैतवाद दुवैसित भिन्नता राख्तछ, तर पनि ऐतिहासिक दृष्टिले यो एकत्त्ववादको नजिकै छ। अद्वैतसत्को वर्णन एक, दुइ आदि कुनै संख्यामा हुन सक्तैन। अगम शब्दलाई संख्याको बन्धनमा राख्न सकिँदैन। 'न त्यो न यो; अथवा 'अकथ्य' वा 'ने ति नेति' वा 'यही मात्र' आदि शब्दहरूद्वारा नै यसको वास्तविक वर्णन या व्याख्या हुन सक्छ।

अद्वैतसत्को तात्पर्य के हो? यस प्रश्नका उत्तरहरू पनि धेरै नै छन् जसले गर्दा विविध तत्त्ववादहरूको उत्पत्ति भयो। यसैलाई बौद्धहरूले शून्यवाद वा विज्ञान, शक्तिवादीहरूले शक्ति, शिववादीहरूले शिव र अद्वैतवेदान्तीहरूले आत्मा भनेका छन्। यी सबैमा प्रधानता आत्माद्वैतवादको छ जसलाई शंकराचार्य र उनका अनुयायीहरूले तथा हिन्दीमा सन्तहरूले पनि स्वीकार गरेका छन्। यी दार्शनिकहरूद्वारा प्रतिपादित विचारानुसार साक्षात् अनुभूत हुने चैतन्य स्वरूप आत्मा नै परमतत्व हो, अरू अन्यभाव वा अभाव परमात्मा होइन। शंकराचार्य (७८८-८२० ई०) देखि लिएर आजसम्म सामान्यतः उनको आत्माद्वैतवादलाई नै अद्वैतवादको संज्ञा दिइएको छ, किनकि युक्ति र सहानुभूतिद्वारा यही नै प्रबलतम ठहरिएको छ।

अब यहाँ वेदान्त शब्दको व्याख्या गरौं। यसको शाब्दिक अर्थ त वेदको 'अन्त' हो, तर प्रायः शंकराचार्यको दर्शनको अर्थमा प्रचलित

Vedic Archives Digital Preservation Foundation, Chandigarh

भएको छ। पश्चिमी देशहरूले तथा भारतमा पनि शंकराचार्यको दर्शनलाई वेदान्त भनेका छन्, यद्यपि यो अद्वैतवेदान्त हो। अन्य वेदान्तहरू वैष्णव वेदान्त अथवा शैव वेदान्तको नामले प्रसिद्ध छन्। वेदान्तलाई राम्ररी बुझ्नका निमित्त ब्रह्मजिज्ञासा पनि आवश्यक छ। वेदान्त-दर्शनको अनुसार ब्रह्म नै जगत्‌को मूल स्रोत, आधार तथा लक्ष्य हो। जगत् त्यसैबाट उत्पन्न भएको छ, त्यसैमा निहित छ र त्यसैमा यसको विलय पनि हुनेछ। ब्रह्म र जगत्‌को सम्बन्ध, ब्रह्म र जीवको सम्बन्धमा दुइ प्रश्नहरू मुख्य छन्—मनुष्यले ज्ञानबाट मुक्ति पाउँदछ वा भक्तिकर्म समुचित-ज्ञानबाट मुक्ति, जीवन मुक्ति वा देह मुक्ति हुन्छ ? यी प्रश्नहरू वेदान्तीहरूमा परस्पर मतभेदका विषय भएका छन्।

ब्रह्मको उपासना दुइ प्रकारले हुन्छ—ज्ञानमार्गद्वारा र भक्तिमार्गद्वारा। अद्वैतवेदान्तमा पनि ज्ञानमार्गकै अवलम्ब हुँदै आएको थियो, तर कालान्तरमा भक्तिमार्गले नै अधिक महत्त्व प्राप्त गर्‍यो। पूर्ववर्ती अद्वैतवादीहरूले त ब्रह्मोपासनाका निमित्त शुष्क ज्ञानमार्गको सहारा लिएका थिए, तर परवर्तीकालमा यस विषयमा भक्तिमार्गको अवलम्बन सबैले गरेका छन्।

भारतीय साहित्यमा, शंकराचार्यको अद्वैतवेदान्त तथा अन्य चार वैष्णववेदान्तहरू अर्थात् रामानुज, वल्लभाचार्य, निम्बार्क तथा मध्वका वैष्णववेदान्तहरूको विशेष प्रभाव परेको छ। महाप्रभु चैतन्यदेव मध्वमतका वेदान्ती थिए। भारतमा निर्गुणोपासक सन्तहरूमाथि पनि अद्वैतवेदान्तको धेरै प्रभाव परेको छ। स्वामी रामानन्द पनि वेदान्ती थिए। यिनका शिष्यहरू कबीर, रविदास आदिले पनि शंकरको अद्वैतवादलाई नै स्वीकार गरेका थिए।

माथि गरिएको अद्वैतवादीवेदान्तको विवेचनापछि मात्र हामीलाई 'अध्यात्मरामायण'-मा प्रतिपादित दर्शनलाई बुझ्न सजिलो पर्ला। 'अध्यात्मरामायण' स्वामी रामानन्दको कृति हो भन्ने धेरै विद्वान्‌हरूको मत छ। यो कुरो सत्य होस् अथवा नहोस्, तर यस ग्रन्थमा प्रतिपादित दर्शन स्वामी रामानन्दको विचारको अनुकूल छ, यसमा केही सन्देह छैन। गोस्वामी तुलसीदासको महान्‌कृति 'रामचरितमानस' पनि यसै अध्यात्मरामायणमा आधारित छ, र तुलसीदासले शंकरको अद्वैतवेदान्तको समर्थन गरेका छन्; यद्यपि भक्तिको अनुकूल त द्वैतवाद नै ठहरिन्छ,

Vedic Archives Digital Preservation Foundation, Chandigarh

कारण भक्तले सदैव भगवानको सेवक भएर बस्न चाहन्छ, तर आफै भगवान हुन रुचाउँदैन। यसै प्रकार भक्ति तथा ज्ञान (अद्वैतवेदान्त) परस्पर विरोधी हुन् र दुवैका समन्वयका लागि अध्यात्मरामायणमा निकै नै प्रयत्न भएको छ।

यो त सबैलाई विदित छ कि हाम्रा महाकवि भानुभक्तको रामायणको आधार पनि 'अध्यात्मरामायण' नै हो। भानुभक्तलाई पनि यस रामायणमा प्रतिपादित अद्वैतवाद वा शंकरको अद्वैतवेदान्त-दर्शनको सूक्ष्म ज्ञान थियो। भक्तिको प्रश्नमा उनले पनि गोस्वामी तुलसीदासको मार्गलाई नै पहिल्याए कारण दुवै कविहरू सगुणोपासक (भगवानको साकार रूपका उपासक) थिए। सगुणोपासक सन्तहरूलाई भगवानको उपासना गर्नमा भक्तिमार्गकै सहारा लिएको देखिन्छ र यो उनीहरूको लागि सहज र सरल मार्ग पनि हो। हाम्रा महाकविले पनि आफुलाई भगवानको सेवकको रूपमा नै प्रस्तुत गरेका छन्। तर दर्शनको क्षेत्रमा उनले अन्य वैष्णववेदान्तहरूलाई स्वीकार नगरी शंकरको अद्वैतवेदान्तलाई नै रुचाएका छन्।

वेदान्तका विशेष वाक्यहरू हुन्—'तत्वमसि', 'सोहमस्मि' औ 'अहंब्रह्मास्मि'। यी महावाक्यहरू भारतीय सन्तहरूका रचनामा यथेष्ट रूपले प्रयुक्त भएका छन्।

'तत्वमसि'—वेदान्तको प्रमुख तत्वको 'अध्यात्मरामायण'-मा यसरी प्रतिपादन गरिएको छ—

"श्रद्धान्वितस्तत्त्वमसीति वाक्यतो
गुरोः प्रसादादपि शुद्धमानसः।
विज्ञाय चैकात्म्यमथात्मजीवयोः
सुखी भवेन्मेरुरिवाप्रकम्पनः ।।२४।।

आदौ पदार्थावगतिर्हि कारणं
वाक्यार्थविज्ञानविधौ विधानतः।
तत्त्वम्पदार्थौ परमात्मजीवका—
वसीति चैकात्म्यमथानयोर्भवेत् ।।२५।।"

—उत्तरकाण्ड।

अर्थात्—शुद्ध चित्त लिएर, श्रद्धापूर्वक गुरुको कृपाले 'तत्वमसि'

Vedic Archives Digital Preservation Foundation, Chandigarh

महावाक्यद्वारा परमात्मा र जीवात्माको एकतालाई बुझेर (मनुष्य) सुमेरुको समान निश्चल र सुखी होऊन् ॥२४॥

यो नियमनै छ कि प्रत्येक वाक्यको अर्थ बुझ्नाका लागि पहिले त्यसको पदको अर्थको ज्ञाननै कारण हुन्छ। (यस 'तत्वमसि' महावाक्यको) 'तत्' र 'त्वम' पदहरू क्रमशः परमात्मा र जीवात्माका वाचक हुन् औ 'असि' यी दुवैको एकताको वाचक क्रिया हो ॥२५॥

आचार्य भानुभक्तले अध्यात्मरामायणको भन्दा पनि स्पष्ट रूपमा 'तत्वमसि' महावाक्यको व्याख्या गरिदिएका छन्। उनी भन्दछन्—

जो यो तत्वमसी छ वाक्य यसको वाक्यार्थ जानी लिनू।
यस्मा तीन् पद छन् ति तीन पदका तात्पर्यमा मन् दिनू॥
तत्का अर्थ परात्म हुन् ति पदमा त्वं भन्नु जीवात्म हो।
इन्को ऐक्य बुझाउन्या असि छ पद् रात् दिन् विचार् गर्नु यो॥

—उत्तरकाण्ड, श्लोक १३२।

[कविको भनाइको तात्पर्य हो—यो जो 'तत्वमसि' वाक्य छ, यसको अर्थ पनि जान्नुपर्दछ। यसमा तीन पदहरू छन्, ती तिनै पदहरूको तात्पर्यमा मन दिनुपर्दछ। 'तत्'-को अर्थ हो परमात्मा। 'त्वं'-को तात्पर्य हो जीवात्मा, र यिनैको एकतालाई बुझाउनका निमित्त "असि" शब्द छ, यसलाई रातदिन मनन गर्नुपर्दछ।]

यो 'तत्त्वमसि' उपनिषद्-वाक्यमा तत् पदबाट ब्रह्म वा परमात्माको 'त्वम' पदले आत्मा वा जीवात्माको बोध गराउँदछन्। कविले माथिको पद्यमा यी दुवैका सम्बन्धलाई दर्शाएका छन।

अद्वैतवेदान्तको अर्को महावाक्य 'ब्रह्म सत्यं जगन्मिथ्या'-को भावलाई कवि भानुभक्तले कति सजिलो गरी तलको श्लोकमा पाठकहरूको सामु राखिदिएका छन—

'आत्मै मात्र छ सत्य यो सब जगत् झूटै छ झूटो पनी।
डोरी सर्प बुझ्या सरी विबुझमा देखिन्छ साँचो भनी॥
जान्नू जानिइयेन यो भनि भन्या मेरा चरण्मा परी।
सेवा गर्नु र जान्दछन् नतर ता टर्दैन कस्तै गरी॥

—उत्तरकाण्ड, श्लोक १४६।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

अर्थात् आत्मा (ब्रह्म) नै सत्य हो, यो जगत् मिथ्या हो। जस्तै भ्रमवश डोरीलाई सर्प ठान्दछन् उसरी नै मानिसले जगत्‌लाई अलग तत्व बुझ्दछन्, तर वास्तवमा आत्मा (ब्रह्म) नै एक तत्व हो। यदि यो तत्वलाई सूक्ष्मतासित बुझिएन भने मनुष्यले रामकै चरणमा रहेर भक्ति गरुन्, तब मात्र ज्ञानप्राप्ति हुनेछ नत्र कुनै प्रकारले पनि भ्रम छुट्नेछैन।

माथिको श्लोकमा कवि ब्रह्मको लक्षणलाई सरल शब्दमा भनेका छन्। ब्रह्मद्वारा नै सृष्टिको प्रारम्भ हुन्छ (अद्वैतवाद अनुसार)। यसकारण जगत्‌को मूल कारणलाई ब्रह्म भन्दछन्। दोस्रो, ब्रह्म नै सृष्टिमा अन्तर्व्याप्त छ, उ अन्तर्यामी छ यसकारण उ सबै वस्तुहरू वा आधारभूत र नियामक सत्ता पनि हो। तेस्रो, ब्रह्मद्वारा नै सृष्टिको अन्त हुन्छ अर्थात् ब्रह्म नै सृष्टिको साध्य पनि हो।

भानुभक्तका राम परमात्मा हुन्। परमात्माको यसै अद्वैत ब्रह्म रूपलाई स्पष्ट गर्दै भनी भन्दछन्—

आत्माको र परत्मको छ कति फेर् त्यो एक जानी लिनू।
जुन् जुन् चीज अनात्म हुन् उ त झुटा जानेर छाड़ी दिनू॥
आत्माको र परात्मको गरि विचार् एक तत्व जान्यो जसै।
अज्ञान् सब् छुटि जान्छ ती पुरुषको मै तुल्य हुन्छन् तसै॥

—बालकाण्ड, श्लोक ३६।

कविले यस श्लोकमा परमात्मा (ब्रह्म) र जीवात्मा (आत्मा)-लाई एउटै तत्व भनी सम्झाएका छन्। आत्मा र परमात्माको तत्वलाई राम्ररी बुझ्नेले राम (ब्रह्म) समान नै ब्रह्मलीन हुन सक्दछ।

"त्यो मैमा मिली जान्छ जल् जलधिमा पौंचेर मिल्या सरी।"

माथिका पंक्तिहरूमा 'जीवात्मा' शब्दको उल्लेख भएको छ ब्रह्मोपासनाको ज्ञानपक्षमा दार्शनिकहरूले जीव (जीवात्मा)-लाई ब्रह्मदेखि भिन्न मान्दैनन्। 'जीवो ब्रह्मैव नापरः' यो पनि अद्वैतवादको महावाक्य हो। हाम्रा महाकविले पनि तुलसीदासले झैं जीवलाई ब्रह्मकै अभिन्न मानेका छन्। यी दुवै महाकविहरू माथि अध्यात्मरामायण कै प्रभाव एकसमान थियो। अद्वैतवाद दर्शनमा जीव के हो? र यसको के स्थिति छ? यसबारेमा भानुभक्तले आफ्नो रामायण-को उत्तरकाण्डका निम्नलिखित श्लोकहरूमा सरलतापूर्वक स्पष्टरूपले विवेचना गरेका छन्:—

Vedic Archives Digital Preservation Foundation, Chandigarh

जीव् ता मुक्त छ शुद्ध निर्मल फटिक् जस्तो उपाधी गरी।
सो निर्मल् पनि हुन्छ सङ्ग गुणले उस्तै उपाधि सरी॥
ईनै दुइ उपाधि देखि बुझि खुप् होला फरक् जीव् जसै।
तस्तै मुक्त हुन्या छ छैन नहिं ता आर्को उपाये कसै॥१३५॥

राताका सँगमा रह्या स्फटिक ठिक् देखिन्छ रातै सरी।
तस्तै आत्म पनी उपाधि सँग भै हुन्छन् उपाधी सरी॥
आत्मामा छ उपाधि केहि न फटिक्मा क्ये छ रातो कतै।
झुट्टै मात्र छ त्यो झलक् यहि विचार् खुप् राख्नु जत्ता ततै॥१३६॥

जाग्रत स्वप्न सुषुप्ति वृत्ति तिन छन् यस् बुद्धिका ई पनी।
झुट्टै देखि लिइन्छ नित्य सुखरूप् यस् ब्रह्म रूप्मा भनी॥
जानी वृत्ति निरोध् गरेर जनले यो आत्म जानी लिनू।
आत्मा भीत्र उपाधिलाइ त झुटा जानेर छाड़ी दिनू॥१३७॥

आत्मा हो सुख रूप दुःख रुपको संसार् छ उस्मा कहाँ।
अज्ञान्ले गरि मात्र सत्य रुपले झल्कन्छ आत्मा महाँ॥
ज्ञान्ले लीन् पनि हुन्छ डोरि कन साँप् बुझनू छ जस्तो फकत्।
तस्तै ईश्वरमा अनेक् तरहको देखिन्छ यस्तो जगत्॥१३८॥

अध्यास् हुन्छ चिदात्समा इ सबको जो छन् अहङ्कारका।
इच्छादी पनि वुद्धि धर्म बुझनू छैनन् कुनै सारका॥
आत्मा साक्षि छ यो पृथक् इ सबमा सब्मा घुस्याको पनी।
जस्तै घुस्तछ अग्नि लोहहरुमा तस्तै प्रकार्को बनी॥१३९॥

यै आत्मा कन चिन्हि पर्छ गुरुका वेद्का वचन्ले गरी।
आत्मालाइ चिन्ह्यो भन्या बुझि लिनू त्यो मुक्त भो तेस् घरी॥
तस्मात् आत्म विचार गर्नु जनले यस् रूपका हुन् भनी।
अज्ञान् नष्ट गराउना कन अबर् छैनन् उपाई पनी॥१४०॥

**यस्तै प्रकार ब्रह्म र जीवात्माको सम्बन्धमा कविले कति सरल भाषामा आफ्नो विचार प्रकट गरेका छन्, उत्तरकाण्डका उल्लिखित श्लोक-हरूको अवलोकन गरे थाहा हुनेछ।**

Vedic Archives Digital Preservation Foundation, Chandigarh

ब्रह्म, जीव र मायाको व्याख्या अद्वैतवेदान्तका लागि परम आवश्यक छन्। ब्रह्म, जीव तथा जगत्का सम्बन्धको परिभाषालाई शंकराचार्यले माया-को संज्ञा दिएका छन्। के यो माया भ्रम हो? मिथ्या हो? अथवा सत् हो? यो ब्रह्मदेखि भिन्न छ वा अभिन्न? आदि-आदि कतिपय प्रश्नहरू छन् जसको उत्तर वेदान्तीहरूले भिन्न-भिन्न रूपमा दिएका छन्। अद्वैतवेदान्तमा निर्गुण ब्रह्मलाई नै सम्पूर्ण जगत्को अधिष्ठान, मूल उपादान, स्थिति, प्रलयको हेतु र निर्विकल्प तत्व भनिएको छ। माया-सित संयुक्त भएर त्यो निर्विकल्प, निर्विशेष र निरूपाधि ब्रह्म अनेक प्रकारले प्रपंचको रूपसित प्रभावित भएको छ। अद्वैतवादी साहित्यहरूमा माया शब्द कैयन् अर्थमा प्रयुक्त भएको छ। —जस्तै, भ्रमात्मक र प्रपंचरूपमा चराचर जगत्को सृष्टिको हेतु, प्रपंचको साथ ब्रह्मको स्वरूप-विनिमयको हेतु। ऋग्वेद र यजुर्वेदमा मायालाई आदिशक्ति वा ब्रह्मकी सहचरी शक्तिको रूपमा वर्णित गरिएको छ। यसलाई सम्पूर्ण संसारको बीजशक्ति पनि भनिएको छ र ब्रह्मनै यससित संयुक्त भएर जगत्को कारण बनेको छ, यस्तो कल्पना पनि गरिएको छ। तर साधारण रूपले मायालाई सांसारिक भ्रम र अज्ञानको नै समानान्तर मानिन्छ र यस चराचर सृष्टिको भ्रमात्मक रूपलाई नै माया भनिएको छ। भारतीय साहित्यमा सिद्धसाहित्य, निर्गुणवादी सन्तसाहित्य र भक्तिकालको सगुण-साहित्यहरूमा पनि 'माया'-को प्रयोग भएको छ। कवि भानुभक्त सगुण रामका अनन्य उपासक थिए। उनी रामरूपी परमात्माको सामु अन्य कुनै तत्त्वको अस्तित्त्वलाई स्वीकार गर्दैनथे। मायालाई उनी एक प्रपंचको रूपमा हेर्दथे। उनको लागि माया एउटा भ्रम हो। उनले अन्य सगुणवादी कविहरूले झैं मायाको अज्ञानमय तथा भ्रमात्मक स्वरूपलाई नै ग्रहण गरेका छन्। यसैले उनी भन्दछन्—

मायाले त बन्यो शरीर सब यो आखिर् छ मर्न्या पनी।
देख्नू पञ्च महाभुतै छ सबमा यस्ता प्रकार्को बनी॥
संसारको सुख दुःख साधन स्वरुप् देखिन्छ जो देह यो।
स्थूलोपाधि भनी कहिन्छ सबले यो नाम् यसैको त हो॥

—उत्तरकाण्ड, श्लोक १३३।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

हाम्रा कविले बुझेका छन् कि यो शरीर मायाद्वारा नै निर्मित भएको छ, तर यो अजर-अमर छैन। एक दिन सबैले अन्त्यमा मर्नै पर्छ। यो शरीर पञ्चमहाभूतमा नै मिलेर एक भ हाल्दछ। यो जगत पनि त माया नै हो। यसलाई माया अर्थात् प्रपंच सम्झेर यस विषयमा अलिकति पनि आनन्द मान्नु हुँदैन। बरू मायालाई एकतिर पन्साएर परमात्माको भजन गर्नाले नै मनुष्यको पाप टर्दछ। उसले भवसागरलाई सजिलैसित पार तर्ने यही एकमात्र उपाय छ।

कविले यसै भावलाई तलको पद्यमा अभिव्यक्त गरेका छन्—

माया छ यो सब जगत् भनि नित्य जानी।
आनन्द यस् विषयमा रति भर् न मानी॥
मेरो भजन् गरि रहोस् सब पाप हर्‍याँ।
येही उपाय छ सहज् सित पार तर्‍याँ॥

—उत्तरकाण्ड, श्लोक २८।

रामायणको किष्किन्धाकाण्डमा बालिको मृत्युपछि रामले बालि-पत्नी शोकातुरा तारालाई दिएका उपदेशहरूको प्रसंगमा पनि भानुभक्तले अद्वैत ब्रह्मज्ञानकै महिमालाई प्रतिपादित गरेका छन्। यी उपदेशहरू श्लोक ६५, ६६, ६७, ६८, ६९, ७० र ७१ मा वर्णित छन्। अद्वैतवादी दर्शनको विवेचना यी श्लोकहरूमा बड़ो सरल र स्पष्टरूपमा भएको छ। यसैले बुझ्न सकिन्छ कि कवि भानुभक्तको अद्वैतवेदान्त-दर्शन सम्बन्धी ज्ञान विस्तृत थियो र उनी यसैद्वारा प्रभावित भएका थिए।

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

श्री रामलाल अधिकारी, सिलगड़ी—

# भानुभक्तीय रामायणमा बाली-हत्या-काण्ड

श्रीरामचन्द्रले बाली मार्नु कति सम्म न्यायसंगत थियो भन्नेकुरो धेरै विद्वान्हरूका निम्ति अझसम्म तर्कको विषय भएको छ र अझै यस हत्या-काण्ड (मुद्दा) को न्याय अन्याय राम्ररी छिनाफाना भैसकेको छैन। यसै युगको कुरो हुँदो हो ता यो सदर न्यायालयबाट बिग्न उता गए 'हाइकोर्ट' सम्म पुग्दो हो। तर रामायण कालमा 'सम्भवामि युगे युगे' नीतिअनुसार पीर, मर्का र आघात खप्नुपर्नेहरू विधाताकै खेल सम्झी ढुक्क भएर सहन्थे औ भाग्योदय हुनेहरू पनि आफूलाई र आफूसँग सम्बन्धित सबै वस्तुलाई ईश्वरमै समर्पण गरिदिन्थे। 'सम्भवामि युगे युगे' भन्ने नीति ईश्वरको कृष्णावतारमा भएको उद्‌गार हुनाले यो रामायण कालभन्दा कान्छो हो तथापि हिन्दू विश्वासअनुसार यो सृष्टिका प्रारम्भ-देखिकै भगवानको आदर्श वाक्य र सिद्धान्तमा दर्ता भएर आएको छ। रामचन्द्र स्वयंले पनि एक ठाउँमा मृतप्राय बालीसँग भनेका छन्—

'धर्मस्थापन गर्नलाइ त यहाँ औतार मैले लियाँ।
धर्मै जानि अधर्म ठानि अहिले तँलाइ मारी दियाँ॥'

ईश्वरको इच्छाअनुसार सज्जन र न्यायप्रिय व्यक्तिहरूको अभ्युदय-का निम्ति र दुर्जन, अन्यायीहरूका विनाशका निम्ति प्रत्येक युगमा ठूला ठूला वीर पुरुषहरूको आविर्भाव हुन्छ भने रामायण कालमा बाली पनि रावण जस्तै दुराचारी र सुग्रीव ऋषि मुनिहरू झैं सदाचारी थिए भन्ने कुरो प्रमाण नगरी धर पाइँदैन।

मूल वाल्मीकीय रामायणको किष्किन्धाकाण्ड अन्तर्गत बाली उपाख्यानलाई हिन्दीमा तुलसीदासले र बंगलामा कृत्तिबासले केही मात्रामा आफ्नै विचारका रंग पनि पोती न्यायसंगत पार्न खोजेका छन् र बंगला रामायणमा ता यो उपाख्यान मूलमा भन्दा पनि धेर मार्मिक भएको छ। भानुभक्तले पनि यो काण्डको अनुवादमा धेरै अक्कल र सीप लाएका छन्।

भानुभक्तले मूल र बंगलाभन्दा संक्षेपमा यो काण्डको अनुवाद गरेका हुनाले सम्भवत उनले पनि बालीबध न्याययुक्त ठानेका थिएनन् भन्न सकिन्छ कारण लामो वर्णनमा आफ्ना इष्ट देवताका दुर्बलताहरू छर्लङ्गिने सम्भावना रहन्छ। तैपनि भानुभक्तले गरेको अनुवादमा छोटैमा

Vedic Archives Digital Preservation Foundation, Chandigarh

पनि जोड़दार बिचारहरू परिपूर्ण छन्। बाली-हत्या-काण्डको निर्क्योल गर्न-लाई संक्षेपमा यसको इतिहास नजानी हुँदै हुँदैन—

सीताहरण पश्चात् राम लक्ष्मण सीताको खोजी गर्दै ऋष्यमूक गिरिमा पुगे। सुग्रीवले राम लक्ष्मणलाई टाढ़ैबाट देखे पनि बालीको छल हो कि भन्ने शंकाले हनुमानलाई ब्राह्मण कुमारको भेषमा ती नवागन्तुक-हरू को रहेछन् भनी बुझ्न पठाए। हनुमानले राम लक्ष्मणलाई बोकी सुग्रीव समीप ल्याइपुर्‍याए पश्चात् सीताले फुकालेर खसाइदिएका गहनाहरू सुग्रीवले रामलाई सुम्पे। त्यसपछि स्त्रीहीन राम र सुग्रीव दुवैमा समभाव र समावस्थाले मित्रता बस्यो—'बाहाँ जोरि सखा भई' दुवैले मीत्यारी लाए। सुग्रीवले आफू बालीसँग डराएर त्यसरी अलग्गै बसेको कारण रामचन्द्रलाई सुनाए—मायावी नामक मयपुत्र दानव एकदिन बालीका राज्यमा आएर बालीसँग लड़ाइँ गर्न तम्सियो। बालीले एक मुड़की हान्दा सो दानव डराएर भाग्यो। बाली पछि पछि खेद्दै जाँदा सो दानव एउटा गुफाभित्र पस्यो। बालीका साथमा सुग्रीव पनि गएका हुनाले उनलाई गुफाका द्वारमा राखी बाली भित्र पसे। एक महिनासम्म त्यहाँ रूँगेर बस्दा पनि बाली बाहिर निस्किएनन् केवल गुफाको द्वारमा रगतको भल बगेर आयो। त्यसपछि भानुभक्तकै शब्दमा—

"लौ बाली त मरेछ हेर रगतै आयो गुफा देखि ता।  
मैलाई पनि फर्कि मार्छ रिसले गूफा थुनी जाँ म ता॥  
यस्तो बुद्धि भयो र पत्थर ठुलो ल्यायाँ र गूफा थुन्याँ।  
फर्की आउन मन् गरचा पनि सहज् निस्की नसक्नू हुन्याँ॥

यस्ता पाठ्सित खुप् थुन्याँ र म फरचाँ बाली मरचा लौ भनी।  
बिस्तार् सर्व सुनाउँदा मकन ता राजा बनाया पनी॥"

सुग्रीव राजा भएर केही काल पर्यन्त राज्य शासन गरेपछि बाली फर्किएर सुग्रीवसँग साह्रै रिसाई उसलाई मार्न तयार हुँदा सुग्रीव ऋष्यमूक पर्वततिर भागेर गयो। ऋष्यमूक पर्वतमा बालीले आउनु नहुने सराप मातङ्ग ऋषिले दिएका हुनाले सुग्रीव त्यहीं बस्न थालेको थियो।

तदुपरान्त रामचन्द्र सहाय भई बालीलाई हाँक दिन सुग्रीवलाई पठाए। भगुवा भाइको हाँक सुनेर बाली उसलाई शिक्षा दिन तयारी भए। दुइको घमासन युद्ध भयो। सुग्रीवलाई बालीको प्रहार खपी नसक्नु भयो, तापनि—"वाण् छोड़ीकन बालिलाइ अवता मार्नन् प्रभूले भनी। एक् क्षण् ता यहि आसले टिकिगया घुस्सा दिंदामा पनी॥" यता रामचन्द्रलाई

Vedic Archives Digital Preservation Foundation, Chandigarh

"बाली सुग्रिवको दुरुस्त अनुहार् एक् देखि शंका भयो।
मर्नन् मित्र भनेर पो डर हुँदा बाँचेर बाली गयो।"

लक्ष्मणले सुग्रीवलाई एउटा माला चिनु बनाएर पैह्राई पठाउँछन्। सुग्रीव फेरि हाँफ्दै र फाँफ्दै गई बालीलाई हाँक दिन्छन्। दुइ दाजु भाइको फेरि घमासान युद्ध हुन्छ। त्यसैबेला—'रुख्को आड़ गरी तहाँ प्रभुजिले एक् वाण छोड़्या तसै।' अनि संसारमा प्रलय हुन्छ। सृष्टि अँध्यारोभित्र बिल्छ। समस्त जीवित प्राणी रुन्छन्। देवताका निधारमा कलङ्कको टीका लाग्छ। ब्रह्मा बिष्णु महेश निसास्सिन्छन्। लक्ष्मी लाजले मुख छोपेर भँडारभित्र लुक्छिन्। हिन्दू शास्त्रमा ठूलो निर्लज्ज कुरो एकै हरफमा लेखिन्छ जुन लाज छोप्न समस्त हिन्दूहरूले सृष्टिको क्रम चलिरहुञ्जेल निदाउरो मुख लाउनुपर्छ।

'वाण् बज्रचो जब बालिका हृदयमा सर्वाङ्ग बाधा गरी।'

(भानुभक्तको साह्रै राम्रो शब्द चित्र) दुइ घड़ी मुर्छा परेर ब्युँझे पछि आफ्ना सामन्ने उभिएका रामलाई बाली भन्छन्—

'..................रघुनाथ् तिम्रो विराम् क्या गरचाँ।
धर्मै छोड़ि लुकेर आज तिमिले मारचौ म ऐल्हे मरचाँ॥
यो क्या क्षत्रियधर्म हो लुकिलुकी वीर् वाण छोड़्छन् कहीं?
क्षत्री भैकन धर्म छोड़ि लड़न्या एक् आज देख्याँ यहीं॥'

कर्त्तव्यपथ भ्रष्ट भए देवता सम्मले पशु धरीको निन्दा सुन्नुपर्छ। स्त्री विरह कातर जोइटिङ्ग्रे मर्यादा पुरुषोत्तमको अबिवेकी लाछीपना!

'सुग्रिव् हो कति साख् महुँ कति कुसाख् हा दैव क्या मन् दियो।'

हो त बाली रामचन्द्रका साख्खै मितदाजु, मित भन्दा घेर पूज्य! कति घतलाग्दो र बिभ्दो उद्गार!

"मारचौ यो अति चुक् भयो गरुँ कसो बाच्थ्याँ त याहीं बसी।
रावण्लाइ कुलै समेत् सहजमा भिक्थ्याँ म पाता कसी॥"

मर्ने वेलामा पनि बालीको मुखबाट यस्तो वीरोचित वचन निस्कनु उसको वीरताको द्योतक हो।

बालीको साह्रै समर्थनीय उक्ति यहाँ पाइन्छ—

"चोरी मारिलिंदा न यश् हुन गयो मासू न खानू भयो।
धर्मात्मा तिमि पापि झैं हुन गयौ ज्यान व्यर्थ मेरो गयो॥"

हो नै पनि रामचन्द्रले साँच्चै गुन्द्रुकमा जात फ्याँके।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

रामायण र महाभारत जस्ता महाकाव्य खेलाँची होइनन्। महाभारतभन्दा आकारमा सानै भए पनि रामायणका सारगर्भित घटनावली, सुक्ति, रम्य भावसम्पुट, पारिवारिक औ धार्मिक आदर्श एवं नीतिले भारतवासीलाई मात्र होइन समस्त मानवजातिलाई सबै कालमा अनुप्रेरणा प्रदान गर्न र चित्त आकर्षण गर्ने सामर्थ्य राख्छ। यति मात्र होइन भारतवर्षको भारत-त्व प्रकाश गर्न र यस देशको सभ्यता विकाश गर्न पनि रामायण र महाभारतको ठूलो योगदान रहेर आएको कुरो सर्वविदित छ। विगत दुइ हजार वर्ष अघिदेखि भारत बाहिर एशिया र अन्यत्र जहाँ जहाँ भारतका संस्कृति, कला, धर्म र साहित्य प्रचार भएका छन् त्यहाँ त्यहाँ रामायण महाभारत र पुराणका उपाख्यान र आदर्शको प्रचार र प्रतिष्ठा भएको छ। अनि यस्ता महत्वपूर्ण महाकाव्यका नायक श्रीरामचन्द्र अग्नि परीक्षामा चोखी ठहरिएकी सीतालाई त्यागे झैं निर्दोष बालीलाई लुकेर छलद्वारा मारी कहिल्यै नमेटिने कलङ्कको टीको आफ्नै हातले आफ्ना अनुयायीहरूका निधारमा लाइदिएका छन्।

यसरी बाली-हत्याकाण्डमा रामचन्द्र सरासर दोषी थिए भन्ने कुरो प्रमाण गर्नुभन्दा पहिले सुग्रीव दोषी थिए भन्नु अति आवश्यक छ। अनि दोषीको पक्ष लिने मानिसलाई दोषी वा निर्दोष ठहराउने कुरो पछि आउँछ।

रामायणमा विभिन्न प्रकारका आचार-व्यवहार भएका दाजु-भाइहरूको वर्णन पाइन्छ। दाजुले राज्य गर्नेपर्छ भन्ने ढिपीवाल 'पिर्तै बाँध्छु पैले' 'अब भरतध्यैं गर्दछु लडाइँ' भन्ने लक्ष्मण भाइ, भाइ शक्तिका आघातले मुर्छा पर्दा लौ मरिगो बिस्रो भनी ग्वाँ ग्वाँ कोहोलो मच्चाएर रुने राम दाजु, विभीषण जस्ता दही-चिउरे भाइ र 'घर ज्वाइँलाई खानकै धन्दा' भने झैं दाजुलाई रणसंकट परिसक्दा घुर्दै सुत्ने कुम्भकर्ण जस्ता भाइ, दाजु भाइमध्ये को शक्तिशाली भनी बल दाँज्न उड़ेर सूर्य भए ठाउँ पुग्न लाग्दा भाइ जटायु सूर्यका तापले मुर्छित् हुन आँट्दा आफ्ना पखेटा डढुञ्जेल भाइलाई ओताएर छाया दिने सम्पाति, पराइ-सँग मित्यारी लगाई आफ्नै दाजु मार्न लाउने सुग्रीव, यी सबै विचित्रका दाजु-भाइहरू हुन्।

बाली र सुग्रीव दुइ दाजु-भाइमा विद्वेषको मूल कारण सुग्रीव हुन् र सुग्रीव दोषी थिए भन्ने कुरो यी तलका तथ्यहरूद्वारा प्रमाण गर्न सकिन्छ—

Vedic Archives Digital Preservation Foundation, Chandigarh

सर्वप्रथम, सुग्रीवलाई राजा हुने ठूलो लोभ थियो। त्यसैकारण दाजु बाली राक्षस मार्न गुफाभित्र पसेका बेला मौका छोपी त्यसको मुख ठूलो ढुङ्गाले थुनिदिएर सुग्रीव फर्किए। बाली भित्रबाट ननिस्कुन्जेल सुग्रीवले जहिलेसम्म भए पनि त्यहीं कुरेर बसिरहनुपर्थ्यो। गुफाभित्रबाट बगेर निस्केको रगतको भल बालीको होइन भन्ने वास्तविक कुरो सुग्रीवलाई पक्का बिश्वास भएको हुनुपर्छ। कारण सो राक्षस बालीलाई मार्न सक्ने बलियो थिएन—'बाधा पाई डराइ भागि उ गयो लाग्यो (बाली) पछाड़ी तसै।' त्यसबाहेक रावण जस्तो पराक्रमी दिग्विजयी पुरुषलाई आफ्ना पुच्छरमा गुजुल्ट्याएर बालीले टिप्दै फ्याँक्दै गरेको घटना र बालीका अन्य पराक्रमहरूको सुग्रीवलाई सम्पूर्ण ज्ञान थियो।

राज्यमा फर्किएर सुग्रीवले आफूले राखेको ढुङ्गाको कुरो चाहिं नगरी खुलस्ता 'म फिर्थ्याँ बाली मर्थ्यो लौ भनो' भनेका बाट उनले राज्य प्राप्तिकै निम्ति प्रयास गरेको बुझिन्छ। बाली मरेको यथोचित यथेष्ट र पक्का निधो नपाई नै यस्तो हो-हल्ला मचाउने सुग्रीव स्वार्थी, छली, कपटी र अविश्वासी हुन्।

द्वितीयतः सुग्रीवले बालीलाई मारेरै बदला लिनुपर्ने कुनै कारण देखा पर्दैन। बालीले पनि सुग्रीवलाई कहिल्यै पनि मार्नेलाई चाहिं दागा धरेनन्। यदि मार्न चाहेकै भए सुग्रीवसँग प्रथम चोटि भिड़िंदा नै उनी मार्नसक्थे। बालीलाई गुफाभित्र बन्द गरिराखेर आफू एक्लै भागेर आई राजा भएकोमा भने बालीले सुग्रीवलाई सबै सभासदकै सामुन्नेमा बेस्सरी गाली गरेका थिए। सुग्रीवको दोषी र कपटपूर्ण हृदय शंकालु भई आफैं भागेर ऋष्यमूक गिरिका आश्रयमा बसेका थिए।

'उसदिन् देखि डराई याहिँ म रह्याँ मेरी त पत्नी पनी।
वल् जफ्ती सित भोग गर्छ गएँ क्या पुग्दैन जोर् तैपनी॥'

यसबाट के कुराको टुङ्गो लाग्छ भने सुग्रीवलाई बालीले खेदेका र सुग्रीव आफैं लघारिएर कुनै शक्तिको सहारा पाई बालीलाई जित्ने दाउ हेर्दै ऋष्यमूकमा बसेका थिए। यो कुरो रामचन्द्रसँग भेट हुने बित्तिकै उनले बाली मार्न सक्छन् सक्दैनन् भन्ने शक्ति अडकल सातवटा तालका रुख काँड़ले छेड्न लाउनुबाटै स्पष्ट बुझिन्छ।

सुग्रीवकी स्वास्नी बालीले बलजफ्ती राखेका कुराको जहाँसम्म प्रश्न छ यस्तो प्रसंग रामायणमा अन्यत्र कहीं पाइँदैन र बाली जस्ता

Vedic Archives Digital Preservation Foundation, Chandigarh

धर्मभीरु पुरुषबाट यस्तो अनुचित व्यवहार हुने शंका सम्म पनि गर्न सकिँदैन। बंगला रामायणमा सुग्रीव स्वयं बालीको परिचय रामलाई यसरी दिन्छन्—

'ज्येष्ठ भाइ बालि राजा विक्रम सागर।
धर्म्मे कर्म्मे सदा रत समरे तत्पर॥'

बरू आफू मात्र भागेर आफ्नी स्वास्नीलाई एक्लै बालीका आश्रयमा छोड़ेर आएका सुग्रीवले दाजुलाई 'बुहारी राख्यो? भनी अपटिक मात्र लाएको हुनसक्छ।

आफू राजा भइसकेपछि स्वार्थी सुग्रीव आफ्ना मीत रामचन्द्र-लाई सीता खोज्न सहाय गर्ने बचन दिएको कुरो भुल्छन्। आफूलाई राजा सम्म बनाउने मित्रको काम गर्ने संकल्प हनुमान र लक्ष्मणले 'बाली झैं हुन मन् छ की' भनी स्मरण गराएर तातो लाउनुपर्ने सुग्रीव साँच्चै नराधम हुन्।

सुग्रीव दुर्बल, कातर, टपरटुय्याँ र अवसरवादी 'जता मल्खु उतै ढल्कूँ' भन्ने पाराका थिए। भाइ सुग्रीवका यस्ता कमजोरी बालीले पहिल्यै बुझेका थिए। यदि सुग्रीव योग्य हुँदा हुन् र प्रजालाई सन्तोषपूर्वक पालन गर्न सक्दा हुन् ता उनैलाई राजा बनाउन बाली कदाचित् चुक्ने थिएनन्—

"सुग्रीव् कुन् बलियो छ पाजि भगुवा त्यो लड्‌न मनसुब् लिन्या।
तेस् पाजीकन डाकि आज कसरी यो राज्य मैले दिन्याँ॥"

यस बाहेक बालीका राज्यका सारा बानर प्रजामा सुग्रीवलाई राजा बनाउने चाहना थिएन। सुग्रीव जस्ता भीरू दुर्बल पुरुषलाई राजा बनाउनु भन्दा बरू बालीपुत्र अङ्गदलाई राजा बनाए राज्य न्यायपूर्वक, सुचारू रूपले र सशान्ति चल्न सक्छ भन्ने कुरो बानरहरूलाई विश्वास थियो। त्यसैले बालीको मृत्यु हुने बित्तिकै उनका साथमा भएका प्रजाहरू तुरुन्त राजमहल फर्किएर महारानी तारासँग बिन्ति गर्छन्—

"यो राज् अङ्गदलाइ बक्सनुहवस् ढोका सहर्‌को थुनी।
बस्छौं जल्दि हुकुम् हवस् हजुरको क्या हुन्छ धेरै गुनी॥"

माथिका तथ्यहरूबाट सुग्रीव, पाखण्डी, कृतघ्न र अयोग्य थिए भन्ने कुरो छ्याङ्गै देखा पर्छ। यस्ता कापुरुषसँग मित्यारी लाएका रामचन्द्र-को पनि मति भ्रष्ट भएको कुरो यसरी खुट्टिन्छ—

Vedic Archives Digital Preservation Foundation, Chandigarh

सर्वप्रथम, बाली र सुग्रीवका बिचको मनोमालिन्य र विद्वेषको कारण राम्ररी जाँच बुझ नगरी सुग्रीव (दुराचारी) लाई खुशी पार्न बाली मारी राज्य दिलाउने (अभ्युदय) भाकल गर्नु रामको ईश्वरीय सिद्धान्त विपरीत महान् भूल हो। दुनियाँका अपवादकै डरले प्राणाधार सीता त्याग गर्न सक्ने होहोरेवाल रामचन्द्र दुनियाँलाई रिझाउन नै विवेक-अविवेकको ख्याल नराखी बाली मार्न तम्सिएका हुन्—

"हे सुग्रीव सखे मलाइ दुनियाँ भन्नन् मित्यारी गरी।
कुन् चीज् सुग्रिवलाइ दीकन गया आपत्ति तिन्का हरी॥"

द्वितीयतः, बालीलाई मार्नै थियो त रामचन्द्र आफैं बालीका समीप गएर उनले गरेका दुष्कर्महरू स्वीकार्न लाउनुपर्ने थियो। बालीका अघिल्तिर एकै पल टिक्न नसक्ने लुत्रे सुग्रीवलाई निमित्त बनाएर हुँकार्न पठाउने कुनै प्रयोजन नै थिएन। यदि त्यसो नगरेको भए अनाहकमा बालीको प्राण जाने थिएन र रामकै कार्यसिद्धि हुन पनि धेरै सुगम हुने थियो। रामचन्द्र भीरु भई रूखका आड़मा नलुकेका भए अवश्य बाली उनका अघिल्तिर पस्निने थिए—

'ताहाँ छन् रघुनाथ् भन्या चरणमा पर्न्याछु चाँड़ै तसै।'

अन्त्यमा धेरै विद्वान्हरूको ठनाइ के छ भने बाली-हत्या-काण्ड धार्मिक दृष्टिकोणमा अशोभनीय भए पनि राजनैतिक दृष्टिकोणमा सर्वथा युक्तिसंगत छ। तथापि राजनैतिक दृष्टिकोणमा पनि बाली-बध अर्धेलो नै हुन्छ—

'न सुप्तं न विसन्नाहं न नग्नं न निरायुधम्।
नायुध्यमानं पश्यन्तं न परेण समागतम्॥'

(मनुस्मृति ७/९२)

अर्थात् युद्धभूमिमा निदाएका व्यक्ति, युद्ध विमुख, नाङ्गा, अस्त्र-विहीन, लड़ाइँको रमिता हेर्न आएका र कुनै अर्कैसँग लड़्न व्याप्रृत भएका मानिसको कहिल्यै बध गर्नुहुँदैन।

यसरी हाम्रा मर्यादा पुरुषोत्तम रामचन्द्र स्वास्नी प्राप्तिका निम्ति अन्धो भई एक ठाउँमा साह्रै चुकेका छन्। यो कलङ्कलाई अब सृष्टिका अगण्य अँध्यारा रातहरूका कालिमाले पोतेर पनि पचाइदिन सक्दैन र अझ टड़्कारो भइरहन्छ सायद!

Vedic Archives Digital Preservation Foundation, Chandigarh

बालीले मृत्युदण्ड पाउनुपर्ने कारण रामचरितमानसमा गोस्वामी तुलसीदासले यसरी दिएका छन्—

"अनुज बधू भगिनी सुतनारी। सुनु सठ कन्या सम ए चारी॥
इन्हहि कुदृष्टि बिलोकइ जोई। ताहि बधे कछु पाप न होई॥"

फेरि—

'सेवक सठ नृप कृपन कुनारी। कपटी मित्र सूल सम चारी।'

उपर्युक्त कारणहरूमध्ये बालीले 'अनुजबधू' प्रति कुदृष्टि राखेको थिएनन् भन्ने कुराको पहिल्यै प्रमाण भइसकेको र दोस्रो पदमा बालीप्रति प्रयोग गरिएको 'कपटीमित्र'-को लाञ्छना बालीमा चरितार्थ नभई 'बुमराङ' जस्तै वा रामको काँड़ जस्तै फर्की आएर सुग्रीवकै टाउका वरिपरि फनफनी घुम्छ। यस बाहेक 'ताहि बधे कछु पाप न होई।'-बाट तुलसीदासलाई पनि बाली-हत्या युक्तिसंगत लागेको थिएन भन्ने कुरो व्याङ्ग हुन्छ। तुलसीदासको विवेकले बाली-हत्या समर्थन गरेको हुँदो हो ता 'त्यस्तालाई मारे पनि केही पाप लाग्दैन' नलेखेर 'त्यस्तालाई मार्नै पर्छ' भन्ने आशयको उत्तरपद राखेको हुनुपर्थ्यो। भानुभक्तले भन् बाली-बध अघि यस्तो नीति वाक्य कहीं राखेका छैनन्। घाइते बालीका कुरा सुनी लाजमर्नु हुँदा रामचन्द्र पछि भन्छन्—

'पाप्‌को डर् रतिभर नराखी तइँले खुस्सै बुहारी हरिस्।
सोही पाप प्रकट् भयो र अहिले त्यै पापले पो मरिस्॥'

बंगला रामायणमा ता बाली-हत्याका विरोधमा कृत्तिवास खुलस्त दुःख प्रकट गर्छन्—

'कृत्तिवास पण्डितेर थाकिल विषाद।
धार्म्मिक रामेर केन हइल प्रमाद॥'

यसरी दक्षिण भारतको किष्किन्धापुरीमा एउटा अन्यायपूर्ण ठूलो संग्रालो मच्चियो। श्रीरामचन्द्रको आदर्श अनुसरण गर्ने समस्त हिन्दू जातिलाई रामचन्द्रले नै एउटा कलङ्कको टीका लाइदिई सृष्टिको क्रम चलुञ्जेललाई कमजोरी बनाइदिए। सती साध्वी अबला तारा अनाथ भएर रूँदै भूइँमा लुट्पुटिँदै पतिको मृत शरीर अँगाली विलाप गर्न लागिन्—

Vedic Archives Digital Preservation Foundation, Chandigarh

"..................रघुनाथ् फेर् वाण ऐल्हे धरी ॥
मारीदेउ मलाइ जान्छु म पनी मेरा पतीका सँगै ।
खोज्छन् स्वर्ग विषे मलाइ पतिले काहाँ म बस्छु नगै ॥
पत्नी सीत वियोग् हुँदा यति विलाप् हुँदा रह्याछन् भनी ।
मालुम् सब् त तहीं छ फेर् म भनुँ क्या पर्दैन भन्नू पनी ॥
पत्नीदान् गरि पुण्य हुन्छ जति सो मिल्न्या छ पुण्यै पनी ।
तस्मात् आज अवश्य हान शरले जावस् पती थ्यैं भनी ॥
... ... ... ... ... ... ... ... ... ... ... सुग्रीवजिलाई पनी ।
भन्छिन् लौ गर राज्य आज खुसिले मित्ले दियाको भनी ॥"

कस्तो मुटु घोच्ने दृश्य! सहन सकिने सम्म सांसारिक दुःखको सीमाना! अनि त के रह्यो र मूर्तिवत् उभिएर हेरिरहेका स्वयं लक्ष्मण पनि ग्वाँ ग्वाँ रुनथाले—

'थाकूक अन्येर कथा कान्देन लक्ष्मण ।'

अविवेकी रामको अर्को नै के उपाय थियो र लुते दर्शनद्वारा ताराजीको मन बुझाइदिने चेष्टा गर्नथाले—

"जीवै हो पति भन्दछचौ पनि भन्या मर्दैन जीव् ता कहीं ।
देहै हो पनि भन्दछचौ त किन शोक् गर्छचौ छ ऊ ता यहीं ॥"

यस्ता दुइ मुखे सान्छेले ता सीता हरिएपछि किन जङ्गल-जङ्गलतिर कोहोलो मचाउँदै रोएर हिँड्नुपरेको!

यस्तै भयो! हाम्रा आदर्श, मर्यादा पुरुषोत्तम रामचन्द्रले जीवनमा घेरैपल्ट विवेकयुक्त काम गर्न चुकेका छन् र बाली-हत्या उनको सबैभन्दा महान् अविवेकी दुष्कर्म हो, भूल हो भन्नमा कुनै पनि विवेकशील मनुष्य पछि हट्दैनन् ।

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

श्री हृदयचन्द्रसिंह प्रधान—

# भानुभक्तको गद्य-शैली : एक चिट्ठी

कुनै पनि भाषाको वाङमयी विकासको चिन्ह गद्य नै रहेछ। गद्यमा विशेष विकास नभईकन पद्यमा यद्यपि चिह्लो देखा परिसके तापनि त्यो तत् भाषा-साहित्यको प्राथमिक काल नै हो। वास्तवमा पद्य साहित्यको प्रारम्भिकता नै हो : जुनसुकै भाषामा पनि पद्यबाट साहित्यको आरम्भ भएर गद्यको विकासमा उसको जवानी बह्र टल्कन्छ। त्यसैले भनिएको छ "गद्य कवीनां निकसिं बदन्ति" अर्थात् गद्य नै कविको कसी हो। पद्यमा कविको अयोग्यता र अविशेषता पनि लुकेर टल्कन सक्तछ, गद्यमा त्यस्तो कुनै पनि अयोग्यता र अविशेषता छिप्न सक्तैन, झन् अघाड़ि परेर भण्डाफोर गरिदिन्छ। एक अक्षर एक शब्दसम्मको यताउति हुन पनि गद्यमा गुंजायश छैन। पद्यको छन्द मिलाउनलाई वर्ण र मात्राको मिलान भए पुग्छ तर शब्द तल-माथि, यताउति जे पनि गर्न पाइन्छ, तर गद्यको छन्द मिलाउनलाई त्यस्तो आर्षताको केही सुविधा छैन : उन्नत मस्तिष्क, भावुक हृदय र शिल्पी हात खुस्केर छन्द नमिलेको एक हरप मात्र पनि मामुली पाठकले नै केलाउन सक्ने हुन्छ। यदि पद्यमा भए रचनाकार यसरी अलि-अलि फुस्केको सित्तिमित्ति साधारण मानिसलाई सजिलोसित पत्ता लाग्न सक्तैन। झन् ठूला रचनाकारको पद्य भयो भने त त्रुटियुक्त भए पनि पाठक राम्रै अर्थ देखेर सुन्दर विश्लेषण गर्नमा मगजी कसरत गर्न थाल्छन्, तर गद्यको एकै पंक्ति त्रुटि पनि पाठक टाड़ै-बाट देखेर टिप्पणी गर्न पुग्छन्। तसर्थ गद्यको सृजना गर्न विघ्नै गाह्रो छ। त्यसैले गद्यको सफलताले भाषामा मात्र होइन, देशैमा चाँड़ै विकास ल्याउँछ, यो ध्रुव-सत्य हो।

भानुभक्तको गद्य-साहित्यमा आजसम्म कुनै कृति देखा परेको छैन। उनी पद्यकै मात्र कर्ता वा कवि हुन्। तर हालै नेपाली भाषा प्रकाशिनी समितिबाट प्रकाशित भएको "नेपाली गद्य संग्रह (तेस्रो भाग)"-मा (श्री बालकृष्ण समजीबाट प्राप्त) आफ्नो छोरा रमानाथको नाउँमा लेखिएको भानुभक्तको एउटा चिट्ठी छापिएको छ। सो चिट्ठी गद्य-भाषामै लेखिएको छ। गद्यको नाउँमा भानुभक्तको लेखाइ अहिलेसम्म बस त्यही एउटा चिट्ठी हो। त्यस गद्यमा लेखिएको भानुभक्तको चिट्ठीको भाषा, शैली, विचार र स्वर हेर्दा यी पत्रकार अर्कै भानुभक्त जस्ता देखिन्छन्। एउटा

Vedic Archives Digital Preservation Foundation, Chandigarh

कविले लेखेको चिट्ठी जस्तो कदापि छैन। न भाषामा केही परिष्कृति वा सरसता छ, न शैलीमा सौष्ठव छ, न विचारमा नै केही पोख्तपना छ। अत्यन्त साधारण, असभ्य र जंगली मानिसबाट लेखिने चिट्ठी र भानुभक्तको उक्त चिट्ठीमा विशेष फरक छैन। यसबाट यो सिद्ध हुन्छ कि गद्यमा सफलता पाउन निकै गाह्रो छ र गाद्यिक सफलता नै साहित्यको विकासको विम्ब हो। भानुभक्तको उक्त गद्य-पत्र हेर्दा उस बखतको नेपाली साहित्यको शिशुता र नेपाली जाति र देशको स्तर राम्रै झल्कन्छ। सो उनको चिट्ठी यही हो:—

स्वस्ति श्री चिरंजीवि नाति (नि ?) रमानाथ शर्माणि श्री भानुभक्त शर्मण: शुभाशीर्वादा: सन्तु उप्रान्त पढ़्दैनस् भन्दा (न्या ?) सुन्दछु, मेरा कंढ़ा परि जति उमलंछस्, यहाबाट म क्या गरू, म तहा आयापछि तैले नपढ़्याको ठहराञा भन्या, वावै, तेरा ज्यानको आसा नराखि लात मान्र्याछु, कि तैले मर्नुपर्ला कि मरि सुख पाउन्याछस्, कि पह्रि सुख पाउन्याछस्, यो बुझि, कि तैले मर्नु कि पर्न्हु तेरी आमाले पनि यो चिट्ठी हेरि साझ बिहान तलाइ लात मारी घोकन लावोस् आज तेरी आमाको चेत आयेनन् र तलाइ षेलन दियी भन्या मैले लातमारी मर्नान्त पर्याको तमासा हेर्लि हेर्वावै पह्निनस् भन्या तेरो जिउ खर्ज गराईछोडुला. र ति जति तेरा माया मान्न्या छैन, सो जानी तेरि आमाले तलाइ अदमा राषि घोकाउनु तैले घोकनु आजसम्म कति पह्निस् आहाँसम्म पाठ पुर्‍यायाको छु भनि लेखि पठा अघि पह्नायाको पनि बिर्सिस् कि आउँछ तेरा हातले लेषि पठा नहि भन्या तेरो ज्यान साबुद राषन्या छैन, धेरै क्या लेषु किमहिकं मिति मार्ग शुद्धि १ रोज ३ मुकाम महाबौद्ध टोल शुभम्,

(पुनश्च:)

तहाँ पढदैन भन्या मानिस साथलाई मंसिर भित्रै आयाँ पठाइदे म आउँदा सँगै लि आउँला आहि पढाउँछु ताँही पढ़छ भन्या वढ़िया हो,

अहिले नेपाली भाषामा गद्यको विकास जोड़तोड़सित बढ़्दैछ, त्यसैले नेपाली साहित्य र जाति वा देशको स्तर पनि माथि उठ्दै आइ-रहेको हामी पाउँदछौं। तर हामीले यो कदापि बिर्सन हुँदैन कि नेपाली साहित्यको उत्तरोत्तर विकास भानुभक्तकै कदम हो।

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

श्री कृष्ण प्रसाद भट्टराई, दार्जीलिङ—

# 'बधूशिक्षा'-भित्रको भानुभक्त

नेपाली साहित्यमा भानुभक्तका कृतिहरूमध्ये 'बधूशिक्षा'-को सबैभन्दा बेसी उपेक्षा देखिन्छ। कति ता बधूशिक्षा भन्नासाथ नाक खुम्चाउँछन्। 'बधूशिक्षा'-मा भानुभक्तले नारीलाई साह्रै हेय दृष्टिले हेरेका छन् भनेर कति भन्छन्। तर यी सबै दोषारोपण आफ्नै रिक्तताको परिचायक जस्तो लाग्छ। 'बधू' को हो अनि नेपाली संसारमा यसको कुन स्थान छ त्यसलाई अध्ययन नगरी भन्नु आफ्नै हेल्चेक्र्याइँको पुष्टि गर्नु हो।

साधारणतः भानुभक्तलाई 'बधूशिक्षा'-मा दोष लाउनाका कारण र आधार यिनै हुन्:—

१। "सो ईश्वर् पति हुन् भनेर पछि त्यो भक्ती पतीमा धरून्" भनेर पतिलाई ईश्वर बनाई स्त्रीलाई दासी बनाएको छ भन्ने,

२। "अल्सी दूर गरेर नारिहरूले थान्को र मान्को गरी" भनेर नारीलाई सारा घरको बुहार्तनले थिचिएको छ भन्ने, र

३। "हाँस्नू छैन कदापि नारिहरुले वेश्या हुने हाँस्तछन्" भनेर हाँस्ने बोल्ने जस्ता जन्मसिद्ध अनि प्राकृतिक अधिकारबाट पनि नारीलाई वञ्चित गर्न खोजिएको छ भन्ने।

यसरी सोझो दोष हेर्नेलाई भने यहाँ प्रशस्त ठाउँहरू फेला परेका छन्। आज पश्चिम मात्रै पढ्नेहरूले नेपाली जगतमा स्त्री स्वतंत्रताको नारा पनि दिन्छन्। नेपाली नारी कुन धर्म, जाति र संस्कृतिमा हुर्केका छन् अनि तिनीहरू वास्तवमा स्वतंत्र छन् कि छैनन्, आदिको ख्याल भने आजका समालोचकमा प्रायः हराउँदै गएको देखिन्छ। उनीहरूको हरेक समालोचना पश्चिमको चश्मा शक्तिले मात्र हुन्छ। कतिका छँदा खाँदाका आँखा पनि अनावश्यक वैज्ञानिक अनि आधुनिक बन्ने फेशनले बिगारिएका छन्। एउटा समालोचनामा पश्चिमी उद्धृत पंक्तिका ताँती छुट्छन्। यसो हुनु हुन्न भन्ने होइन; तर यसमा आफ्ना निजी मान्यता र विचार मार्नु असाध्यै अप्रिय कुरो हो। चाहे ग्लासले होस् चाहे फुलोले होस् यसमा हाम्रो दृष्टि दोष हुन नपाओस्। स्वस्थ्य नेत्र राख्न सके, अनि त्यसैले हेर्न सके हामी हाम्रा नारीलाई छर्लङ्ग देख्न पनि सक्छौं। हाम्रा

Vedic Archives Digital Preservation Foundation, Chandigarh

नारी सँधै स्वतंत्र छन् कुनै युगमा पनि दासत्वले किचिएका छैनन्। यस कुरामा भने हामी आजका जुनसुकै विकशित देशसित पनि पौंठे जोरी खेल्न सक्छौं। गरीबी र सामन्तकालीन् शासनले उसको विकाशमा भाँजो परेर कष्ठित भए पनि नेपाली नारीमा छिमेकी अन्य जातिका नारीमा झैं पर्दाप्रथा छैन। अतीत झैं नेपाली वीराङ्गनालाई आज युद्ध क्षेत्रमा पुरुषसँग कुम जोड़ेर भिड़ने मौका नमिले पनि आफ्नो दुःख सुखको जीवन-संघर्षमा पुरुषको दाँजो ली, ढाकर र थुन्से बोकेर भए पनि, उनीहरूले ओह्राली उकाली बाटाको प्रतियोगितामा कम सामर्थ्य देखाएका छैनन्। केही व्यवसायिक सुविधा बाहेक कोठा र क्लब, विलास र तलाकमा साँगुरिन लागेका पश्चिमी नारी आफूलाई बढ़ता स्वतंत्र देखाउँछन् भने, पुरुषसँगै सहभागी भै बाटो घाटो र खेतीबारीदेखि घरवारसम्म फुक्का भै गर्ने र मर्ने अनि सस्तो विलासको दासत्वलाई ढिक्किने नदिने नारी उनीहरूभन्दा अझ बेसी स्वतंत्र देखिन्छन्। उत्कृष्ट स्वतंत्रताको आदर्श अरूले-भन्दा बढ़ता नेपाली नारीले विश्वलाई पढ़ाउन सक्तछे। आर्थिक दरिद्रताले गर्दा नेपाली नारीले कति ठाउँ खुम्चनुपर्ला अनि यसको हाँसो पनि होला तर नेपाली स्त्री आफ्नो स्वतंत्रतामा भने कहिल्यै अबला छैन।

यस कुराको ख्यालै नराखी आजका तथाकथित शिक्षित हामीहरू पश्चिम पुगेका छौं। साँच्चै भन्ने हो भने शहरका शिक्षित व्यक्तिहरू-भन्दा बेसी नेपाली ग्रामीण नारीले स्त्री-स्वतंत्रताको अर्थ बुझेका छन्। कुनै निर्धो र गरीब हुँइन्जेल उसको प्रतिभा बौलठ्ठी देखिए झैं आज विकशित देशका नारी नेत्रले यस विशेषतालाई बिम्लाटो देख्लान्। यसरी बिम्लाटो देख्नेले यसको उल्टो खेद्नु पनि कुनै अनौठो कुरो होइन। तर पश्चिमी नारी पढ़्ने हामीले भने त्यही टेप रिकर्डबाट नेपाली नारीको विवेचना गर्नु ता आफ्ना विवेक र न्याय शक्ति माथि नै अत्याचार गर्नु हो। हामीले पूर्व पश्चिम दुवै पढ़े पनि आफ्नाको निरीक्षण आफ्नै आँखाले गर्न सक्नुपर्छ। कागले कान लग्यो भन्दैमा कागका पछि पछि दगुर्नु ता भन्छौं तर आफ्नै कान छाम्न भने हामी धेरै चोटि बिर्सन्छौं। यसको अर्थ यो होइन अर्काले भनेको नसुन्नु अनि यो आज्ञै भए पनि रोकिन्न, कान हुनेले सुन्छ। फेरि कान छ भन्दैमा सुनिमात्र हिंड्दछ, भन्नु चाहिँ छैन भने त्यो सुनाइ के भयो र! त्यस्तै भन्नु ता छ तर त्यही मात्र दोहोरिन्छ अनि आफ्नो चाहिँ छैन भने त्यो भन्ने, आदर पाए पनि यन्त्र जड़ित मूर्ति हो व्यक्ति होइन।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

आज हाम्रा पूर्वी (विशेष भारत तथा नेपालको) साहित्यमा यस्तै मूर्तिले ठाउँ ओगट्न लागेका छन्। पाश्चात्य देशमा वैज्ञानिक उन्नतिले आकर्षणको राँको बालेको अवश्य सत्य हो, तर हामी त्यस चमत्कारमा दुर्भाग्यवश पुतली बन्न पुगेका छौं। सायद यही उत्सर्ग आधुनिक पूर्वीय विद्वान्हरूको ठूलो होला। तर यसले पूर्व उठ्दैन तर अझ भासिन्छ। भूगर्भ विद्याको जतिसुकै विद्वान् भए पनि बेलायती माटो चाखेर नेपाली माटो चिन्न सकिन्नँ। त्यस्तै मनन र चिन्तन नगरी गाढ़ी राखेका हाम्रा विद्वता थुप्रैछन् तर काम लाग्दैनन्। पश्चिमी विचारको हामीमा यति ठूलो भीड़ लाग्यो, हामीले आफ्नो विचार नै हरायौं। मौका प्रशस्त छ हामी अझ सह्मालिन सक्छौं। हामीले अझै हाम्रो पनि आफ्नै मस्तिक छ, मान्यता छ, अनि आफ्नै हृदय र अनुभूति छ भन्ने कुरा भुलेनौं भने पश्चिमको कोलाहलमा हामी हराउँदैनौं। अनि हामीले आफ्नालाई मात्र होइन अर्कालाई पनि आफ्नै आँखाले हेर्‍यौं भने मात्र हाम्रो साँचो हेराइ हुनेछ। यसर्थ भानुभक्तको 'बधूशिक्षा' हेर्नलाई पनि यस्तै आँखा हामीलाई चाहिएका छन्।

अब यहाँ आएर हामी 'बधूशिक्षा' हेर्ने स्थितिमा पुग्यौं। भानुभक्त-को 'बधूशिक्षा' मित्रका घरमा लेखिएको हो। रात्रिको समय १९१९ साल थियो। झगड़ा र रड़ाको थियो। जहाँ कङ्गाल वहाँ चण्डाल भन्ने उक्ति यहाँ थिएन, घर सम्पन्नै थियो। यस झगड़ामा पुरुष मुछिएका थिएनन्, स्त्रीमै सीमित थियो। स्त्रीहरू अरू थिएनन, आफ्नै घरका सासू-बुहारी थिए। घरका आदर्श र मर्यादा अतिक्रम भएका थिए। घरमा पाहुना थिए, त्यसमा पनि आफ्न आदरणीय मित्र। साधारणतः झगड़ालु परिवारमा पनि पाहुना-पाछा आएका बेला घरले शान्ति पाउँछ; तर यहाँ यस नियमको पनि सर्वथा उल्लङ्घन थियो। धर्म, कर्त्तव्य र आदर्शको ख्याल राखे झगड़ा निचोरिन्छ; तर यहाँ यसो भएन। आर्य नारीका केही आदर्श छन् तर यहाँ देखिएनन्। यो बाहुनको घराना थियो तर ब्राह्मण धर्मको ज्ञान थिएन। जातिले धर्मको गुरू घराना तर यो कार्यमा देखा परेन। यी सब 'बधूशिक्षा' लेख्ने ठाउँको स्थिति परिस्थिति जे भन्नुहुन्छ त्यही हो। अब यस्तो स्थितिमा हामी कस्तो काव्यको कल्पना गर्नसक्छौं?

यो 'बधूशिक्षा' यथार्थताले जन्माएको हो। त्यो युग स्त्री-स्वतन्त्रताको विरोधी थिएन। नेपाली स्त्री सँधै र सबै युग स्वतन्त्र छन्।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

छिमेकी भारतमा अने मोगल साम्राज्यले यो स्वतन्त्रतालाई कैद गर्‍यो। भाग्यवश मोगल नेपालमा ढिम्कन सकेन अनि राजनैतिक स्वतन्त्रताको साथै नारी स्वतन्त्रता बाँचेरै रह्यो। यही खुला स्वतन्त्र वातावरणमा भानुभक्त पनि पालिएका थिए। त्यसो हुँदा भानुभक्तमा स्त्री-स्वतन्त्रता विरोधी भावना जन्मने कुरै आउँदैन। त्यतिखेर कतै स्त्रीलाई पुरुषले मिचेर राखेका थिए कि भनौं भने पनि तारापति र भानुभक्त जस्ता लाठे जवानहरूले पनि बलको हस्तक्षेप त्यहाँ देखाएनन्। फेरि बन्धनमा परेको वा पाता फर्काएर लड़ाएको व्यक्तिलाई यहीं सुतिराख कतै पनि नजा भन्ने आदेश वा शिक्षा दिइँदैन, दिएमा यसको अर्थ लाग्दैन अझ उल्टो हाँसो हुन्छ। यस्तै भानुभक्तको 'बधूशिक्षा'-ले पनि बन्धनको बधूलाई शिक्षा दिँदैन। अझ बल प्रयोगलाई चिताउँदै नचिताउने 'बधूशिक्षा'-ले स्त्री-स्वतन्त्रताको झन् ठोस प्रमाण दिएको छ। यसले पनि स्पष्ट गर्छ, 'बधूशिक्षा' नारीलाई लगाम लगाउन होइन, तर घरमा स्थायी शान्तिको जन्म दिनलाई हो। 'बधूशिक्षा'-को जुन उपदेश छ, त्यो नयाँ थिएन, आफ्नै धर्म र मर्यादालाई सम्झाइएको थियो। 'बधूशिक्षा'-को आदर्श पौराणिक आदर्श हो। अनि यही आदर्शमा भानुभक्तीय भावना पनि भिजेको थियो। भानुभक्तले आफ्ना बाजेबाट यस्तै आदर्श विचार र शिक्षा पाए। 'बधूशिक्षा' को बधू झैं उनकी आमाले घर सम्हालिन्। उनका पिताको प्रभुत्व मानी आदर गरिन्, उनका बाजे-बज्यूलाई पूज्य ठानी सेवा गरिन्, घरमा मेल थियो, शान्ति थियो। आचार्यले आफ्नो घर-परिबार यस्तैमा आनन्दित भएको देखे। तर अफशोश उनका मित्रका घरमा भने यस्तो थिएन।

स्त्री झगड़ाले नारी-शिक्षा जन्माइयो, धर्म बिर्सिएकोले धर्म सम्झाउनु पर्‍यो, काम छोड़ी घरको मर्यादा एवं कर्त्तव्यबाट च्यूत भएकाले कर्त्तव्य वोध गराउनुपर्‍यो, अनि साधारण शिष्टाचारको पनि परिचय नपाएकाले शिष्टाचार पढ़ाउनुपर्‍यो। यही खाँचो थियो अनि यही 'बधूशिक्षा'-द्वारा पूरा गरियो।

अब अघि राखेका आरोपलाई अलिकति यहाँ केलाऊँ—

पहिलो आरोप हो स्त्रीलाई पतिकी दासी बनाइयो भन्ने। यो देखाउनेको आधार यिनै 'बधूशिक्षा'-का पंक्तिहरू हुन्—

Vedic Archives Digital Preservation Foundation, Chandigarh

"प्रात:काल महाँ उठेर पहिले ध्यान् ईश्वरैको गरून् ।
सो ईश्वर् पति हुन् भनेर पछि त्यो भक्ती पतीमा धरून् ॥
भक्तीले पति ईश्वरै भनि बुझून् पाऊ-तलैमा परून् ।
पूजा हो पतिको भनेर घरका काम्मा अगाड़ी सरून् ॥"

यो त्यतिखेरको मान्यता हो। आजको शिक्षाले आजकै मान्यता टिपेर दिन्छ। भोलिको मान्यता आजकाहरूलाई थाहा हुँदैन। भोलिको मान्यता थाहा भएन भन्दैमा वर्त्तमानलाई हेर्ने कोही आज दोषी ठहर्दैन। यसर्थ यहाँ भानुभक्त आफ्नै समाजको मान्यता अघि सार्दा दोषी बनिन सक्तैनन्। पतिलाई ईश्वर मान्ने कुरो पौराणिक धर्मशास्त्रको हो। मिल्टन आफ्नो धार्मिक आदर्श बाइबलका आधारमा नै अघि सार्न सक्छन्, प्याराडाइज लष्ट ( Paradise lost ) बाइबल नै छोएर लेखिन्छ, वेद र कुरान समातेर होइन। भानुभक्त जुन धर्ममा पालिएका थिए, त्यही धर्म सम्प्रदायका सदस्य मित्र तारापति पनि थिए। जुन धर्म सम्प्रदायमा तिनीहरू थिए त्यही धर्मबाट उनीहरू शिक्षा दिने लिने गर्न सक्तथे। यही काम भानुभक्तले 'बधूशिक्षा' लेखेर गरे। यसरी पहिलो त आफ्ना समयका मान्यता टिपेकाले उनको औचित्य पुष्टि हुन्छ;

दोस्रो आफ्नै मान्य धर्म ग्रन्थका आधारमा एकै सम्प्रदायक व्यक्तिलाई धार्मिक शिक्षा दिइकोले अझ यो उपयुक्त देखिन्छ।

धार्मिक शिक्षाको आवश्यकता आज ता छ भनिन्छ भने झन् त्यसबेलाको धर्मभीरू समाजमा धर्मको माध्यमद्वारा शिक्षालाई अझ महत्वपूर्ण र प्रभावकारी बनाउन खोज्नु अनावश्यक थियो भन्न सकिन्न। जसरी कार्लमार्क्स सबै कुरा आर्थिक दृष्टिले हेर्न रूचाउँथे अनि यसैलाई सही ठान्थे, जसरी आजकालकाहरू वैज्ञानिक ढकले मात्र जोख्न तौलन खोज्छन् र यसैलाई साँचो मान्छन् त्यसरी नै त्यतिखेरको समाजले पनि धर्मको न्याय र आज्ञालाई मात्र पवित्र, सत्य र सर्वमान्य सम्झन्थ्यो। यही आधारमा अनि यसै हेतुले प्रेरित भै भानुभक्तले आफ्नो 'बधूशिक्षा'-लाई धार्मिक शिक्षाले भरे। कोही पनि आफूले भनेको, दिएको वा लेखेको शिक्षा प्रभावहीन होस् भन्दैन। तब हामी यो कुरा हाम्रा कवि भानुभक्तबाट पनि कसरी आशा राख्न सक्छौं?

कविले शुरूमा उठ्ने बित्तिकै ईश्वरको ध्यान गर्नु भनेका छन्। कुनै धर्मले पनि ईश्वर बाहेक अर्को प्रात:स्मरणीय बताउँदैन। यहाँ पनि

Vedic Archives Digital Preservation Foundation, Chandigarh

कविले धर्मशास्त्रअनुसार ईश्वरलाई सर्व प्रथम स्थान दिए। धार्मिक दृष्टिकोणले यसमा पनि कुनै त्रुटि देखिन्न। अर्को कुरो छ, पतिलाई ईश्वर ठान्नु भन्ने। यसको अर्थ पतिको आदर गर्नु र उसको प्रभुत्वलाई ग्रहण गर्नु हो। यो कुरो तारापतिको घरमा थिएन। पतिको अधीनमा रहने कुरो पौराणिक हिन्दू धर्मले मात्र होइन अरूले पनि भन्छन्। यस्तै बाइबलले पनि भन्छ "पत्नी हो प्रभुमा खुल्ने गरी पतिहरूका अधीनमा रहो" (Wives! submit yourself into your own husband as it is fit in the Lord.—Col. 3:18) हुनता सबै धर्मले यसो भने तापनि आज कुनै धर्मावलम्बी पनि आफ्ना धर्मशास्त्रको आज्ञालाई पालन गर्न तयार छैन। तर यस्तै भए पनि आफ्नो धर्म र धर्मशास्त्रको प्रशंसा गर्न भने कोही अघाउँदैन। आजको यो आडम्बर भए पनि हिजोको त्यो स्थिति थिएन। हिजो धेरै धर्म मान्थे तर धर्म ज्ञान थोरैमा थियो। आज धर्म ज्ञानी धेरै भए तर अनुयायी बिलिँदा छन्। यसउसले हिजोको र आजको धार्मिक स्थिति उल्टो देखिन्छ। यही कुरोले मित्र तारापति र उनको धर्मलाई नाप्न सक्छौं। यदि उनमा धर्म पालन गर्ने आज्ञाकारिता थियो भने पनि उनमा धर्मको ज्ञान थिएन। धर्मको ज्ञान भए उनले आफ्ना परिवारलाई भानुभक्तले दिनुभन्दा अघि नै घरेलु धार्मिक शिक्षा दिसकेका हुने थिए। अनि भानुभक्तले यसो भनिरहनुपर्ने पनि थिएन:—"यस्ले पत्नि बुहारी छोरिहरूको तालिम् गर्‌ौला भनी।" हुनत हिजोआज बाहुन हुने बित्तिकै संस्कृत पढ़ेको र जान्ने हुन्छ भन्ने अखण्ड मत छ, तर यो सब सत्य होइन। बाहुनमा पनि अशिक्षित घराना थुप्रै पाइन्छन्। यस्तै प्रकारका नेपाली जाने पनि संस्कृत नजान्ने तारापति देखिन्छन्। संस्कृत जान्दा हुन् त यसमा लेखिएको धर्म जान्ने थिए। उक्त धार्मिक शिक्षा यिनलाई र यिनको परिबारलाई पहिले नै थाहा हुन सकेको भए झगड़ा भैसके पनि रातभरि चर्किने थिएन। यहाँ पहिलो स्थान पतिलाई थाहा थिएन, त्यसैले पतिको प्रभुत्व त्यस घरमा नभएको देखियो। नत्रता पतिको वास्तै नगरी पत्नी रातभर जाग्रन बस्न सुरिने थिइनन्। शायद पतिले त्यो तुमुल युद्धलाई रोक्ने प्रचेष्टा पनि गरे होलान्; तर रोकिएन। मित्रका अघिको लड़ाइँले उनलाई अवश्य लाजमर्दो पारेको हुनुपर्छ। तर यस्तो हुँदा हुँदै पनि यो काण्ड रातभरि चल्यो। अब भनौं यसमा के कमी थियो? 'बधूशिक्षा'-को आधारमा हामी भन्न सक्छौं—आजको अमोघ अस्त्र विज्ञान भए झैं त्यति खेरको शस्त्र धर्म-ज्ञान थियो। यसैको सर्वथा अभाव नै बिचरा तारापतिको एकमात्र असफलताको कारण भन्न गयो।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

"पूजा हो पतिको भनेर घरका काम्‌मा अगाडी सरुन्" यस पंक्तिले त भानुभक्तको झन् ठूलो दूरदर्शिता झल्कन जान्छ। पूजा केवल पतिको सेवाटहल गर्नु मात्र होइन तर पतिको असल पूजा हो घरको कामकाज सम्हाल्नु। बुहारी बिहानै उठी घरको काममा अघि सरीन भने त्यस घरको अवस्था कस्तो हुन जाला त्यो त हामी सजिलै अनुमान लाउन सक्छौं। यहाँ कविको मनमा यो कुरा आउन कि पतिको पूजा नै हो घरका सबै कामकाज सम्हाल्नु र बिहानै उठी त्यही काममा लाग्नु, कविको दृष्टि घरको सुव्यवस्थामा थियो पतिलाई कज्याउनमा वा होच्याउनमा थिएन भन्ने कुरा स्पष्ट हुन जान्छ।

पौराणिक आधारमा नारीको सबैभन्दा ठूलो धर्म पतिव्रता हो। यही पौराणिक धर्मशास्त्र भानुभक्तको 'बधूशिक्षा'-मा बोल्दछ—

"स्त्रीको धर्म पती मती पनि पती मर्न्या बखत्‌को गति।
बाँचुन्जेल् सुख भोग् पनी बुझि लिंदा को दिन्छ त्यस्‌ले जति॥
स्त्रीका धर्म पती जती त अरु थोक् देख्दैन मन्‌ले रति।
यस् लोक्‌मा परलोकमा सुख दिन्या सो हेरि जान्छन् सति॥"

इत्यादि इत्यादि। यो पति महात्म्य सबै ब्राह्मण सम्प्रदायले संस्कृतमा पाए, प्रचारे। यो भानुभक्तले मात्र गरेनन्, सबै धर्म जान्ने र यस धर्मको हुँदो सोच्नेले आफ्नो धर्मको आदर्शमा आफूलाई सँधै उकाल्ने चेष्टा गरे। यो संस्कृत भाषा-भाषी बाहेक भारतमा विभिन्न भाषा-भाषीका माझमा पनि प्रचारिएको थियो। त्यहाँ पतिव्रता धर्मको पराकाष्ट सती प्रथामा गएर टुङ्गो लाग्यो। यस्तै गरी नेपाली समाजमा पनि 'बधूशिक्षा' 'छोरीलाई अर्ती' इत्यादि द्वारा यही कुरा भनियो। धर्मको न्याय गर्ने परिस्थिति भानुभक्तको स्थितिमा थिएन। न्याय गरेको भए धार्मिक सुधार हुने थियो होला तर त्यसो भएन। पतिव्रताको जोड़ छेत्री, बाहुन र नेवारमा मात्र भएकोले यस अंशले समस्त नेपालीमाथि प्रभाव पार्न भने सकेन। तर यी जातहरूमा भने, पालन गर्न नसके पनि मान्यता अझै छ। शहर बजारका केही छेत्रिनी बाहुनीले लोग्नेका गोड़ा धोएर चरणामृत खान छोड़ेका भए पनि गाउँमा अझै यो चलन पाइन्छ। अरू दिन गोड़ाको पानी नखानेले पनि बिवाहको दिन धर्म-बिधानअनुसार खान कर् लाग्छ। गोड़ाको पानी खाने चलन पतिव्रता स्त्रीमा मात्र नभएर

Vedic Archives Digital Preservation Foundation, Chandigarh

धर्मभक्त पुरुषहरूमा पनि छ। काज-किरिया र कुनै ठूलो धार्मिक अनुष्ठान-मा ब्राह्मणका पाउ धोई चरणामृत खाने र शिरमा लाउने कुनै नौलो कुरो होइन। यसैले स्पष्ट गराउँछ स्त्रीलाई कमारी तुल्याई नीचता देखाउन भानुभक्तले यो लेखेका होइन रहेछन् तर धर्म र धर्म प्रतिको श्रद्धाले तारापतिकी उच्छृङ्खल पत्नीको व्यवहारलाई शान्त गराई आफ्नो धर्म चिनाउन लेखेका रहेछन्। भानुभक्तले मात्र यो नेपालीमा लेखेनन् अरूले पनि लेखेका थिए भन्ने श्री बालकृष्ण पोखरेलज्यूले वीर पुस्तकालयमा पाएको कुनै सत्कवि रचित १७ श्लोकी 'बधूशिक्षा'-ले पनि प्रमाण दिन्छ। त्यहाँ पनि धर्म बोध गराइएको छ अनि "पातिव्रत्य वड़ो बुझि पुरुषका सेवा टहलूमा रहनू" (श्लोक ३) भनी पति महात्म्य उभ्याइएको छ। यसरी सबै प्रकारले हेर्दा 'बधूशिक्षा'-को पूरा धार्मिक शिक्षा नारी प्रतिको दुर्भावनामा नरचिएर धर्म सम्झाई धर्म गरेको देखिन्छ।

अब अर्को लगाइएको दोष छ, नारीलाई बुहार्तनमा जोतेर कजाइयो भन्ने। यो धर्मभन्दा बढ़ता घरेलु शिक्षा हो। यसको आधार हो बिहान उठेदेखि सासू निदाउन्जेलसम्म कार्यमा रत हुनु भन्ने। यसै प्रसंगमा भानुभक्त लेख्छन्—

"अल्सी दूर गरेर नारिहरूले थान्को र मान्को गरी।
काम् काम्मा परिवार लायर विचार् गर्दैरहून् दिन् भरी॥
धागा बत्ति समेत काति टपरी दूना वोहोता पनी।
सिन्का साफ चिरेर राखनु अनी चाहिन्छ काम्मा भनी॥"

यो शिक्षा अलिक हुने खाने परिबारमा प्रायः अक्षरश पालन भएको पाइन्छ। तारापतिको घराना भानुभक्तकै—

"धन् इज्जत् घरवार देख्छु बढ़िया छैनन् कुनै चिज् कमी" भन्ने भनाइले आर्थिक स्थितिमा बलियो रहेछ भन्ने देखिन्छ। यसर्थ यो घरमा दिइएका मसिना काम गर्ने शिक्षा, कजाउन होइन तर अवकाशको समय उपयोग गरी आवश्यक बस्तु जोहो गर्न सकुन् र साथै अल्छे जीवनले आफू पनि नबिग्रिउन् भनी दिइएको देखिन्छ। यो शिक्षा मध्यमवर्गीय परिवारमा मात्र दिन सकिन्छ। किनभने योभन्दा गरीब घरानाका स्त्रीहरूमा यसप्रकारको फुर्सद नै हुँदैन, अनि उनीहरूले प्रायः कोदालो नाम्लोमा नै दिन बिताउनुपर्छ। तारापतिको परिवार यस्तै अवकाश प्रशस्त परिवार

Vedic Archives Digital Preservation Foundation, Chandigarh

थियो। आजका मध्यमवर्गीय परिवारहरू गाउँमा यसै गर्छन् जस्तो 'बधूशिक्षा'-ले भनेको छ। शहरबजारका पनि धागा काँटा लिएर सुइटर मोजा आदि बुन्दै दिन टोल्छन्। तर क्रमशः हिजोआज शिक्षित स्त्रीहरू भने नोकरी चाकरी तथा अन्य व्यवसायमा पनि लाग्न थालेका छन्। अनि आजको युगले स्त्रीको भारी अझ थपिदिएको छ, घटाएको छैन। स्त्रीको आमा हुने बोझा, नानीको पालन-पोषण गर्ने दायित्व र घर सह्माल्ने नारी सुलभ् कुशलताको अनिवार्यतामा केही घटेको छैन अझ हस्पिटल, स्कूल र अन्य यस्तै प्रतिष्ठान वा संस्थान आदिमा डाक्टर, नर्स, शिक्षिका, सेविका इत्यादि भई गरिने सेवा र व्यस्तता, नोकरी चाकरीको व्यग्रता र व्याकुलता आदिले गर्दा झन् भार बढ़ेर गएको छ। नत अघिको नत अहिलेको भार स्त्री कजाउन लादिएको हो। तर अधिकार भरिंदा कर्तव्य चुलिएर यस्तो भएको मात्र हो। यसैले भानुभक्तको शिक्षा पनि केवल कर्तव्याकर्तव्यको स्मरण दिलाउनु थियो। यही कर्तव्यको ज्ञान नहुँदा तारापतिका घर-जहान काम छोड़ी लड्न पुगे। कामको घचारोमा कुटिल विचार र झैंझगड़ा जिउनै पाउँदैन। असल बधू नै असल आमा बन्न सक्छे, असल आमा नै असल सासू बन्न सक्छे, असल सासू नै असल संरक्षिका बन्न सक्छे भन्ने कुरा आज सबैलाई थाहा नै छ। यसरी यहाँ बधूलाई कर्तव्यको शिक्षा दिई भानुभक्तले पनि आफ्नो कर्तव्य पूरा गरे।

अर्को आरोप छ, हाँस्न पनि स्त्रीले हुँदैन भनी अन्याय गरे भन्ने। हाँस्नुको धेरै अर्थ लाग्छ। जस्तै—

मनमा कुत्कुति लाग्नु वा यसबाट खित्का छोड़्नु, खुशी हुनु, रमाउनु, मुस्कुराउनु, ठटेउली गर्नु, श्लिल अश्लिलको साँध नलगाई गरिने गफबाट खित्का छोड़्नु इत्यादि। विशेष 'बधूशिक्षा'-को हाँस्नुले पछिल्ला तीनोटाको अर्थ बोक्छ। किनभने यी तीन प्रकारको अर्थ बोक्ने हाँसोमा भने एक्लै हाँस्न सकिन्न। अघिका चार अर्थ बोक्ने हाँसो भने एक्लै पनि हाँस्न सकिन्छ। तर भानुभक्तले भनेको 'हाँस्नू' एक्लै हाँसिने होइन। अश्लिलको छिटामा खित्किने हाँसो एक्लै निक्लिदैन। विशेषतः यसप्रकारको हाँसो वेश्यालयमा हाँसिन्छ, अनि अरू ठाउँमै हाँसियो भने पनि साथी सँगीसँग हाँसिन्छ, अनि जहाँ चाहिँ प्रायः होश हाँसोकै तरङ्गमा बेहोश भै लड्छ। हाम्रा नाट्यकार श्री बालकृष्ण समज्यूबाट

Vedic Archives Digital Preservation Foundation, Chandigarh

पनि आफ्नो 'प्रह्लाद'-मा "नहाँस कहिल्यै, हाँस्नु सबै बिर्सनु मात्र हो" भनेर हाँसोले भुल्याउँछ भन्ने कुराको पुष्टि गरिएको छ।

"हाँस्नू छैन कदापि नारीहरुले वेश्या हुने हाँस्तछन्" भने तापनि हाँस्ने अवश्य वेश्या नै हुन्छन् भनी भानुभक्तले यहाँ किटेका छैनन्। किनभने उनी भन्छन् "वेश्या तौ नहऊन् तथापि घरको काम् ती सबै नास्तछन्" यसरी वेश्याको डर नभए पनि अलमलको डर अवश्य छ। एक्लै यस्तो हाँसो हाँसिदैन तर साथी संगीसँग हाँस्ता समय बितेको थाहा हुँदैन भनी सतर्क राख्न कवि यसो भन्छन्—

"एक्लै हाँस्नु हुँदैन (हाँसिदैन ?) कोहि नभई अर्को संगी भो जसै
हाँस्तैमा दिन जान्छ एहि रितले सब् काम बित्छन् तसै।"

यसरी यहाँ पनि हाँसोको बुचो लगाई प्रसन्नता मार्न खोजेको नभई हाँसोमा समय र काम नउड़ोस् भनी तर्कशील कविले वेहोशी 'बधू'-लाई सतर्क रहने चेताउनी दिएको मात्र देखिन्छ। 'बधूशिक्षा'-को आधारमा दिइएका आरोपहरू कवि उनकी 'बधू' अनि रचनाकाल र यसको स्थितिलाई एकचोटि सम्झिदिएमा आफैं पनि हराउँछन्। किनभने त्यसबेला यसको यथार्थता बुझ्न सजिलो पर्छ। जब यथार्थता देखापर्छ त्यतिखेर यसका अघि सबैलाई घुँडा टेक्न करलाग्छ। यथार्थताको प्रतिवादमा कुनै शक्ति टिक्न सक्तैन।

यी बाहेक उनले घरमा हुनुपर्ने अरू व्यावहारिक र शिष्टाचारका शिक्षा पनि दिइएका छन्। नोकर-चाकरदेखि लिएर घरका मान्यजन र पाहुनासम्म व्यवहार कस्तो हुनुपर्छ बताइएको छ। नोकर-चाकरमा दया, दुष्टमा कड़ाइ, मान्यमा आदर र अतिथिमा सत्कार गर्नु भनिएको छ। कोही भनोस् नारीले यसो नगरे के गरोस्? कसैले भन्ला यो नारीले मात्र होइन पुरुषले पनि गर्नुपर्छ। अवश्य, घरका सबै सदस्यको यही कर्त्तव्य हुन्छ नत्रता घरको सामान्य स्थितिमा आगो लाग्नेछ। यहाँ पुरुष-शिक्षा भएन; किनभने यो 'बधू'-को झगड़ामा लेखिएको थियो।

यसर्थ आजका आलोचक कुन अर्थमा 'बधूशिक्षा' भन्दा ओंठ लेपार्छन् बुझिँदैन। नारीलाई थिचोमिचो गर्ने र सास्ती दी तहलगाउने

Vedic Archives Digital Preservation Foundation, Chandigarh

अभिप्राय भए कविले पौरख शिक्षा लेखेर तारापतिलाई उचाल्ने थिए अनि स्त्री झगड़ामा घर-जहानका ढाड़-करङ् छामी छामी भाँच्न लगाई सोज्याउने उपदेश दिने थिए। भानुभक्तले झैं रातभरि सुत्न नपाएको आजका कुनै व्यक्ति भए 'बधूशिक्षा' लेख्ने धैर्य र समझ नलिएर लोग्नेलाई पो चुट्ने शिक्षाले सुख्याउने थिए। नचुटे उल्टै लोग्नेलाई हुति नभएको जोइटिङ्ग्रे, नामर्द के के उपाधि जड़ी लछार्ने थिए। तर भानुभक्तले यसो गरेनन्, नत उनले कवि तुलसीदासले झैं—

"ढोल गँवार शूद्र पशु नारी
ये सब ताड़न के अधिकारी"

भनेर पुरुषलाई स्त्री चुट्ने अधिकार नै दिए।

यसरी हामी भानुभक्तलाई धार्मिक शिक्षाको अभाव हटाउने र नैतिक एवं व्यावहारिक शिक्षाले घरमा मेल ल्याउने धर्म-निष्ठ, कर्त्तव्य-परायण र प्रतिभा सम्पन्न धैर्यशाली कवि 'बधूशिक्षा'-मा देख्तछौं। स्त्री स्वतन्त्रताको नेपाली परम्परालाई पनि नभत्काई 'बधूशिक्षा' लेख्न सकेकोमा उनको समझ शक्ति अरू कृतिकोभन्दा झन् बेसी यहाँ चुलिएको देखिन्छ। धन्य छन् कवि समयमा जन्मेर समयको मर्यादामा रही नेपाली नारीलाई समयमै 'बधूशिक्षा' दिएर गए।

---

"The publication of books in Nepali continues apace. The work of the poet Bhanubhakta (1812-68) translator into Nepali of the Ramayana deserves to be better known. A good and complete edition of his works is to be desired."

(Bulletin—School of Oriental Studies, London, Vol. V. No. I, 1928.)

श्री पारसमणि प्रधान सम्पादित "भानुभक्त-ग्रन्थावली"-को "दुइ कुरा"-बाट उद्धृत।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

श्री तुलसी बहादुर छेत्री, दार्जीलिङ—

# भानु-प्रतिभाको उन्मेष

अपारे काव्य संसारे कवि रेक प्रजापतिः।
यथास्मै रोचते विश्वं तथेदं परिवर्त्यते॥

यसरी हामी देख्छौं—कविले जस्तो इच्छा गर्दछन् उस्तै उनको काव्य-संसारको रचना हुनजान्छ। यसमा कवि सृष्टिकर्ता र उनको काव्य सृष्टि। कविको सृष्टि हाम्रो यो सांसारिक सृष्टिभन्दा कुनै अंशमा पनि कम अद्भुत र आश्चर्यजनित छैन। अति विस्मयकर छ यो कविता वा काव्य-जगत। यसको बाहिर अटूट शब्दको धारा बगेको हुन्छ र अर्थ वैचित्र्यको विविध रंग चाल्दै सयौं लहरी उर्लेका हुन्छन्, भित्र घनीभूत कल्पनाको ऐक्यले बिचार-धारालाई सँगाल्दै बगाएको हुन्छ। कवि यस धारालाई बाङ्गो टेढ़ो पार्दै आफ्नो इच्छाअनुसार डोऱ्याउँदै बगाउँछन्—यसमा कवि स्वतन्त्र हुन्छन। कविको आफ्नै स्वतन्त्र एउटा काव्यजगत हुन्छ जसमा कवि एक स्वतन्त्र स्रष्टा झैं देखा पर्दछन्। प्रत्येक कविको आफ-आफ्नै ढंग वा तरिका हुन्छ। यसैले एक अर्काभन्दा बेग्लै हुन्छन। कविमा यसरी हामीले यति बिछिन्न पार्थक्य र नूतनत्व पाउँदछौं। काव्यमा रहेको कविको अन्तर्निहित रहस्यमय शक्तिलाई नै कवि-प्रतिभा भन्न सकिन्छ। भानुभक्तमा रहेको यसै शक्तिको निर्णय गर्ने केही प्रयास यहाँ गरिन्छ।

भानुभक्तीय काव्य-धारामा अन्तर्निहित गतिशीलताको जो प्रमाण पाइन्छ त्यसले यो त स्पष्ट हुनजान्छ कि तिनी कवि थिए—यथार्थमा कवि—तर तिनी कुनै मन्त्रद्रष्टा ऋषि थिएनन्। तिनको अनुभूति र उपलब्धि प्रखर भई खारिएर तिनको रचनामा देखा पर्न गएको छ। वेद वेदान्त उपनिषद् वा लौकिक धर्म र दर्शनले जति नै थिचिए तापनि कविको असल रूप झल्कन गएको छ—उनको रचनामा कवि-स्वभावको दृष्टिकोणले उनको रचना बिचार नगरेसम्म तिनको काव्य-प्रतिभाको यथार्थ रूप-रेखाको आभास धरि पाउन गाह्रो छ। कवि स्वरूपलाई राम्ररी नियालेर नहेरेसम्म कविलाई यथार्थ रूपमा चिन्न सकिन्न। यसरी कवि-लाई चिन्न जाँदा आफ्नो विच्छिन्न र विक्षिप्त विचारको चश्मा लाएर हेरे हुँदैन, पूर्व निर्दिष्ट कुनै संस्कारको मलिन दर्पणमा यस चित्रलाई

Vedic Archives Digital Preservation Foundation, Chandigarh

हेर्नखोजे पनि भूल हुनजानेछ। सजिलोसित कविको काव्य-स्वरूपको अभ्यन्तरमा प्रवेश गर्ने प्रयास नगरी आफ्नै मनःकल्पित तत्व आरोप गरेर हेरे कविप्रति घोर अविचार गरिनेछ।

> "Be sure that you go to the author to get at his meaning, not to find yours." —*Ruskin.*

'रचनाकार वा कविको रचनामा उनकै अर्थ खोज्न जानुपर्छ, आफ्नो होइन!' रस्किनको यस भनाइमा ठूलो सत्य लुकेको छ। भानुभक्त कविलाई पनि चिन्तुपरे उनका फाटफुटे रचनामा चिन्न सकिन्न—ती कवितामा त उनको खण्ड विचार—खण्ड रूप मात्र देखा पर्नगएको हुन्छ। यसैले कविका खण्ड विचार र खण्ड रूपमा समालोचकहरू तर्क गर्छन्—बधूशिक्षा लेखेका हुनाले समाज सुधारक कवि, व्यङ्ग कविता लेखेकाले रसिक वा व्यङ्ग कवि, चाँड़ो कवितामा लेख्न सक्ने हुनाले आशुकवि, आफूमा परिआएको पीर मर्का लेख्न सक्ने हुनाले व्यक्तिवादी कवि, रामायण लेखेका हुनाले भक्तकवि, भुटेको मकै थालमा देख्दा नेपाली ढंगले मूला, मही वा नभए मूलाको सागको चाहना गरेका हुनाले नेपाली स्वादे कवि, नेपाली भाषालाई सँगालेर साहित्यिक ढंगले सबैभन्दा पहिले लेखेका हुनाले आदि-कवि, नेपाली जातिलाई भाषा र विचारको एकतामा बाँधेका हुनाले जातीय कवि...आदि......। यति विघ्न विशेषण लाएर हेर्दा पनि कविको असल र सग्लो रूप देखा पर्नगएको जस्तो मलाई लाग्दैन; केवल एक पाटा मात्र देखा पर्नगएको छ। असल कवि त लुकेकै छ। यो लुकेको कविलाई पैह्लाएर खोजी गरी निकाल्नु बड़ो गाह्रो छ। कवि-प्रतिभामा मात्र यो लुकेको कविको सम्पूर्णरूप कहिले काहीं छर्लङ्ग देखा पर्न जान्छ। यो कवि-प्रतिभा के हो? यो कसरी कविमा देखा पर्नजान्छ? के यस्तो प्रतिभा सबै मानिसमा हुन्छ? आदि प्रश्न उठ्न जानु स्वाभाविक हो। कवि-प्रतिभाको रूप पैह्लाउन निकै गाह्रो छ। यो सबै मानिसमा रहेको एक उच्चस्तरीय मानवी शक्ति हो जो अनुकूल र प्रतिकूल दुवै वातावरणमा फष्टाउन सक्छ, बढ्न र मर्योगिन सक्छ फेरि आफैं सुकेर बिलाएर जान पनि सक्छ अल्पिन पनि सक्छ। साधारणतः कवि-प्रतिभा फष्टाउनलाई दुइ बाह्य कुराले विशेष प्रभाव पार्दछन्—एउटा हो धेरै अघिदेखि आएको अतीत र अर्को हो तात्कालिक वर्तमान। एउटाको प्रभाव निगूढ़ छ अर्कोको छ प्रत्यक्ष वा बाहिरी। अतीतको संस्कार र वर्तमानको बिचार-द्वन्द्वको बीचमा नै यो कविस्वरूप प्रतिष्ठित हुन्छ।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

यसलाई अर्को प्रकारले भन्ने हो भने अतीत र वर्तमानसित कवि-हृदयको द्वन्द्व हुनजान्छ। त्यसको समन्वयमा नै कविस्वरूप स्पष्ट हुनजान्छ। यसरी हामी देख्छौं—केवल अतीतको अनुसरण गर्नु मात्र यस शक्तिको काम होइन, अतीत र वर्तमानको समञ्जसीकरण नै यस शक्तिको मुख्य काम हो।

उदाहरणको निम्ति कवि कालिदासलाई नै लिऊँ। कालिदास कुनै धर्म प्रवर्तक वा धर्म प्रचारक थिएनन् तर साहित्यादर्शको पथ-प्रदर्शक भने थिए। गुप्त कालीन अभ्युदयको समयमा भारतवर्ष भौतिक उन्नतितिर वेगले लम्किरहेको थियो। यसको झलक कालिदासको काव्यधाराको ठाउँ ठाउँमा अवश्य देखा पर्नगएको छ तर तिनको काव्यको आकर्षण कुनै राज्य-विजयको महिमा वर्णनमा थिएन, थियो तपोवनको शान्ति र माधुर्यमा—राजधानीको कृत्रिमतामा थिएन तर थियो प्रकृतिको सौन्दर्यमा। त्यस समयको जीवन-कोलाहलको बीचमा तिनले केवल धर्मानुभूतिको आश्रयमा परित्राण चाहेनन् तर जीवनलाई प्रकृतिको बीचमा प्रतिष्ठित पारेर हेर्न खोजे र यसैमा शान्ति पाए। अझै गहिरिएर विचार गरे त्यस समयको निर्वाण-आश्रित बौद्ध धर्म र आस्तिकवादी वेद धर्मको बीच शिवशक्तिमा अद्वैत दृष्टि फैलाएर एक समन्वय साधन गरेका थिए। साहित्यादर्शको दृष्टिकोणले हेरे प्राचीन वाल्मीकिको सरलता र नव जागरित आलङ्कारिक वाक् भङ्गिको सामञ्जस्य कालिदासको काव्यमा देखा पर्न-गएको छ।

विश्वकवि रवीन्द्रनाथलाई हेरे पनि हामी यसै कुरालाई देख्न पाउँदछौं। भारतीय अतीत भाव-धाराको स्त्रोतले तात्कालिक जीवन प्रतिक्रियाको समन्वयमा नूतन जीवनादर्शको प्रतिष्ठा हुनगएको कुरा नै रवीन्द्र-प्रतिभामा चम्कन गएको छ। जसरी कालिदासको कवि-प्रतिभामा डेढ़ हजार वर्षपछि पनि दुइ विचारको माझबाट भाव धाराको ठूलो मूल फुटेको शक्तिले भारतीय जनमानसलाई आजसम्म पनि आनन्दित र चकित पारिरहेछ यसरी नै रवीन्द्रनाथको काव्य धारामा पनि रहेको त्यही तत्व-नूतनको मूल फुटेको धाराले पुरातन भारतीय सभ्यता र संस्कृतिको नौलो रूप विकासको नवीन स्वादले लाखौं करोड़ौं मानिसको मानसिक तिर्खा मेटाई आनन्द प्रदान गरिरहेछ। कवि-प्रतिभाको यो एक चमत्कारिक रूप हो।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

यसरी युगोचित महान् प्रतिभा बीच पुरातन वा अतीत प्रतिबिम्बित हुनजान्छ र एक नूतनले जन्म लिन्छ; वर्त्तमान चम्कन जान्छ, त्यसको सौन्दर्य-किरणले दसै दिशा रमाइलो बनाउँदछ। पोखरीको शोभा हो स्वच्छ जल। तर हेर्दा हेर्दा त्यसमा कुनै आकर्षण रहन्न। झट्ट एकदिन अघि कहिल्यै नदेखिएको एक स्वच्छ र सुन्दर कमल त्यहाँ देखा पर्दछ—पोखरीको सौन्दर्य चौगुणा बढ्न जान्छ; त्यस पोखरीतिर कहिले पनि फर्केर नहेर्ने मानिसलाई पनि हेरूँ हेरूँ लाग्ने पारिदिन्छ—यस नूतन चमत्कारले। सारा जनसाधारणको ध्यान पनि यतातिर आकर्षित हुनजान्छ। सबै यसलाई मक्ख परी हेर्दछन् र यसको सौन्दर्यको गुणगान गर्दछन्, अरूलाई पनि बोलाई बोलाई यो चमत्कार देखाउँछन्—नूतनको सत्कार र पूजा हुन्छ। यसरी नूतन जन्मन्छ। यो नूतन अतीतको आश्रय लिएर तात्कालिक प्रतिक्रियाले जन्मिए तापनि सुदूर भविष्यतिर यसको दृष्टि फैलिएको हुन्छ। कवि-प्रतिभा यसै कारण कालवाहित भएर पनि कालातिक्रमी हो। यसैले तदानीन्तनतासित यसको विरोध प्रत्यक्ष हुन जान्छ। कवि-प्रतिभा विद्रोह गरी उठ्तछ—फुट्टाउनलाई—यसकारण कवि विद्रोही पनि हुन्।

गुप्त साम्राज्यको पतनपछि र हर्षवर्द्धनको पछि बौद्ध धर्म र संस्कृति नयाँ नयाँ ढाँचा लिई उत्तर-पूर्व भारतमा फैलिन थाल्यो औ नवौं शताब्दीमा शंकराचार्यको अद्वैतवादको स्रोतले दक्षिण भारत ढाकेर नवीन परिवर्त्तन ल्याउन थालिरहेको थियो तर रामानुजाचार्यको विशिष्टाद्वैतको भाव-प्रवाहमा अद्वैतवाद र निर्वाणशून्यता दुवै बगेर सुल्किन थाले। रामानुजाचार्य र रामानन्द सम्प्रदायको मतवादले परवर्ती भारतीय जीवन औ संस्कृतिमाथि ठूलो प्रभाव पारेको छ। आजसम्म पनि यो नयाँ शक्तिको रूप भारतवासीको मनमा प्रभाव पारेकै छ। यस मतवादले विश्व र जीवनलाई अनित्य भनेर अस्वीकार गर्दैन। १२औं शताब्दीदेखि भारतीय साहित्यमा मूलतः यो भावधर्म नै विचित्र प्रकारले प्रकाश पाउन थाल्यो। मध्य भारतमा कबीर, सूरदास, मीराबाई, तुलसीदास र पूर्व भारतमा जयदेव, विद्यापति, चण्डिदास आदिको रचनामा यसै भावनाको प्राधान्य देखिनगयो। यसले गर्दा नाना प्रकारका साहित्यिक प्रतिभाहरू विकसित हुन थाले। त्यस बेला संस्कृत महाकाव्यको महिमा पनि बिस्तार बिस्तार क्षीण हुँदै गइरहेको थियो—मानव-प्रेमको काव्यतिर पनि फर्केर हेर्ने कवि-प्रतिभा फुट्टाउन सकेन। यसको अरू अरू कारणमध्ये एक

Vedic Archives Digital Preservation Foundation, Chandigarh

मुख्य कारण भारतमा मोगल आक्रमण थियो। कठिन कर्मकाण्डमा जेलिएको ब्राह्मण धर्मतिर मानिसहरूको मनमा एक प्रकारको वितृष्णा उत्पन्न भइसकेको थियो। अतः स्वतः एक लौकिक मानव धर्मको भावना मानिसमा जाग्न थाल्यो र भक्तिकालीन साहित्यमा हामी यही कुरा पाउँदछौं। ईश्वरप्रतिको उत्कट प्रेम नै भक्तिमा परिवर्तित हुनजान्छ तर यति मात्रले पनि मानिसहरूलाई पूर्ण शान्ति दिन सकेन यसकारण यसै भक्तिरसको प्रेमधारालाई मानवी प्रेमतिर फर्काउन चाहे घेरैले। कबीरको काव्य साधना यतैतिर अलि ढल्केको पाउँदछौं। तर मानवी प्रेममा स्वार्थ र वासनाको रंगबाट जोगिनु बड़ो मुश्किल छ। मानवी प्रकृतिलाई त्यागी ईश्वर प्रेममा एकैचोटि पुग्न बड़ो गाह्रो छ—कठिन कार्य छ—साधारण सांसारिकहरूको निम्ति त असम्भव नै भने पनि हुन्छ। यसकारण साधु, महात्मा र सन्तहरू जब मानवी वृत्तिलाई नै ग्रहण गरेर ईश्वरको निर्गुण निराकारलाई मानिसकै आकारको बीचमा खोज्न थाले त्यस वेला साधारण मानिसहरू पनि यतातिर आकर्षित भए। रवीन्द्रनाथको काव्य-प्रतिभामा यही भावना 'जीवन देवता'-को रूपमा प्रकाश पाउन गएको छ।

भारतका यी दुइ महान् कवि—कालिदास र रवीन्द्रनाथमा विशेष रूपले त्यस समयको अतीत र वर्तमानले कवि-प्रतिभा फष्टाउनलाई सहायता गरेको हुनाले यहाँ उल्लेख गरियो। यी दुइ कविका भावना र विचारले कवि-प्रतिभालाई कसरी नौलो बाटो लाएर साहित्यमा चमत्कार देखाउन सक्तोरहेछ त्यो कुरा छर्लङ्ग हुन जान्छ औ यिनै दुइ कविमा भारतीय सांस्कृति र सभ्यताले कसरी सन्तुलन पाउन सकेका थिए त्यो पनि स्पष्ट हुनजान्छ। हुनता हिन्दीका प्रसिद्ध कवि गोस्वामी तुलसीदासमा पनि यसै कुराको आरोप गर्न सकिन्छ। उनी रामानन्दको परम्परामा रहेका हुनाले कवि-प्रतिभाले त्यसरी नै फष्टाउने प्रचुर अवकाश पायो। लोक-शिक्षा र मानव-आदर्शको भित्तिमा आफ्नो भक्तिको स्वरूप यति स्पष्ट रूपले आफ्ना रचनामा देखाउन सके कि त्यसबेलाको धार्मिक अव्यवस्थामा पनि यसले पथप्रदर्शकको काम गर्न सक्यो। तुलसी-प्रतिभाको आलोकमा हिन्दी साहित्यले नौलो काँचुली फेर्‍यो।

अब हामी भानुभक्तलाई हेरौं। तिनको जन्म सन् १८१४ मा पश्चिम नेपालको तनहुँ भन्ने ठाउँमा एक कुलीन ब्राह्मण परिवारमा भएको थियो। त्यसबेला नेपालको अवस्था कस्तो थियो, मानिसहरूको

Vedic Archives Digital Preservation Foundation, Chandigarh

मानसिक स्थिति कस्तो थियो त्यो बुझ्न अति आवश्यक छ। वि० सं० १८०१-२६ सम्म श्री पृथ्वीनारायण शाहका वीरता, उत्साह र इच्छाले चिताए जस्तै नेपालको विस्तारो विस्तारो संगठित भइरहेको थियो र आकार पनि बढ़िरहेको थियो। त्यसबेलाका पण्डितहरू संस्कृत भाषा पढ़्दथे, संस्कृत भाषा जान्नाले नै पण्डित भई सम्मानित हुन्थे औ तिनीहरू संस्कृत भाषामा नै कविता रच्दथे, यद्यपि जनसाधारणलाई त्यो व्याख्या गरी सुनाइन्थ्यो—नेपाली भाषामा, पण्डितको तारिफ गरिन्थ्यो नेपाली भाषामा। पण्डितहरू भने नेपाली भाषामा कविता लेख्नु हेय सम्झन्थे। भाषाको यस्तो अवस्था थियो। नेपाली भाषामा त्यसबेला पनि गीत, भयाउरे आदिको चलन जनसाधारणमा थियो तर पण्डितहरूले त्यसलाई हेलाको दृष्टिले नै हेर्दथे औ नेपाली भाषामा पनि कविता लेखिन सकिन्छ भन्ने कुरामा ध्यान दिएकै थिएनन् भन्ने बुझिन्छ। ठूला ठालूको मन बहलाउन भने भोजपुरी र अवधी भाषाको प्रयोग गरेर कविता रचिएको देखिन्छ। बाबुराम आचार्य 'पुराना कवि र कविता'-को पहिलो परिच्छेद—विषय प्रवेशमा भन्नुहुन्छ—"उन्नाइसौं शताब्दीका मध्य भागमा (वि० सं० १८४६) नेपालसर्कार द्वारा जुम्ला रियासत नेपाल राज्यमा मिलाइएको थियो। नेपाली सैनिक त्यहाँ पुग्दा त्यहाँका हर्ता कर्ता चौतारा शोहन शाही भोटतर्फ भागेका थिए। यस बखत एक जुम्लीका मुखबाट निस्केको उद्‌गार उसै समय एक कागतको टुक्रामा यसरी लेखिएको थियो—

"भातु खाय शुभान शाही ताउली हाल्या कुमुला,
जिती आए गोरख्य जनि मार जुम्ला।"

× × ×

कुनै ठूला मानिसका दवाउबाट उनको (ठूलो मानिसको) दील बहलाउनका निमित्त उनले बुझ्ने गरी लेखिदिनुपर्थ्यो भने अवधी वा भोजपुरी बोलीमा लेखिदिन्थे।..............."

इन्दिरस, पं० विद्यारण्य केशरी (वि० सं० १८६३ र १८८४ तिर) लेखेका पद्य गोपीका स्तुति, युगळ गीत, द्रौपदी स्तुति आदि कवितामा पनि हिन्दुस्थानी भाषाको प्रभाव विशेष रूपले पर्न गएको देखिन्छ। यिनीहरूकै समकालीन बसन्त शर्माले भने संस्कृत शब्दलाई बिगारेर नेपाली बनाउने प्रयास गरेका छन्, प्रशस्त नेपाली शब्दको प्रयोग पनि आफ्नो

Vedic Archives Digital Preservation Foundation, Chandigarh

रचनामा गरेका छन् तर बसन्त शर्माको वर्णन-शैली र ठाउँ ठाउँमा आउन गएको विचारको अस्पष्टताले गर्दा कवि-प्रतिभा राम्ररी विकसित हुन नसकेको देखिन्छ। यदुनाथको कृष्ण चरित्र र स्तुति पद्यमा पनि भक्तिरस र देश-भक्तिका केही उद्‌गारहरू पाइन्छन्। यिनमा पनि प्रतिभाको मूल फुट्‌न गएको देखिन्न।

सुगौलीको सन्धिपछि नेपालको राज्यविस्तारको भावनामा एउटा ठूलो आघात मात्र लागेन तर युद्ध पश्चात् सारा नेपाली घर घरमा एक प्रकारको डर, आतंक र आशंका फैलिन गए। फेरि नेपालभित्र पनि वि० सं० १८९४ देखि १९०३ सम्म राजनैतिक परिस्थिति दोलायमान नै थियो। १९०३ मा जङ्गबहादुर राणाको अधिकार जमेपछि नेपालभित्र राजनैतिक स्थिरता आउनगयो। त्यसबेलासम्ममा भानुभक्त सरकारी काममा लागी जागिरे भइसकेका थिए। त्यसभन्दा धेरै अघि अर्थात् वि० सं० १८९५—९६ तिर नै भानुभक्तमा कवि-प्रतिभाको झलक देखिन गएको थियो। भानुभक्तले बाह्र वर्षको उमेरमा नै कविता लेखेका थिए तर त्यसमा कविको कविता गर्ने इच्छा मात्र देखिन्छ—त्यो पद्य मात्र थियो—त्यहाँ कुनै प्रकारको कविता हुने गुण थिएन। तर सत्ताइस वर्षको उमेरमा जब तिनी काठमाण्डौ राजधानीमा आएका थिए त्यसबेला काठमाण्डौदेखि प्राय: दुइ माइल टाढ़ा बालाज्यूमा बिसाउँदा बालाज्यूको प्राकृतिक सौन्दर्य देखी दंग परी बालाज्यू-वर्णनको जो प्रसिद्ध कविता रचना गरे त्यसमा भानु-प्रतिभा स्पष्ट रूपमा हाम्रो अघि देखा पर्नगयो। यो कसैको करकापमा परी लेखिएको कविता होइन, नत कसैलाई खुशी पार्न कसैको स्तुति गरी आफ्नो काम बनाउन नै यो लेखिएको थियो। कवि-प्रतिभा यहाँ स्वत: मूल फुटे झैं भानुभक्तमा देखा पर्नगएको छ। कालिदासको कविताको स्फूरण पनि प्रकृतिको सौन्दर्य प्रभावबाटै भएको बुझिन्छ नभए भारतको त्यस्तो उन्नति र प्रगतिको दिनमा कालिदास किन तपोवनको वर्णन बीच आफ्नो काव्य-प्रतिभामा आफूलाई सम्पूर्ण रूपले अभिव्यक्त गरे। यस प्रसंगमा रवीन्द्रनाथले लेख्नु भएको "The message of the forest" निबन्धमा बड़ो राम्रो आलोचना पाइन्छ—

"When Vikramaditya became king, Ujjayini a great capital, and Kalidasa its poet, the age of India's forest retreats had passed. Then we had taken our stand in the midst of the great concourse of humanity. The Chinese and the Hun, the Scythian and the Persian, the Greek and the Roman had crowded round us. But

Vedic Archives Digital Preservation Foundation, Chandigarh

even in that age of pomp and prosperity the love and reverence with which its poet sang about the hermitage shows what was the dominant ideal that occupied the mind of India, what was the one current of memory that continually flowed through her life."

हुनत कालिदासका काव्यहरूमा ऋतु-संहार, मेघदूत, कुमारसम्भव र शकुन्तलाले कवि रवीन्द्रनाथलाई बिशेष रूपले आकर्षित, र प्रभावित पारेका थिए तैपनि रवीन्द्रनाथको काव्य-प्रतिभा प्रस्फुटित हुनगयो प्रकृति-भावुकता र प्रकृति-सौन्दर्य-विह्वलताबाट। रवीन्द्रनाथले अरण्य जीवनको महिमा-बर्णन यसरी गर्दछन्—

"श्यामल सुन्दर शौम्य हे अरण्य भूमि
मानवको पुरातन वासगृह तिमी"

× × ×

हृदय-प्रेम-भाव-अर्थमा सजीव सबल फेरि अर्को कबिता छ—

"बन जंगल आज व्याकुल विवश
बकुल-बीथिका मुकुल[1]-मत्त कानन माथि
नवकदम्ब मदसुगन्धले गर्दछ आकुल।"

रवीन्द्रनाथको यो प्रकृति-सौन्दर्य रसोपलब्धिका यी मूहूर्तहरूले कवि-लाई असीमतिर आकर्षित पारेका थिए। भन्नुको तात्पर्य के भने प्रकृति-सौन्दर्यले कविको मनमा एक अवर्णनीय स्वर्गीय भावना र अलौकिक कल्पनाको राज्य बसाल्दछ। उनको "शारदोत्सव" र "खेया"-मा यसको प्रशस्त प्रमाण पाइन्छ, "खेया"-को दोस्रो कविता 'घाटेरपथे' (घाटको बाटोमा) कै उदाहरण लिऊँ—वेणुशाखामा पानी परेको झर्झर् आवाज, वारिपारिको कालो छायाँ, अन्धकार सन्ध्यामा कहीं कहीं जुनकिरीको झिल्कासरि बलेको बत्ती र भयाउँकिरी कराएको अद्भुत आवाज—यी सबै परिवेशले कविलाई एक असीमको निम्ति व्याकुल पार्दछ। कालिदासको यौवन-कालमा रचना गरिएको "ऋतु-संहार"-मा प्रकृति मानव-हृदयमा उत्कण्ठा जगाउन सहायक मात्र बन्दछ। "बिक्रमोर्वशी" र "मेघदूत"-मा यही उत्कण्ठा बढ़ेर बिरह-व्याकुलताको रूप लिई हाम्रा सामू देखा पर्न-गएको छ। त्यसपछि "कुमारसम्भव", "रघुवंश" र "शकुन्तला"-मा यही नै बिस्तारो बिस्तारो गम्भीरतम आत्मीय सम्पर्कमा परिणत हुनगएको छ। यी माथिका कुराहरू विचार गर्दा भानुभक्तले बालाज्यूमा लेखेको कविता—

[1] कोपिला, अर्ध-प्रस्फुटित, अर्ध-निमीलित।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

"यति दिनपछि मैले आज बालाजी देख्याँ ।
पृथिवितल भरीमा स्वर्ग हो जानि लेख्याँ ॥
वरिपरि लहराका झूलिबस्न्या चरा छन् ।
मधुर बचन बोली मन् लिंदा क्या सुरा छन् ॥"

भानुभक्तको हृदयमा बालाज्यूको प्राकृतिक सौन्दर्यले कस्तो आकर्षण र प्रभाव पारेको थियो त्यो यहाँ स्पष्टै बुझ्न सकिन्छ । "पृथिवितल भरीमा स्वर्ग हो" भनी लेख्नु नै कविको मनमा पर्न गएको अलौकिक स्वर्गीय आनन्दको एक झलक मात्र थियो । भानुभक्त न त कालिदासको समयमा जन्मेका थिए न त रवीन्द्रनाथको । भारतको बंगालमा रवीन्द्रनाथको समयमा देखा पर्नगएको भावधारा धेरै अघि बढिसकेको थियो । त्यसकारण तिनी प्रकृतिमा असीमको कल्पना गर्न थालेका थिए । नेपाली साहित्यमा पनि परवर्तीकालका हाम्रा लक्ष्मीप्रसाद देवकोटामा यो भावना आउन गएको पाउँदछौं । उनको कविता "गाइन् तिनले घँसिया गीत"-को अन्तिम श्लोकमा—

"प्रकृति उही रंग लिन्छिन् फेरी, युवती बस्छिन् काटी घाँस,
फुल्दछ उनको शिरमा फेरी घूँघट बिचमा लाल गुराँस,
यौवन जलको मधुर छचल्कन लाग्छ मलाई पारावार,
एक धुलोको कण झैं पस्दछु असीमताको सुन्दर द्वार ।"

भानुभक्तको त्यस समयको परिवेश र भावधाराको वातावरण विचार गर्दा कविले माथि लेखेका पंक्तिहरूमा कवि-प्रतिभा खुल्न गएको छ । भानुभक्तको संस्कारमा आएको अतीत र भानुभक्तले पाएको वर्तमानले यस्तै भावना र विचारको आशा राख्दथे । पछिल्ला दुइ पंक्तिले प्राकृतिक सौन्दर्यको वर्णनमा थोरै भनी धेरै कुरा स्पष्ट गर्दछन् यहाँ लहरा र चराको मात्र उल्लेख गरेर बालाज्यूको प्राकृतिक सौन्दर्यको सम्पूर्ण दृश्य पाठकको आँखा अगाड़ि उतार्न कवि समर्थ भएका छन् ।

"याहाँ बसेर कविता यदि गर्न पाऊँ
यस्देखि सोख अरु थोक म के चिताऊँ ?
उस्माथि झन् असल सुन्दरी एक नचाऊँ
खैंचेर इन्द्रकन स्वर्ग यहीं बनाऊँ ॥"

यस्तो रमणीय प्राकृतिक सौन्दर्यले परिपूर्ण स्थानमा बसेर कविता गर्न पाउनु नै कविको निम्ति त्यसबेला यस संसारको सबै भन्दा ठूलो

Vedic Archives Digital Preservation Foundation, Chandigarh

सुख र आनन्द थियो। भानुभक्तले यहाँ मनमा प्रभावित र प्रतिबिम्बित भावनाको सत्य रूप हाम्रो अघाड़ि राखेका छन्। कवि यहाँ सत्यलाई खुला हृदयले अनुभव गर्न चाहन्छन्। कविको यस भनाइमा हामीले अर्को एउटा कुरो याद राख्नुपर्नेछ—त्यो हो कविको अभिलाषा वा उत्कट इच्छा। यहाँ कविले नाउँ चलाउने, कीर्ति फिंजाउने कुनै कुराको इंगित गरेका छैनन्। उनको 'सोख' छ केवल कविता रचना गर्नुमा। कविताको रचना गर्दा आउन गएको इन्द्रियातीत आनन्दको अनुभव गर्न चाहन्छन्—कवि। उनलाई त्यहाँ बसेर कविता रचना गर्न पाउनु नै यस संसारको सबैभन्दा ठूलो कुरा बन्नगएको छ। कविको यस आनन्द-स्रोतको मूल फुट्न गएको थियो—बालाज्यूको प्रकृति-सौन्दर्यबाट। प्रकृतिको यस सत्य सौन्दर्यलाई कवि प्रत्यक्ष गर्न चाहन्छन्—प्रत्यक्ष रूपमा हेर्न चाहन्छन। सत्य सौन्दर्यको मूर्तिलाई कवि साकाररूपमा आफ्नोअघि ल्याउन चाहन्छन्—नचाउन चाहन्छन्। अंग्रेजीका अद्वितीय सौन्दर्यका कवि कीट्सको शक्तिशाली भनाइ—'Beauty is truth, truth is beauty—that is all ye know on earth, all ye need to know' मा रहनगएको अनुभूतिलाई भानुभक्तले पनि यहाँ उपलब्धि गरेको बुझिन्छ। कीट्सको भनाइमा एउटा जोरदार शक्ति छ, तिनको इन्द्रियगत अनुभूति कुनै एउटा स्थिर सौन्दर्यबोधमा अड़िएको छ। भानुभक्तको अनुभूति पनि यस्तै छ, तर भनाइमा भिन्नता आउन गएको छ—त्यो यी दुवै कविले पाएका भिन्न भिन्न अतीत र वर्तमानको प्रभाव हो। यहाँ भानुभक्तको सौन्दर्यबोध इन्द्रियातीत हुनखोजेको छ तर रवीन्द्रनाथको सौन्दर्यबोध झैं अरूप हुनसकेको छैन, भनाइमा पनि त्यस प्रकारको परिमार्जित रूप देखा पर्नगएको छैन किनभने त्यसबेला नेपाली साहित्यको प्रारम्भ काल थियो औ रवीन्द्रनाथले बंगला साहित्यको आधुनिक काल भेट्टाएका थिए। भानुभक्तको यस अनुभूतिले ल्याएको आनन्द कुनै पनि सांसारिक आनन्दभन्दा उच्चकोटिको थिएन भन्न सकिन्न।

भानुभक्तले पाएको अतीतको संस्कार र वर्तमान वातावरणको प्रभावले भानुभक्तलाई स्वर्गको कल्पना गर्न लगाए। स्वर्गका सबै स्वर्गीय दृश्य, सौन्दर्य र ऐश्वर्य यस पृथिवी तलमा—बालाज्यूमा—ल्याउनलाई नै एक सुन्दरी (अप्सरा)-को नृत्यको कल्पना कवि गर्दछन् अनि त्यसलाई सम्पूर्ण पार्न "खँचेर इन्द्र'-लाई पनि त्यहीँ ल्याउन चाहन्छन्। भानुभक्तले कल्पना गरेकी त्यस् सुन्दरीको विचार नगर्नाले कविको आशय अस्पष्ट नै रहन-

Vedic Archives Digital Preservation Foundation, Chandigarh

जानेछ। यहाँ कुनै साधारण सुन्दरीको कुरा गरिएको छैन, इन्द्रको अघि नाच्न सक्ने सुन्दरी अप्सराको कल्पना त्यसबेला कविको मानसपटमा आउनगयो होला जसको स्रोत फुट्न गएको थियो बालाज्यूको प्राकृतिक सौन्दर्यबाट। यसर्थ बालाज्यूको यही प्रकृति-सुन्दरी नै त्यसबेला कविको आँखा सामु नाच्न थाल्नु कुनै असम्भव देखिन्न। यस्तो रसानुभूतिको अवस्थामा नैसर्गिक भावना शान्त रसमा परिणत हुनजान्छ। रवीन्द्रनाथ आफ्नो 'सुख' शीर्षक कवितामा भन्दछन्—

"आज बहिरहेछ
हृदयमा मेरो शान्ति धारा; मनमा लागिरहेछ
सुख अति सहज सरल, काननमा
प्रस्फुटित पुष्पसरि"

अथवा, अंग्रेजी कवि वर्डस्वर्थको मानसिक अवस्थाको वर्णन तिनको 'Prelude' काव्यका विख्यात पंक्तिहरूमा प्रकृति-प्रेम सम्पर्कमा पाइन्छ।

"..............that blessed mood,
In which the burthen of the mystery,
In which the heavy and weary weight,
Of all this unintelligible world,
Is lightened : —that serene and blessed mood,
In which the affections gently lead us on,—
Until the breath of this corporeal frame
And even the motion of our human blood
Almost suspended, we are laid asleep
In body, and become a living soul :"

प्रकृति-प्रेमले कविको मनमा ल्याएको अनुभूतिको र मानसिक अवस्थाको वर्णनमा कवि सफल भएका छन्। यो एक शाश्वत अनुभूति हो जो जुनसुकै समय र स्थानमा पनि मानिसको चित्तमा देखा पर्नजान्छ। यो एक अलौकिक अवस्था हो जसमा उच्च-स्तरीय मानव-भावनाले कवि प्रतिभाको उन्मेष गर्दछ। मानिसमा भएको कविलाई झक्झकाएर ब्युझाउँछ। हाम्रा कवि भानुको प्रतिभा पनि यस्तै अवस्थामा उत्पन्न हुनगएको थियो यसमा सन्देह गर्न कुनै ठाउँ छैन।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

श्रीमती लक्खी देवी सुन्दास, दार्जीलिङ—

# दार्जीलिङको नेपाली जीवन र भानुभक्त

प्रतिवर्ष बड़ो धूमधामसित मनाइने 'भानु-जयन्ती' दार्जीलिङको नेपाली जन-जीबनमा एउटा महत्वपूर्ण स्थान ओगट्दछ। भारतको उत्तर-पूर्व हिमाली पर्यटक स्थल, यहाँ वर्षेनी हजारौं मानिसहरू घुमफिर गर्न आउँदछन्—उनीहरूलाई समेत भानु-जयन्तीको विशेष आयोजनले नेपाली-हरूको आफ्नै साहित्य परम्परा रहेछ भन्ने बोध पनि गराउँदछ। २९ गते आषाढ़, भानुभक्तको जन्म-जयन्ती यत्ति हर्ष र उल्लाससाथ मनाइन्छ कि बाहिरबाट आउनेहरूलाई यो नेपालीहरूको पर्व नै हो कि भन्ने भ्रममा पार्दछ। त्यस दिन स्थानीय स्कूल, कालेजहरूमा बिदा घोषित हुँदछ र स्थानीय सरकारी कार्यालय र अड्डाहरूमा समेत अर्ध-बिदा हुनाले त्यस दिनको महत्वलाई अझ वैशिष्ट्य थप्दछ। चौरस्ताको भानुभक्तको सालिगमा धूप-बत्ती, पुष्पहार र विशेष आयोजना देख्दा कतिपय अंग्रेजहरूले प्रश्न गरेथे, "के भानुभक्त ईश्वरका प्रतीक वा दूत हुन्?" यहाँ प्रश्न उठ्छ, भानुभक्त दार्जीलिङको जन-जीवनमा यत्तिका भक्ति र श्रद्धाका पात्र किन? भानुभक्तले यहाँका जन-जीवनमा पारेको परोक्ष प्रभावलाई नै यहाँ केही आलोचना गरिन्छ।

आजका नेपाली साहित्यका अध्येता, साहित्य प्रेमी, साहित्यका विद्यार्थीहरूलाई थाहा भइसकेको कुरो हो कि भानुभक्तभन्दा धेरै अघि, अरू जेठा कबिहरू देखा परिसकेका थिए। दार्जीलिङको विगत परिस्थितिको अवलोकन गर्दा हामी चाल पाउँछौं—दार्जीलिङको नेपाली समाजलाई चाहिएथ्यो एउटा प्रतीक जसलाई उनीहरू श्रद्धा र भक्ति दिई अन्य समाजअघि अभ्याउन सक्थे। दार्जीलिङको त्यस समयको रैथाने प्रवासी जीवन जहाँ संघर्ष थियो—र थियो विकराल रूपमा उभिएको हात र मुख जुटाउने समस्या। त्यस्ता परिस्थितिमा न ता साहित्यप्रति केही चासो नै थियो न साहित्यिकहरूप्रति आस्था। साहित्यमा चाहिन्छ कम्युनिक्याबिलिटी ( Communicability ) जसलाई साधारणीकरण भनिन्छ —सोही हृदयको दैलो उघार्ने भाषा भानुभक्तमा पाइएको, त्यही भाषा जो तिनीहरू स्वयं बोल्थे, र छर-छिमेकमा बोलिन्थ्यो—सुललित र सुमधुर भाषा पाए भानुभक्तीय रामायणमा। यत्ति मात्र नभएर—रामायण समग्र भारतको धार्मिक ग्रन्थ—राम र सीता ईश्वरका प्रतीक हुन गएको थियो।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

कृतिवासले बंगाली जातिलाई र तुलसीदासले हिन्दी भाषीलाई रामायण दिइसकेथे। नेपालीहरूले पनि भानुभक्तका रामायणमा राम र सीताको आदर्श पाए—यसमा केही सन्देह छैन, तर भानुभक्तलाई नेपाली बीच ल्याउनमा उनको सरल कविता र प्रष्ट भनाइले नै विशिष्ट स्थान ओगटेको छ।

तिनताक दार्जीलिङमा बाइबलको भाषा नै प्रचलित भएको थियो तापनि त्यसले साधारण जनताको हृदय छुन सकेन। दार्जीलिङमा भानुभक्तको रामायणको प्रचार हुनअघि यहाँ महाभारत, कृष्णचरित्र, आदि देखाह परिसकेको थियो। तर ती ग्रन्थहरू एकतिर थिए—नेपाली समाज अर्कातिर। त्यहाँ नेपालीको भावना र आत्मा बोल्दैनथ्यो, त्यहाँको संस्कृत, हिन्दी, भोजपुरी र फारसी शब्द बाहुल्यका बीच नेपाली शब्दहरू छरितो ओंठीलाई साह्रै नसुहाउने ठूला ईंटहरू जस्ता मात्र देखिन्थे। नेपाली जीवनको त्यस मरुतुल्य परिस्थितिमा भानुभक्तीय रामायण देखापर्‍यो मरुद्यानको रूपमा। भानुभक्तको रामायणको भाषा थियो—नेपाली समाजको भाषा। त्यस भाषामा न ता अलंकार र उपमाहरूले गह्रौं तुल्याएथ्यो, न ता विद्वताको प्रदर्शनीमा अन्य भाषाको प्रयोग नै थियो, न ता मूल भावलाई शाब्दिक जालले छोपेर लुकाउने प्रयास गरिएको थियो। दार्जीलिङ समाजको तत्कालीन नेपालीको कुल्ली, मजदूर, ज्यामी, बढ़ी भन्दा बढ़ी भएमा सरदार-बैदार र यदाकदा शिक्षकहरू—तर तिनका हृदयमा साहित्यको नवरस चखाउने गर्‍यो भानुभक्तका रामायणले। यतिमात्र नभएर तिनले भानुभक्तलाई औंलाउन सके आफ्ना प्रतीकरूपमा, भानुभक्तप्रति गर्व गर्न सके—अनेपाली समाजलाई हाम्रा भानुभक्त छन् भन्न सके, भानुभक्तको रामायणका भाषा नै हाम्रो साहित्यको आधुनिक रूप हो—भानुभक्त नै हाम्रा आदिकवि हुन् भन्न सके।

केही वर्ष अघिसम्म मात्र नेपाली भाषालाई यसै दार्जीलिङ जिल्ला अन्तर्गत, "कुल्लीको भाषा" भनी हियाएको दृष्टिकोणले हेरिन्थ्यो। १६१५ सम्म यहाँ अंग्रेजी र हिन्दी माध्यमद्वारा पढ़ाइन्थ्यो। तर त्यस समयसम्म भानुभक्तको रामायणले प्रेरित र प्रभावित भएका यहाँका नेपाली युवा मण्डली र भाषा प्रेमीहरू निकै नै जागरुक भइसकेथे। घरमा बोलिने एउटा भाषा र शिक्षा माध्यमको भाषा अर्को यो स्वीकार्य हुनै सक्तैनथ्यो। अतः यहाँका नेपाली भाषा-प्रेमीहरूको प्रयासले १६१६ मा कलकत्ता विश्वविद्यालयले नेपाली भाषालाई मान्यता दिएकोले

Vedic Archives Digital Preservation Foundation, Chandigarh

नेपाली भाषा पनि दोस्रो भाषाको रूपमा यहाँ पढ़ाइन थालियो। त्यस समय नेपाली साहित्यको पनि उन्नति हुनुपर्छ भन्ने उद्देश्यले हाम्रा तत्कालीन साहित्यिकहरू जुर्मुराएर उठे। फलस्वरूप १९१८ मा श्री पारस मणि प्रधानद्वारा सम्पादित "चन्द्रिका" पत्रिका यस जिल्लामा देखा पर्‍यो।

सन् १९२४ सम्म दार्जीलिङमा शिक्षाको धेरै नै उन्नति हुनगो। नेपाली भाषा र साहित्यको उन्नतितर्फ यहाँका साहित्य प्रेमीहरू लागे। "स्वतन्त्र जातित्वको एउटा प्रधान चिह्न स्वतन्त्र भाषा हो—नेपालीहरूले पनि आफ्नो जातित्व सुदृढ़ गराउनु हो भने आफ्नो स्वतन्त्र साहित्यको निर्माण गर्नु आवश्यक छ" भन्ने उद्देश्यले १९२४ साल, २५ मईमा, 'नेपाली साहित्य सम्मेलन'-को दार्जीलिङमा स्थापना भयो। दार्जीलिङको साहित्यिक वातावरण उपस्थित गर्ने र साहित्यप्रति जनताको अभिरुची बढ़ाउन, सर्वश्री हरिप्रसाद प्रधान, सूर्य विक्रम ज्ञवाली, पं० धरणीधर शर्मा, पारस मणि प्रधान, हनजित देवान, खड्गसिंह विष्ट, पदमप्रसाद प्रधान र रूपनारायण सिंहका नाम उल्लेख नगरे हामी अकृतज्ञ हुनेछौं। प्रथम युद्धमा वीरत्व प्राप्त गरे तापनि यहाँको समाजमा नेपालीहरू "कुल्ली नेपाली" थिए। कुल्लीको भाषा भन्दा भन्दै पनि यहाँ साहित्य जन्म्यो, भानुभक्त चिह्नाए, एउटा साहित्यिक परम्परा चिह्नाउन अघिसरा भए। नेपाली साहित्य सम्मेलनबाट तत्कालीन कुनै साहित्यिक कृति र पाठ्य पुस्तकहरू प्रकाशित भएन—तर पाठ्य पुस्तक तयार गर्ने लेखक र प्रकाशकहरूसित लेखापढ़ी गर्‍यो—प्रकाशकहरू चिह्नायो। साहित्य सम्मेलन स्थापना भएको तीन वर्ष भित्र १९२७ मा श्री सूर्य विक्रम ज्ञवालीद्वारा मोतीराम भट्ट कृत भानुभक्तको जीवन चरित्र सम्पादन गरी प्रकाशित भयो। राम जीवनीका नेपाली काव्यकार नेपाली जनता समक्ष आयो। श्री पारस मणिज्यूका परिश्रमले नेपाली पाठ्य पुस्तकहरू धेरै नै प्रकाशमा आइसकेथे। पं० धरणीधर शर्माज्यूले आफ्नो कविताद्वारा नेपाली बीच साहित्य प्रेम, अझ गाढ़ा रूपमा चिह्नाउन सफल भए। साहित्य सम्मेलन-बाट १९३८ मा प्रकाशित 'कथा-कुसुम' नेपाली साहित्य जगतमा पहिलो कथा संग्रह थियो। ज्ञवालीज्यूका अथक परिश्रमद्वारा हामीलाई भानुभक्त चिह्नाउनुभो—नेपाली वीर र हाम्रा प्राचीन परम्परा र ऐतिहासिक गाथाहरू चिह्नाउनुभो। जुन प्रतीक र प्राचीन परम्पराको निम्ति भौंतारिइरहेको नेपालीहरूले आफ्ना वीरहरू चिन्नसके—अरूलाई भन्नसके, चिह्नाउनसके।

[ बाँकी पृष्ठ १९५ मा।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

प्रो० सुश्री सूर्यकला थापा, दार्जीलिङ—

# भानुभक्त औ नेपाली साहित्य र समाज

साहित्यकारलाई हामी केवल कल्पना विलासी मात्र भन्न सक्दैनौं। उत्तम साहित्यिकको साहित्य सृष्टिले सम्पूर्ण समाजलाई चेतनशील बनाइदिन-सक्छ। भानुभक्तले त्यस्तै चेतनाको प्राण नेपाली संसारमा संचारित गरेर गए। आजको नेपालीको यो विकसित रूप, विकसित भाषा यस कथन-को साक्षी छन्। तिनी उच्च मात्र होइनन् तर एक श्रेष्ठतम साहित्यिक थिए। तिनका प्रत्येक कृतिको लक्ष्य-बिन्दु समाजको कल्याणमा गएर टुंगिएको छ। मनुष्यताको भलाइको साधन गर्ने तिनको ध्येय थियो। दीर्घकालदेखि ज्ञानको आलोकदेखि वंचित ती अकारण अपमानित नर-कंकालहरूको उद्धार गर्न तिनी चाहन्थे। ती उपेक्षित जनतालाई मनुष्यताको उच्चस्थरको आसनमा बसाउने भानुभक्तको विचार थियो। भाषाको साधना केवल निमित्त मात्र थियो—कुनै लक्ष्यको एक माध्यम मात्रै। रामायणको प्रथम पंक्तिः—एक् दिन् नारद सत्य लोक् पुगिगया, लोक्को गरूँ हित् भनी।"

---

[ पृष्ठ १९४ को बाँकी ]

हाम्रा वीरहरू औ साहित्यिकहरू स्पष्ट रूपले अघि आए। दार्जीलिङमा भानुभक्त र भानु-साहित्य मात्र पर्याप्त भएन—यहाँ ता अनेपाली बाहिरका-हरूलाई स्पष्टरूपले देखाउनु र बताउनुपर्थ्यो, अतः विदेशीहरूले समेत नेपालीहरूको आफ्ना आदिकवि चिन्न सकून् भन्ने उद्देश्यले १७ जून, १९४६ मा दार्जीलिङ चौरस्तामा सर्वप्रथम भानुभक्तको सालिग राखियो। जुन ठाउँमा नेपालीहरूलाई कुल्ली र नेपाली भाषालाई कुल्लीको भाषा भनिन्थ्यो सोही ठाउँमा अनेपाली विद्वान्हरूले भानुभक्तलाई विश्वमानव, विश्वकवि र महामानव संज्ञाले विभूषित गरे। श्री सूर्य विक्रम ज्ञवालीद्वारा सम्पादित भानुभक्तीय रामायणमा तत्कालीन बंगालका गर्वनर हरेन्द्रनाथ मुखोपाध्याय र तत्कालीन उत्तर प्रदेशका गर्वनर श्री के० एम० मुन्शीज्यूले भूमिका र छोटो परिचय लेख्नु भएथ्यो। यसरी भानुभक्तलाई अनेपाली जगतमा चिह्नाउने काम भयो। यसको सम्पूर्ण श्रेय श्री सूर्य विक्रम ज्ञवाली र नेपाली साहित्य सम्मेलनका कार्यकर्ता र साहित्य-प्रेमीहरूलाई नदिई सकिन्न। भानुभक्तको 'इमेज' यत्ति गाढ़ा रङ्गमा यहाँ आएको छ कि त्यही हाम्रो सहित्यिक जीवनको अभिन्न अङ्ग र हाम्रो प्रतीक भएको छ।

---

Vedic Archives Digital Preservation Foundation, Chandigarh

—यस वाक्यको कर्त्ता नारद छन् तर गौण रूपमा भानुभक्त नै असल हुन्। वाणी नारदको भए तापनि भावना भानुभक्तको नै छ। यसबाट यो थाहा लाग्दछ कि तिनको चरम लक्ष्य जनसाधारणको कल्याण एवं तिनीहरूको जीवन निर्माण थियो। यसैको निम्ति तिनले साहित्यको सेवा गरे। यदि तिनले नलेख्दा हुन् ता आजको नेपाली "राम"-देखि वञ्चित हुने थिए। हाम्रो भक्तिको स्रोत, आध्यात्मिक चेतनाले प्रवाह नै शायद अर्कै हुने थियो कि! तर भानुभक्तले यो हुन दिएनन्। यस प्रकारले हामी भानुभक्तलाई निःसन्देह उच्चस्तरका समाज-सुधारक तथा ईश्वर भक्तका रूपमा ग्रहण गर्न सक्छौं।

कवित्व शक्ति भानुभक्तमा यथेष्ट थियो। शब्दहरूका हिसाब किताबले बुनाइ, कताइले तिनले जुन सूत्रहरूका निर्माण गरे, ती सूत्रहरूले रामायण, रामगीता, प्रश्नोत्तर, भक्तमाला इत्यादि झैं, स्वच्छ औ सुन्दर परिधानको सृष्टि गर्‍यो। भाव, कल्पना, बुद्धि एवं शैलीमा पनि न्यूनता कहीं छैन। शब्दहरू भावनाको पछाड़ि पछाड़ि दगुरिरहेका छन्। शब्द-हरूका चयन अत्यन्त सरल, सुबोध औ जनसाधारण उपयोगी भएकोले तिनी जनताका प्रिय पात्र बन्न गएका छन्। तिनका कवितामा समाजका पुराना बिचार र भाषाको पुरानो रूप पाइने हुनाले तिनी विशेष आदरणीय भएका छन्। तिनको लोकप्रियताले नै तिनको प्रौढ़ता औ साहित्यिकता-को परिचय दिन्छ। तिनको भाषा सरल छ, शक्तिशाली साथै कर्णप्रिय औ मधुर छन्। यसरी साहित्यको ओज, प्रसाद औ माधुर्यले तिनको भाव औ भाषा, छन्द औ तालको सूरमा साहित्य मन्दाकिनी झैं बहेको छ। लोकप्रियताको दृष्टिमा भानुभक्त अरू जम्मै कविभन्दा प्रथम स्थानमा छन् भन्नु केही गाहारो पर्दैन। तिनमा सम्पूर्णता आफ्नै छ, लालित्य आफ्नै। यस्ता विलक्षण व्यक्तित्व भएका भानुभक्त वास्तवमा आफ्ना समयका एक महान् कलाकार एवं प्रतिनिधि कवि थिए।

विचारको मौलिकताको कमी भानुभक्तमा छैन। यसको साक्षी संस्कृत भाषामा लेखिएको रामायण भानुभक्तका रामायणको तुलनात्मक आलोचनाले दिनेछ। जीवनका कतिपय सूक्ष्मतम दशा एवं परिस्थितिहरू-का ज्ञान औ यसको व्यक्तिकरण भानुभक्तले अनुपम ढंगमा गरेका छन्। निश्चय नै बाल्मीकिले उपियाँ औ उडुसको मज्जा लिन सकेका थिएनन्। भानुभक्तमा यी सबको रसास्वादन गर्ने प्रतिभा थियो। यस्ता अनेक अनुपम प्रसंगहरूको उदाहरण हामी निम्न पंक्तिहरूबाट लिन सक्छौं।

Vedic Archives Digital Preservation Foundation, Chandigarh

लंकामा सीताजीको वर्णन गर्दै लेख्नुहुन्छः—

"भोकी मैलि निन्याउरी न त कपाल् कोरचाकि सब् केश् उसै।
लट्टा मात्र गरचाकि खालि भुमिमा रूँदै बस्याकी यसै॥"

अथवा तिनको क्रोधको वर्णन यसरी गर्नुहुन्छः—

"लाल् लाल् नेत्र गराइ पूर्ण रिसले बोलिन् सिताजी तसै।"—यसरी भानुभक्त अति सूक्ष्म अथवा बृहत् मनोवैज्ञानिक दशाको चित्रण गर्नमा पनि निपुण थिए भन्ने अनुमान लाउन सकिन्छ।

आफ्ना योग्यताका यिनै विशेषताहरूका कारणले भानुभक्तले नेपाली साहित्यमा विशेष स्थान पाएका छन्। तिनले लेख्नुभएका साहित्यरत्न-हरूको आभा युग युगसम्म क्षीण हुन सक्नेछैन। हुनता तिनीअघिका लेखकहरूले अथवा केही समकालीन कविहरूले पनि केही दान ता दिए तर भानुभक्त साहित्याकाशका नक्षत्र मात्र नभएर त्यो मेघ समान थिए जसको जलराशिले साहित्य-उपवनलाई हरियो-भरिलो बनाएर ल्यायो। हाम्रो साहित्यको इतिहासले यही भन्छ।

किन्तु इतिहासलाई फर्केर हेरेर मात्र हुन्न—इतिहास बनाउनुपर्छ। हाम्रो साहित्यलाई अझ उन्नत औ विस्तृत बनाउनुपरेको छ। आज हामीलाई यस्तो साहित्यको खाँचो छ जसले हाम्रो जातिलाई तेजीदीप्त बनाउनेछ। यसको निम्ति प्रथमतः हामीलाई क्षमताको प्रयोजन छ, त्यस-पछि आउँछ तप, साधना औ विशेष दानको आवश्यकता। व्याकरण औ भाषाशास्त्रको बलमा मात्र साहित्यको निर्माण गर्न सकिन्न, न ता शब्द-कोषका शब्दहरूका अनुपातमा नै यसको जग बसाल्न सकिन्छ। शब्द-हरूका हिसाब किताबले मात्र दाताको उपाधि वा साहित्यिकको उपाधि पाइन्न। हाम्रो साहित्य तब मात्र उच्च हुन सक्छ जब साहित्यिकहरू स्वयं उच्च स्तरका हुन्छन्। दाता महान् हुनाले मात्र दान पनि महान् हुन सक्छ।

[ 'जनदूत' वर्ष ४ अङ्क ५ बाट। ]

Vedic Archives Digital Preservation Foundation, Chandigarh

# हामीलाई थाहा भएका कवि भानुभक्त रचित र भानु-सम्बन्धमा लिखित पुस्तकहरूको सूची

१। भानुभक्तकृत भाषा रामायण—भारतजीवन प्रेस, काशी (संवत् १९४४)
२। ऐ रामायण बालकाण्ड ऐ (सन् १८८८)
३। भानुभक्तकृत रामायण किष्किन्धाकाण्ड ऐ (सन् १८९४)
४। भानुभक्तकृत रामायण उत्तरकाण्ड ऐ (सन् १९०१)
५। रामायण सातकाण्ड—सुब्बा होमनाथ केदारनाथ (सन् १९२२)
६। ऐ पाशुपत यन्त्रालय, नेपाल (सन् १८९४)
७। ऐ गोरखा ग्रन्थप्रचारक मण्डली, बम्बई (सन् १९१०)
८। (१) भानुभक्तको रामायण—श्री सूर्य विक्रम ज्ञवाली सम्पादित, गोरखनाथ एण्ड कम्पनी, कलकत्ता (संवत् १९८९)
(२) ऐ ऐ (दोस्रो संस्करण) ने० सा० स०, दार्जीलिङ (सन्१९५४)
९। भानुभक्त मणिमाला—श्रीमती विष्णुमाया देवी, नेपाल (संबत् १९९८)
१०। प्रश्नोत्तरमाला—काशी, काठमाडौं, मणि प्रिण्टिङ प्रेस, दार्जीलिङ (अनेक संस्करण)
११। भक्तमाला—काशी, काठमाडौं, मणि प्रिण्टिङ प्रेस, दार्जीलिङ (अनेक संस्करण)
१२। भानुभक्तको जीवन चरित्र—पं० मोतीराम भट्ट लिखित—काशी, ने० सा० स०, दार्जीलिङ (अनेक संस्करण)
१३। भानुभक्त-स्मारक ग्रन्थ—ने० सा० स०, दार्जीलिङ (सं० १९९७)
१४। बधुशिक्षा—काशी, काठमाडौं, ने० सा० स०, दार्जीलिङ (अनेक संस्करण)
१५। भानुभक्तीय सुन्दरकाण्ड रामायण—मणि प्रिण्टिङ प्रेस, दार्जीलिङ (सन् १९५०), काशी, कलकत्ता, काठमाडौं (अनेक संस्करण)
१६। भानुभक्त-ग्रन्थावली (भानुभक्तको सम्पूर्ण रचना)—श्री पारसमणि प्रधान सम्पादित, मणि प्रिण्टिङ प्रेस, दार्जीलिङ (सन् १९५२)
१७। भानुभक्त—एक समीक्षा—श्री हृदयचन्द्रसिंह प्रधान, नेपाल आदर्श हाइ स्कूल, इन्द्रचोक, नेपाल (सं० २०१३)
१८। आदिकवि भानुभक्त आचार्य—श्री भाइचन्द प्रधान, कालिम्पोङ (सन् १९५२)
१९। भानुभक्तको सच्चा जीवन चरित्र—पं० नरनाथ शर्मा, नेपाल (सं० २०१७)
२०। भक्त-भानुभक्त—श्री बालकृष्ण सम, ने० सा० स०, दार्जीलिङ (सं० २०१०)
२१। भानुभक्त—श्री बालचन्द्र शर्मा, ने० सा० स०, दार्जीलिङ (सं० २०१४)
२२। कवि भानुभक्त—श्री ब्रह्म संशेर जं० ब० रा० (सं० १९९५)
२३। वधु-शिक्षा र वर-शिक्षा—श्री भीमनिधि तिवारी (सं० २०१२)
२४। भानुको सम्झना—श्री नारायणदत्त शास्त्री (सं० २०१७)।

[ 'भारती'-बाट। ]

Vedic Archives Digital Preservation Foundation, Chandigarh

